# मुलुकी ऐन

*(मिति २०७४ साल पुष मसान्तसम्म भएका संशोधन समेत मिलाइएको)*




नेपाल सरकार

## कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय

सिंहदरबार



---

नोटः केही नेपाल कानूनलाई संशोधन, एकीकरण, समायोजन र खारेज गर्ने ऐन, २०७४ संवत् २०७५ भदौ १ बाट प्रारम्भ भएपछि यो ऐन खारेज हुने ।

# मुलुकी ऐन

| संशोधन गर्ने ऐन | लालमोहर र प्रकाशन मिति |
|---|---|
| | २०१९।१२।३० |
| १. मुलुकी (पहिलो संशोधन) ऐन, २०२१ | २०२१।६।१७ |
| २. करार सम्बन्धी ऐन, २०२३ | २०२३।६।९ |
| ३. मुलुकी (दोस्रो संशोधन) ऐन, २०२४ | २०२४।६।११ |
| ४. मुलुकी (तेस्रो संशोधन) ऐन, २०२५ | २०२५।७।९ |
| ५. मुलुकी (चौथो संशोधन) ऐन, २०२७ | २०२७।५।१० |
| ६. मुलुकी (पाँचौं संशोधन) ऐन, २०३१ | २०३१।६।२० |
| ७. प्रमाण ऐन, २०३१ | २०३१।७।५ |
| ८. मुलुकी (छैठौं संशोधन) ऐन, २०३३ | २०३३।४।२८ |
| ९. मुलुकी (सातौं संशोधन) ऐन, २०३४ | २०३४।९।२७ |
| १०. मुलुकी (आठौं संशोधन) ऐन, २०४२ | २०४२।६।२३ |
| ११. मुलुकी (नवौं संशोधन) ऐन, २०४३ | २०४३।७।२४ |
| १२. केही नेपाल कानून खारिज गर्ने ऐन, २०४७ | २०४७।३।२८ |
| १३. अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ | २०४७।४।१० |
| १४. केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ | २०४९।१।८ |
| १५. बालबालिका सम्बन्धी ऐन, २०४८ | २०४९।२।७ |
| १६. मुलुकी (दशौं संशोधन) ऐन, २०५० | २०५०।९।५ |
| १७. केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ | २०५५।१०।७ |
| १८. पशु वधशाला र मासु जाँच ऐन, २०५५ | २०५५।१२।८ |
| १९. दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ | २०५६।१।१६ |
| २०. करार ऐन, २०५६ | २०५७।३।१४ |
| २१. अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ | २०५९।५।२७ |
| २२. मुलुकी (एघारौं संशोधन) ऐन, २०५८ | २०५९।६।१० |
| | प्रमाणीकरण र प्रकाशन मिति |
| २३. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ | २०६३।६।२८ |
| २४. लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ | २०६३।७।१७ |
| २५. मुलुकी (बाह्रौं संशोधन) ऐन, २०६४ | २०६४।८।१४ |
| ❋२६. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ | २०६६।१०।७ |
| २७. जातिय भेदभाव तथा छुवाछुत (कसूर र सजाय) ऐन, २०६८ | २०६८।२।१८ |
| २८. बोक्सीको आरोप (कसूर र सजाय) ऐन, २०७२ | २०७२।४।१८ |
| २९. लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ | २०७२।६।१४ |
| ३०. केही नेपाल कानून संशोधन तथा खारेज गर्ने ऐन, २०७२ | २०७२।६।१४ |
| ३१. केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०७२ | २०७२।११।१३ |

## २०१९ सालको ऐन नं. ६७

[⁾]....................

---

❋ यो ऐन २०६५।२।१५ देखि लागू भएको ।

⁾ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

# प्रस्तावना

शास्त्रबाट मात्र कालका प्रभावले सबै व्यवहार चल्न नसक्दा छोटा बडा सबैलाई कसूर अनुसार एकै सजाय होस् घटी बढी नपरोस् भन्ना निमित्त हाम्रा महान् पूर्वज तत्कालिन श्री ५ बाट उसबखतका प्राइममिनिष्टरलाई हुकुम बक्सँदा बनी तयार भई संवत् १९१० साल पौष बदि ७ रोजका दिनदेखि चली आइरहेको मुलुकी ऐनमा देश काल परिस्थिति अनुसार बेला बेलामा थपघट संशोधन हुँदै आएको सबै एकत्रित गरी मिलाई वर्तमान राजनैतिक आर्थिक र सामाजिक व्यवस्थाको विचारबाट आवश्यक देखिएको अरु पनि संशोधन गरी नेपाल ...........मा चिरकालसम्म शान्ति र व्यवस्था कायम राख्ने र विभिन्न वर्ग, जात, जाति र क्षेत्रका जनताको सुसम्बन्ध बनाई राख्ने समेतको महान् उद्देश्यले हामी श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाई जारी गरिबक्सेका छौं ।

# भाग १

## प्रारम्भिक कथनको

१ नं. ॥ ॥ यस ऐनलाई "मुलुकी ऐन" भनिनेछ ।

२ नं. ॥ ॥ यो मुलुकी ऐन नेपाल ............ भर संवत् २०२० साल भाद्र १ गतेदेखि प्रारम्भ हुनेछ ।

३ नं. ॥ ॥ विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यो मुलुकी ऐनमा-

▶(क) "नेपाल" भन्नाले नेपाल राज्य सम्झनु पर्छ,

(ख) "कानून" भन्नाले तत्काल प्रचलित नेपाल कानून सम्झनु पर्छ,

(ग) "अड्डा" भन्नाले अदालत समेत सम्झनु पर्छ,

(घ) "हाकिम" भन्नाले न्यायाधीश समेत सम्झनु पर्छ, र

(ङ) "नालिस" भन्नाले उजूर समेत सम्झनु पर्छ र सो शब्दले फौजदारी मुद्दामा प्रहरी प्रतिवेदनलाई समेत जनाउँछ ।

४ नं. ॥ ॥ विषय विषयमा छुट्टा छुट्टै बनेका कानूनमा लेखिए जतिमा सोही कानून बमोजिम र सो कानूनमा नलेखिएकोमा यही मुलुकी ऐन बमोजिम गर्नु पर्छ ।

# भाग २

## महल १

### अदालती बन्दोबस्तको

✂१ नं. ॥ ॥ कुनै कानूनले कुनै मुद्दा हेर्ने खास अधिकारी तोकिएकोमा सोही अधिकारीले र त्यस्तो कुनै खास अधिकारी नतोकी अड्डा मात्र तोकिएकोमा सो अड्डाका हाकिमले कानून बमोजिम मुद्दाको कारबाही र फैसला गर्नु पर्छ ।

---

▶ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधन ।

२ नं. ॥ ॥ जुन कागजमा जुन ठाउँमा अड्डाको छाप र हाकिमको सहीछाप गर्नु भन्ने कानूनमा लेखिएकोछ सो कागजमा जसको इजलास वा फैसला हो उसैले सो बमोजिम गर्नु पर्छ । कानूनमा नखुलेकोमा भने अड्डाको छाप र हाकिमको सहीछाप गर्नु पर्दा सोही कागजको शिरमा गर्नु पर्छ ।

३ नं. ॥ ॥ अड्डा बसेदेखि बन्द नभएसम्म अड्डामा आफूले गर्नु पर्ने अड्डा सम्बन्धी काम कुरा बाहेक अरु कुनै काम कुरा वा ठट्टा मस्करी गर्न र गर्न दिन समेत हुँदैन ।

४ नं. ॥ ॥ मुद्दामा र अड्डाबाट गर्नु पर्ने अरु काम कुराको छलफल गर्दा इमान धर्म सम्झी आफ्ना चित्तले देखेको मनासिब माफिकको कुरा बोल्न हुन्छ । सो बोल्दा पालो पालोसित बोल्नु पर्छ । अघिबाट बोल्नेले बोली नसकी कुरा काटी उछिना उछिन गर्न वा एउटा मुद्दा वा काम कुरा छलफल गरिरहेको मानिसले सो काम छाडी अरु कुराको बकबक गर्न हुँदैन । गरे सो गर्नेलाई सो अड्डाका हाकिमको तजबीजले बीस रुपैयाँसम्म जरिबाना हुन सक्तछ ।

५ नं. ॥ ॥ अड्डाका कामको निमित्त चाहिने वा प्रमाणको निमित्त दाखिल हुने हतियार बाहेक कसैले पनि अड्डामा हतियार लिई आउन हुँदैन । मनाही गर्दा जबरजस्ती गरी ल्याए सो अड्डाका हाकिमका तजबीजले बीस रुपैयाँसम्म जरिबाना हुन सक्तछ । जरिबाना गर्दा पनि जबरजस्ती गरी ल्याए सो हतियार जफत हुनेछ ।

६ नं. ॥ ॥ अड्डाले मुद्दाको कारबाही र फैसला गर्दा खुला इजलासमा गर्नु पर्छ । कसैले अड्डामा आई बेमनासिब काम कुरा गरेमा निजलाई इजलासबाट बाहिर पठाउन सकिनेछ । सो मानिसले फेरी पनि सोही कुरा गरेमा निजलाई सो अड्डाका हाकिमका तजबीजले पचास रुपैयाँसम्म जरिबाना हुन सक्तछ ।

७ नं. ॥ ॥ σ... ... ... ...

८ नं. ॥ ॥ ❧... ... ... ...

९ नं. ॥ ॥ देहायका मुद्दाहरु फौजदारी र सो बाहेक अरु मुद्दा देवानी हुन्-

⟩................................. - - - - - - - - - - - - - - - - - - - - १

राजकाजसम्बन्धी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - १

ज्यान सम्बन्धीका महलले सजाय हुने मुद्दा -- - - - - - - - - - - - - - - - - - १

इलाज गर्नेको महलले सजाय हुने मुद्दा - - - - - - - - - - - - - - - - - - - - १

चोरीको महलले सजाय हुने मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - १

ठगीको महलले सजाय हुने मुद्दा - - -- - - - - - - - - - - - - - - - - - - - १

गोवध सम्बन्धी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - १

आगो लगाएको मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

σ कानून व्यवसायी ऐन, २०२५ द्वारा खारेज ।

❧ सातौं संशोधनद्वारा खारेज ।

⟩ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

गाली बेइज्जतीको मुद्दा ------------------------- १
इजलासको बेइज्जती मुद्दा -- ---------------------- १
सरकारी धनमाल मासेको मुद्दा ---------------------- १
बाँकी नतिर्नेको महलको ९ नम्बरले सजाय हुने मुद्दा - ----------- १
नपाएको पगरी पाएँ भनी भनेको वा सो भनी पर पजनी गरेको वा मानिस जम्मा गरेको मुद्दा -------------------------- १
जुवा सम्बन्धी मुद्दा --- ---------------------- १
विहावरी सम्बन्धी मुद्दा ------------------------ १
करणी सम्बन्धी मुद्दा ------------------------ १
लुटपीट मुद्दा ----------------------------- १
कुटपीट सम्बन्धी मुद्दा ------------------------ १
हूलदङ्गा सम्बन्धी मुद्दा - ------------------------ १
ज्यू मास्ने बेच्नेको महलले सजाय हुने मुद्दा --------- -------- १
हतियार खजाना सम्बन्धी मुद्दा ---------------------- १
सरकारी कागजपत्र हराए, दबाए वा कैफियत गरेको मुद्दा -- --------- १
आशौच बार्ने सम्बन्धी मुद्दा ------------- --------- १
फकिरसित मुडिएको मुद्दा ----------------------- १
खोटा टक मारेको वा चलन गरेको मुद्दा ------ ---- ------ १
घूस मुद्दा ------------------------------ १
कीर्ते जालसाजी मुद्दा ------------------------- १
सवारी सम्बन्धी मुद्दा ------------------------- १
बेरीतसँग थुन्दाको महलले सजाय हुने मुद्दा ------- ---------- १
वन सम्बन्धी कानूनले सजाय हुने मुद्दा ------------------ १
पशु, पंक्षी वा जलचरको संरक्षण सम्बन्धी कानूनले सजाय हुने मुद्दा ------- १
माथि लेखिएका अतिरिक्त सम्पत्ति वा पदको हक सम्बन्धी झगडा बाहेकको अरु मुद्दा ---------------------------- १

λ१० नं. ॥ ॥ प्रचलित कानूनमा नेपाल सरकार वादी हुने भनी लेखिएको मुद्दामा नेपाल सरकारलाई वादी कायम गरी मुद्दाको कारबाही गरिनेछ । सो बाहेक मुद्दाको विषय वा प्रकृतिबाट नेपाल सरकारको वा सार्वजनिक हित वा सरोकार निहित रहेको मुद्दा नेपाल सरकारले वा अड्डाको अनुमति लिई सर्वसाधारण जो सुकैले पनि वादी भै चलाउन सक्नेछ । अनुमतिका लागि निवेदन दिंदा फिरादपत्र साथै दिनु पर्छ । त्यसरी फिरादपत्र साथै अनुमतिको निवेदन परेमा उसै दिन अनुमतिको निवेदनमा निर्णय गरी दिनु पर्छ । अनुमति नदिएमा पुनरावेदन सुन्ने अड्डामा निवेदन दिन सक्नेछ ।

λ नवौं संशोधनद्वारा संशोधित ।

[α]११ नं. ॥ ॥ मुद्दा हेर्दा देहायको प्राथमिकताले कारबाही गर्दै जाँदा जुन मुद्दा पहिले छिन्न अङ्ग पुग्छ सोही मुद्दा पहिला किनारा गर्नु पर्छ - - - - - - - -

थुनुवा कैदीको थुना वा कैद परेको मुद्दा - - - - - - - - - -- - - - - - - १

वेवारिसी सोह्र वर्ष मुनिको नाबालकको मुद्दा - - - - - - - - - - - - - - - - - २

तारिखमा रहेको पचहत्तर वर्षमाथिको बुढाबूढीको र शारीरिक अशक्तता भएको व्यक्तिको मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

[◎]महिला वादी वा पुनरावेदक भएको न्वारान गराई पाउँ वा नाता कायम गराई पाउँ भन्ने मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - ४

[ν]विधवा महिला वादी वा पुनरावेदक भएको मुद्दा - - - - - - - - - - - - ४क.

[✎]महिला वादी वा पुनरावेदक भएको लैंगिक हिंसा वा घरेलु हिंसा सम्बन्धी मुद्दा -४ख.

स्पष्टीकरण : "लैङ्गिक हिंसा" भन्नाले सार्वजनिक वा निजी जीवनमा लिङ्गको आधारमा कसै प्रति शारीरिक, यौनजन्य वा मानसिक क्षति वा पीडा पुर्‍याउने कार्य सम्झनु पर्छ र सो शब्दले लिङ्गको आधारमा हुने वा हुन सक्ने कुनै पनि प्रकारको अपमानजन्य, पीडाजन्य वा धम्कीपूर्ण व्यवहार, दबाब, करकाप वा स्वेच्छाचारी रुपमा महिलालाई स्वतन्त्रताको उपभोग गर्नबाट बञ्चित गर्ने कुनै कार्य समेतलाई जनाउँछ ।

माथि लेखिएको र त्यसपछि अरु मुद्दाका हकमा पुरानोको क्रमले - - - - - - - ५

१२ नं. ॥ ॥ [ß]यसै महलको ६५ नम्बरको दफा १ वा दफा २ बमोजिम वारिस राख्न नपाउने अवस्थाका झगडियाको कुनै अर्को अड्डामा पनि मुद्दा परेको रहेछ भने वा कुनै एका अड्डामा परिरहेको मुद्दाको निर्णय भै नसकी अर्को अड्डामा परेको मुद्दाको निर्णय हुन नसक्ने रहेछ भने मेरा यस मितिमा यस्तो मुद्दा फलाना अड्डामा परेकोछ कानून बमोजिम मुलतबी राखी पाउँ भनी दरखास्त लेखी मुद्दा परेका अड्डामा दिएमा सो अड्डाबाट पनि सो दरखास्त बुझी झगडियालाई त्यसको निस्सा दिई देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - -

सो दरखास्त परेपछि जुन अड्डामा मुद्दा परेको छ सो अड्डालाई फलानाको फलाना मुद्दा यस अड्डामा परेको छ भनी लेखी उसै अड्डामा परेको मुलतबी राखी आफ्नो अड्डामा परेको मुद्दा छिन्न पर्ने भए यस अड्डामा परेको मुद्दा यति दिनसम्ममा छिनिनेछ सो नछिनिएसम्म त्यस अड्डामा परेको मुद्दा मुलतबी राखिदिनु भन्ने र आफ्ना अड्डामा परेको मुद्दा मुलतबी राखी उस अड्डामा परेको मुद्दा छिनाउन पर्ने भए यस अड्डामा परेको मुद्दा मुलतबी रहेकोछ त्यस अड्डामा परेको मुद्दा छिनी छिनिएपछि जनाउ दिनु भन्ने व्यहोरा लेखी पठाई भरपाई लिनु

---

α छैठौं संशोधनद्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

ν लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

ß पहिलो संशोधनद्वारा शिर व्यहोरा संशोधित ।

पर्छ । लेखिए बमोजिम मुलतबी रहेपछि मुलतबी राख्ने अड्डाले अर्को अड्डामा परेको मुद्दा छिनिएपछि कारबाही गर्न भनी पर्चा खडा गरी दुबै थरीको तारिख खिची राख्नु पर्छ । मुलतबी रहिसकेपछि अघिबाट छिनिने मुद्दामा सो मुलतबी राख्ने मानिसले वारिस गरी पठायो भने यस अड्डामा कारबाही भएको मुद्दामा वारिस पठाएकोले त्यस अड्डामा परेको मुद्दा ऐन बमोजिम कारबाही गर्नु भनी वारिस दर्ता हुनासाथ जनाउ दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - १

पहिले छिन्ने अड्डाले मुद्दा छिनिए पछि यस मितिमा छिनिएको भनी मुलतबी राख्ने अड्डालाई जनाउ र झगडियालाई बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र मुलतबी राख्ने अड्डामा हाजिर हुन जानू भनी तारिख तोकी सो तारिख भरपाई जनाउ दिने लेखोटसाथ मुद्दा परेका अड्डामा पठाउनु पर्छ । मुद्दा फैसला हुँदा झगडिया हाजिर नभै गैर हाजिर भएको वा थुनिएको भए झगडियालाई तारिख तोक्न पर्दैन । गैर हाजिर भएमा म्याद तारिख गुज्रेका मितिले डिसमिस वा एकतर्फी फैसला गर्ने म्याद नाघेपछि यस अड्डाको म्याद तारिखमा गैर हाजिर भयो भनी र थुनिएकोमा यस मितिदेखि यस कुराले थुनियो भनी लेखी पठाउनु पर्छ - - - - - - - - - - - - - २

अघि छिनिने मुद्दामा म्याद तारिख गुजार्नेले गुज्रेको थमाई पाउने म्याद नाघेका मितिले, थुनिएकाले छुटेका मितिले र वारिस राख्नेले वारिस राखेका मितिले बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र मुलतबी रहेका अड्डामा हाजिर हुन जानु पर्छ । त्यस्तो म्याद तारिख गुजार्ने झगडिया मुद्दा मुलतबी रहेको अड्डामा लेखिएका म्यादभित्र हाजिर हुन आएमा जो गर्नु पर्ने गरी मुद्दा छिनिदिनु पर्छ - - - - - - - - - - - - ३

झगडिया थुनिए कैद परेको जनाउ आएपछि मुलतबी राख्ने अड्डाले झगडिया हाजिर भएपछि मात्र कारबाही गरुँला भनी पर्खिरहनु पर्दैन । छुटे नछुटेको बुझ्दै रही नछुटेको वा नछुट्ने अवस्था परेकोमा समेत ऐन बमोजिम झिकाउनु पर्ने भए झिकाई जो गर्नु पर्ने कारबाही गरी मुद्दा छिनी ऐन बमोजिम गर्नु पर्छ - - - - - -४

म्याद तारिख गुजारी हाजिर हुन आउने मुद्दा बाहेक अघिबाट छिन्ने मुद्दा छिनी नसकी झगडिया सामेल नभएपनि तारिख गुजारी कारबाही गर्न हुँदैन । अघि छिन्ने मुद्दा नछिनिएसम्म मुलतबी राख्नु पर्छ । आफूलाई लेखी पठाएका म्यादभित्र मुद्दा नछिनी राखेको भए अघि छिन्ने अड्डालाई ताकिता गरी छिन्न लगाई आफ्ना अड्डामा परेको मुद्दा हेरी छिनिदिनु पर्छ - - - - - - - - - - - - - - - - - ५

१३ नं. ॥ ॥ अड्डाले कानून बमोजिम आफूले गर्नु पर्ने काम कारबाही तोकिएको समयमा गर्नु पर्छ । ढीला गर्नु हुँदैन । पुनरावेदन साधक सुन्दा वा अड्डा जाँचबुझ गर्दा बेमुनासिब गरेको देखियो भने कानून बमोजिम गर्नु गराउनु पर्छ ।

⌘१४ नं. ॥ ॥ मुद्दा फैसला गर्दा देहायमा लेखिएको म्यादभित्र फैसला गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

शुरु मुद्दा फैसला गर्दा प्रतिवादी परेको वा पर्ने अवस्था पुगेको मितिबाट एक वर्षभित्र फैसला गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - १

पुनरावेदन फैसला गर्दा शुरु मिसिल प्राप्त भएको मितिबाट छ महिनाभित्र फैसला गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

---

⌘ दशौं संशोधनद्वारा संशोधित ।

बुझ्नु पर्ने प्रमाण बुझिसकेपछि माथि लेखिए बमोजिम फैसला गर्ने म्याद बाँकी भएपनि मुद्दा फैसला गर्नलाई पैंतीस दिन भन्दा ढिलो गर्नु हुँदैन - - - - - - - - - ३

१५ नं. ॥ ॥ तोकिएको म्याद तारिखमा फैसला गर्न र कारबाही गर्न अड्कने मुनासिब माफिकको कारण परिआएमा अड्काउको व्यहोरा लेखी आफ्नो पुनरावेदन सुन्ने अड्डामा म्यादभित्रै जाहेर गर्नु पर्छ । सो अड्डाले जाँच्दा पनि अड्काउ मुनासिब ठहरी एक महिनासम्म म्याद थप दिनु पर्ने देखिएमा एक पटकलाई आफैले दिई र त्यसभन्दा बढी म्याद थप दिनु पर्नेमा तोक बोली आफूभन्दा माथिल्लो तहमा जाहेर गर्नु पर्छ । त्यस्तो जाहेरी आएमा सो माथिल्लो तहबाट जाँच्दा पनि अड्काउ मुनासिब ठहरी बढी म्याद थप दिनु पर्ने देखिएमा मुनासिब माफिकको अरु म्याद थप दिई सो म्याद तारिखमा कारबाही फैसला गर्न लाउनु पर्छ ।

१६ नं. ॥ ॥ आफ्ना मुलुकका अर्को इलाकामा पूर्जी पठाई ताकिता गर्नु पर्नेमा सो पनि नगरेको वा आफ्नै इलाकामा भएकोमा खोजतलास गर्नु पर्नेमा सो पनि गर्न नपठाएको वा विदेशमा पठाउनु पर्नेमा जो लेखी पठाउनु पर्छ कानून बमोजिम सो पनि नपठाएको रहेछ भने कारबाही गरिरहेको मानिने छैन ।

१७ नं. ॥ ॥ पुनरावेदन सुन्ने अड्डाले आफ्ना मातहतका अड्डामा परेका मुद्दाको काम कारबाहीमा म्याद नाघेको वा वेरित भएकोछ भन्ने कुरा झगडियाका निवेदनबाट वा अरु कुनै किसिमसँग थाहा पाएमा आवश्यकता अनुसार सो मुद्दाको मिसिल समेत झिकी पन्ध्र दिनसम्ममा कैफियत तलब गरी बुझ्दा म्याद नघाएको वा बेरीत भएको देखिएमा कानून बमोजिम गर्नु गर्न लाउनु पर्छ ।

१८ नं. ॥ ॥ कानून बमोजिम रीत पुगेको आफ्ना अड्डामा दर्ता हुने फिरादपत्र, प्रतिउत्तरपत्र, पुनरावेदनपत्र, निवेदनपत्र इत्यादि अड्डामा दाखिल हुनासाथ तुरुन्त दर्ता गरिदिनु पर्छ । अड्डामा दाखिल भएपछि रीत पुऱ्याई श्रेस्तामा नदरिएको कारणले मात्र म्याद जान सक्दैन ।

१९ नं. ॥ ॥ आफ्ना अड्डामा आएका कागजहरुको तुरुन्त मजबुन बुझी कानून बमोजिम जो गर्नु पर्ने हो सो कुरा खोली लेखी र श्रेस्तामा दर्ता भएको मिति समेत जनाई हाकिमले दस्तखत गर्नु पर्छ ।

२० नं. ॥ ॥ नालिस परी वा अरु अड्डाबाट सरी आएमा मुद्दामा समेत फलाना र फलानाको फलाना मुद्दा भन्ने पोस्तीमा लेखी मिसिल खडा गरी क्रमैसँग नम्बर चढाई सो नम्बर र वादी फलाना प्रतिवादी फलानाको फलाना मितिमा दाखिल भएको फलाना मुद्दा भन्ने समेत जनाई किताबमा नम्बरैसँग दर्ने गर्नु पर्छ । फैसला भएपछि फलाना मितिमा फैसला भएको भन्ने समेत जनाई सो मिसिललाई मिति र नम्बरको क्रमैसँग राख्नु पर्छ ।

२१ नं. ॥ ॥ मुद्दा दायर भएपछि मुद्दै पिच्छे यसै नम्बरमा लेखिएका नमूना बमोजिमको तायदाती फाराम खडा गरी दाखिला मितिका नम्बरसँग कागजपिच्छे नम्बर चढाई फाराममा दर्ता गरी सहीछाप गरी मिसिल सामेल राख्नु पर्छ । मुद्दा छिनिएपछि मुलतबी, काम बाँकी मिसिल र पहिला खण्डको कागज बाहेक अरु दोस्रो खण्डमा लेखिएका कागज जति मुद्दा फैसला भै झगडियाले पुनरावेदन दिने म्याद नाघेको पाँच वर्षपछि र तेस्रो खण्डमा लेखिएको कागज जति एक वर्षपछि रद्दी गरी कानून बमोजिम लिलाम बिक्री गर्नु पर्छ । झगडियाले दाखिल गरेको सक्कल कागज जति लिन आएका बखत फिर्ता दिई भरपाई लिई तायदाती फाराममा समेत कैफियत

जनाई राख्नु पर्छ । ऐनका हदम्यादभित्र मुद्दा दायर नभएको घा जाँचको कागज र निवेदन आदेश वर्षको एक पटक तायदाती गरी माथि लेखिए बमोजिम रद्दी गरी लिलाम बिक्री गर्नु पर्छ ।

# तायदाती फारामको नमूना-

## फलाना सालको मुद्दा नम्बर फलाना

| फलाना मितिमा फलाना अड्डामा परे वा सरेको फलानाको र फलानाको फलाना मुद्दाको मिसिलको तायदाती - - - - - - - - - - - - - - - - - - | | | | | |
|---|---|---|---|---|---|
| कहिल्यै नसडाउने - - | | पाँच वर्ष पुगेपछि सडाउने - | | एक वर्ष पुगेपछि सडाउने - | |
| नम्बर | कागज | नम्बर | कागज | नम्बर | कागज |
| १ | फलानाको फलाना मितिको फिरादपत्र वा उजूरी आदेश बयान - | ६ | फलानाको फलाना मितिको बन्दसवाल | २ | फलाना फलाना झगडियाको नाउँको तारिख पर्चा |
| ३ | कारणीको नाउँको फलाना मितिमा तामेल भएको म्याद समाव्हान वा इतलायनामा - - - | ७ | फलानाको साक्षी फलानाको फलाना मितिको बकपत्र - | ५ | फलाना साक्षीका नाउँको तामेली समाव्हान- |
| ४ | फलानाको फलाना मितिको प्रतिउत्तरपत्र वा बयान - - - - | ८ | फलाना समेतको फलाना मितिको मुचुल्का - - - | | |
| ९ | फलानाले दाखिल गरेको फलाना मितिको यो यस्तो सक्कल लिखत - | ११ | फलाना मितिको आदेश | | |
| १० | फलाना समेत यति जनाको सहीछाप परेको नक्सा कागज - | | | | |
| १२ | फलाना फलानाको फलाना मितिको मिलापत्र - - - - | | | | |
| १३ | फलाना अड्डाको फलाना मितिको फैसला वा अन्तिम आदेश - - | | | | |
| | दस्तखत फलाना | | दस्तखत फलाना | | दस्तखत फलाना |
| | पुनरावेदनबाट थप | | पुनरावेदनबाट थप | | पुनरावेदनबाट थप |
| १ | फलाना मितिको फलानाको पुनरावेदनपत्र | | | २ | फलानाको फलाना मितिको धनजमानी पत्र |
| ४ | जग्गाको नक्सा - | | | | |
| ५ | फलाना मितिको डिसमिस वा फैसला<br>दस्तखत फलाना | | दस्तखत फलाना | ३ | तारिख पर्चाको भरपाई दस्तखत फलाना |

२२ नं. ॥ ॥ यसै महलको २१ नम्बरमा मिसिल कागज रद्दी गरी लिलाम बिक्री गर्ने विषयमा जुनसुकै कुरा लेखिएको भए तापनि देहायमा लेखिएका किसिमका मुद्दाहरु बाहेक अरु किसिमका मुद्दाको मिसिलका हकमा सो मुद्दा छिनिएपछि पुनरावेदनको म्याद नाघी पुनरावेदन नलाग्ने अवस्था पुगेको मितिले विगो भरी भराउ गर्नु पर्ने मुद्दाको मिसिल बाह्र वर्ष नाघेपछि र विगो भरी भराउ गर्नु नपर्ने मुद्दाको मिसिल पाँच वर्ष नाघेपछि किताब खडा गरी सो किताबमा वादी प्रतिवादीहरु सबैको पूरा नाम, वतन, मुद्दाको विषय नाम र परे छिनिएको मिति र छिन्ने अड्डाको नाम लेखी हाकिम र हाकिम भन्दा मुनिका सबैभन्दा ठूलो दर्जाको कर्मचारीले दस्तखत गरी तायदाती फारामको पहिला खण्डको कागजमध्ये झगडियालाई फिर्ता दिनु पर्ने कागज बाहेक सो मिसिलका अरु सबै कागज रद्दी गरी कानून बमोजिम लिलाम बिक्री गर्नु पर्छ र सो किताब बरबुझारथमा चलाउनु पर्छ ------------------

⁾............................. ------------ -----------१

राजकाज सम्बन्धी मुद्दा -- -------------------------१

ज्यान सम्बन्धी मुद्दा ---------------------------१

चोरीको महलले सजाय हुने मुद्दा ----------------------१

गौबध सम्बन्धी मुद्दा ------- ------------------ १

हाडनाता करणी सम्बन्धी मुद्दा ----------------------१

जुवा सम्बन्धी मुद्दा -------- -------------------१

कीर्ते जालसाजी र करकाप सम्बन्धी मुद्दा ------------------१

विहावरी मुद्दा - ----------------------१

मनाही भएको माल खरीद बिक्री गऱ्यो वा बनायो भन्ने मुद्दा ---------१

▣न्वारान गरी पाउँ वा अरु नै नाता सम्बन्ध कायम गरी पाउँ भन्ने मुद्दा ----१

सरकारी ठेक बाँकी मुद्दा -------------------------१

जग्गा वा बाली विषयको मुद्दा ----------------------१

अपुताली सम्बन्धी मुद्दा -------------------------१

अंश वा अंश दपोट सम्बन्धी मुद्दा ----------------------१

ज्यूनी वा माना चामल विषयको मुद्दा -------------------१

दान बकस सम्बन्धी मुद्दा -------------------------१

धर्मपुत्र सम्बन्धी मुद्दा ---------- ---------------१

गुठी वा गुठी दपोट मुद्दा -------------------------१

घर पसल सम्बन्धी मुद्दा -------------------------१

दामासाही विषयको मुद्दा ------------------------१

अचल सम्पत्ति बन्धक लेखिएको लेनदेन मुद्दा ----- ------------१

कुलो वा बाटो निकास सम्बन्धी मुद्दा ------------------१

⁾ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

▣ पहिलो संशोधनद्वारा संशोधित ।

२३ नं. ॥ ॥ अड्डामा रहेको कागज मिसिलहरु कसैले हराउन, नास्न वा चोर्न हुँदैन । कारबाही गर्नु पर्ने चल्ती मिसिल र प्रमाण लाग्ने समेत कागजहरुमा कानून बमोजिम रीत पुगेको नक्कल रहेको वा प्रमाणलाई हानि नहुने कागज मिसिल हराउने नास्नेलाई र बेचल्ती कागज वा फैसला मिसिल सक्कल हराउने नास्नेलाई मिसिलै हराएमा ❋दश हजार रुपैयाँ, प्रमाण लाग्ने कागज हराएमा ❋पाँच हजार रुपैयाँ र अरु सानातिना कागज हराएमा ❋एक हजार रुपैयाँ जरिबाना हुनेछ । कानून बमोजिम रीत पुगेको प्रमाण लाग्न सक्ने नक्कल नभएको चल्ती सक्कल कागज मिसिल हराउनेलाई मिसिलै हराएमा ❋बीस हजार रुपैयाँ, प्रमाण लाग्ने कागज हराएमा ❋दश हजार रुपैयाँ र अरु सानातिना कागज हराएमा ❋दुई हजार रुपैयाँ जरिबाना हुनेछ । कैफियत गरी गरेको रहेछ भने चल्ती बेचल्ती जस्तो किसिमको कागज मिसिल हराए नासेको भएपनि सो गर्ने गराउनेलाई हराएकोबाट नेपाल सरकारको वा दुनियाँको विगो नोक्सान भएको रहेछ भने सो नोक्सानी विगो उपर गरी लिई वा भराई विगो बमोजिम जरिबाना गरी सो जरिबाना वापतमा कैद र विगो नोक्सान नभएको र विगो नोक्सान नहुने रहेछ भने एक वर्ष कैद हुनेछ । चोरी गरेको रहेछ भने माथि लेखिएका सजायमा थप ❋दुई हजार रुपैयाँ जरिबाना समेत हुनेछ ।

२४ नं. ॥ ॥ जुनसुकै कुरामा भएपनि सोह्र वर्ष नपुगेका नाबालकको र उमेर पुगेका भएपनि कुनै किसिमको रोगले होश ठेगानामा नभएका वा बौलाएका मानिस समेतको कागज लिनु वा गराउनु पर्दा उसको संरक्षक वा हकवाला नराखी कुनै कागज लिनु गराउनु हुँदैन, सोह्र वर्ष नपुगेको भएपनि ज्यानमारा, चोरी वा करणी गर्ने गर्न लाउने मानिसको अड्डाबाट कागज गराउनु पर्दा भने संरक्षक वा हकवाला भए निजलाई राखी र नभए उसैको मात्र कागज गराउन पनि हुन्छ । संरक्षक वा हकवाला राखी कागज गराएकोमा यो मेरो यस किसिमको मानिसले मेरो सामुन्नेमा भने बमोजिम लेखी सहीछाप गरेको साँचो हो भनी सो कागजको किनारामा सो संरक्षक वा हकवालाको पनि सहीछाप गराउनु पर्छ । कागज गराउँदा कसैलाई पनि जोरजुलुम करकाप गरी कागज गराउनु हुँदैन । गरे बदर हुन्छ । लेखिए बमोजिम बाहेक आफ्ना खुशीराजीले जानी बुझी सहीछाप हालेपछि सो कागज सदर हुन्छ ।

२५ नं. ॥ ॥ अन्धा अन्धी र वक्क लाटा लाटीको कागज गराउनु पर्दा उनीहरुको संरक्षक वा हकवाला भए निजलाई र नभए निजै अन्धा अन्धी, लाटा लाटीले रोजेका सरजमीनका मानिस राखी अन्धा अन्धीले भने बमोजिम र लाटा लाटीले इशारा गरे बमोजिम राम्रो तवरबाट इशारा बुझी कागज गराई लेखिए बमोजिम कागज भएको हो भन्ने सरजमीन वा संरक्षक वा हकवालाको पनि सोही कागजमा सहीछाप गराई राख्नु पर्छ ।

२६ नं. ॥ ॥ अड्डामा दर्ता हुने वा अड्डाबाट गर्ने गराउने गैह्र कागजमा कागज गरी दिनेको यति वर्षको भन्ने उमेर खुलाई लिनु पर्छ । सो उमेर लेखिएकोमा कारणी नै अड्डामा हाजिर भएकोमा उमेर दुरुस्त भए दुरुस्त छ भन्ने र दुरुस्त नभएमा यसको उमेर यति होला भन्ने सोही कागजको शिरमा लेखी हाकिमको दस्तखत गरी राख्नु पर्छ । कारणी हाजिर नभै वारिसद्वारा परेकोमा भए यो लेखिएको

---

❋ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

उमेर दुरुस्त छ भन्ने वारिसलाई लेखाई सहीछाप गराई राख्नु पर्छ । उमेर ढाँटी लेखी दिनेलाई बीस रुपैयाँसम्म सोही अड्डाका हाकिमका तजबीजले जरिबाना हुनेछ ।

▣२७ नं. ॥ ॥ अड्डामा दर्ता गर्न ल्याएको कागजपत्रमा अक्षर बुझिने गरी थपी केरी दर्ता गर्न ल्याएमा सहीछाप गराई लिंदा यो यो पङ्क्तिमा यो यो अक्षर थपे वा केरेकोछ भनी सोही कागजको किनारामा अड्डैबाट लेखी दर्ता गराउन ल्याउनेको सहीछाप गराई अड्डाको हाकिमले दस्तखत गरी दर्ता गर्ने गर्नु पर्छ । दर्ता गर्न नहुने भए जुन कारणले दर्ता गर्न नहुने हो सो कारण स्पष्ट खुलाई सो कागजकै पीठमा लेखी मिति समेत हाली अड्डाका हाकिमले दस्तखत गरी दर्ता गर्न ल्याउनेको भरपाई गराई कागज फिर्ता दिनु पर्छ ।

२८ नं. ॥ ॥ जुनसुकै कागज भएपनि रीत पुगी अड्डामा दाखिल दर्ता भएपछि फिर्ता दिई अर्को साटी दिन लिन र अङ्क अक्षर थपी मेटी केरी घटी बढी पार्न हुँदैन ।

२९ नं. ॥ ॥ मुद्दा हेर्दा देहायमा लेखिए बमोजिमको मुद्दा देहाय बमोजिमको इलाकाको अड्डाबाट मात्र हेर्नु पर्छ - - - - - - - - - - - - - - -

देवानी मुद्दामा देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - १

जग्गा दपोट, तिरो दपोट र कुलो साँध बाटो निकास सन्धिसर्पनको मुद्दा र फिरादपत्रको रुपबाट जग्गा, घर वा ठाउँ जाँच्नु पर्ने देखिएको वा फिरादपत्रमा लेखिएको रुपले जग्गा, घर जाँच्नु नपर्ने देखी मुद्दा दायर भएकोमा प्रतिउत्तरका रुपबाट जग्गा वा घरै जाँची मात्र फैसला हुने देखिएको समेत मुद्दामा सो घर जग्गाहरु रहेको ठाउँको इलाकाको अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - - १

यसै दफाको देहाय दफा १ मा लेखिएको बाहेक अरु गैह्र मुद्दामा जुन ठाउँमा काम भएकोछ सो ठाउँको इलाकाको अड्डा वा प्रतिवादी रहेको इलाकाको अड्डामध्ये जहाँ फिरादपत्र दिन्छ सोही ठाउँको अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - - - २

वादी प्रतिवादी दुबै थरले तल ३ दफामा लेखिए बाहेक नेपाल सरहदभित्र अरु ठाउँमा लेनदेन कारवार गरेकोमा सो कारवार गरेको इलाका वा वादी रहेको इलाकाको अड्डामध्ये जहाँ फिरादपत्र दिन्छ सोही अड्डाबाट हेर्नु पर्छ - - - - - ३

विदेशमा लेनदेन कारवार गरेकोमा लेनदेन व्यवहारको महल बमोजिम नालिस लाग्नेमा प्रतिवादी रहेको वा वादी रहेको इलाकाको अड्डामध्ये जहाँ फिरादपत्र दिन्छ सोही अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - ४

यसै दफाका देहाय दफा २।३।४ मा लेखिएका कुरामा दुवै थर झगडिया अन्यत्र बेइलाकामा गई बसेका रहेछन् भने सो बसेकै इलाकाको अड्डाबाट पनि नालिस लिई कारबाही गर्न हुन्छ । प्रतिउत्तर नपर्दै प्रतिवादीले वा प्रतिउत्तर गरेपछि दुवै थरले इलाकाको अड्डामा सारी पाउँ भनी दरखास्त दिएकोमा र दुबै थर झगडिया सो बसेको ठाउँ छाडी गएपछि भने इलाकाको अड्डामै पठाई दिनु पर्छ - - - - - ५

फौजदारी मुद्दामा देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - २

⌈............................ राजकाज सम्बन्धी मुद्दा नेपाल सरकारले तोकिदिएको अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

---

▣ पहिलो संशोधनद्वारा संशोधित ।

⌈ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

देहायका मुद्दा अपराध भएको इलाकाको अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - २
ज्यान सम्बन्धीको महलले सजाय हुने मुद्दा - - - - - - - - - - - - - - - - - - १
जबरजस्ती करणी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - १
चोरीको महलले सजाय हुने मुद्दा - - - - - - - - - - - - - - - - - - - - - १
आगो लगाएको मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - - १
गौबध सम्बन्धी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - - १
सरकारी वा अरु सार्वजनिक धनमाल नोक्सान वा हिनामिना गरेको मुद्दा - - - - १
हतियार खजाना सम्बन्धी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - १
खोटा टक मारेको वा खोटा चलन गरेको मुद्दा - - - - - - - - - - - - - - १
सरकारी छाप दस्तखत वा सो छाप दस्तखत भएको कागज वा सरकारी काममा
कुनै सरकारी कर्मचारीको छाप दस्तखत भएको कागज कीर्ते गरेको मुद्दा - - - - १
अदलको महलको १ नम्बरले सजाय हुने मुद्दा - - - - - - - - - - - - - - - १
जुवा सम्बन्धी मुद्दा - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

यसै दफाको देहाय दफा २ मा लेखिए बाहेक अरु फौजदारी मुद्दा अपराध भएका इलाका वा प्रतिवादी रहेको इलाकाको अड्डामध्ये जहाँ फिरादपत्र दिन्छ सोही अड्डाबाट हेर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

माथि दफा दफामा प्रतिवादी रहेको ठाउँ भन्नाले प्रतिवादी घरद्वार गरी बसेको वा सरकारी जागिर खाई बसेको ठाउँ सम्झनु पर्छ - - - - - - - - - - - - - - - ३

माथि दफा दफामा लेखिए बमोजिम प्रतिवादी रहेका इलाकाको अड्डामा नालिस दिंदा प्रतिवादी बेग्ला बेग्लै इलाकाका धेरैजना भएकोमा जुन इलाकामा धेरैजना प्रतिवादी रहेका छन् सोही इलाकाका अड्डामा नालिस दिनु पर्छ । इलाका पिच्छे प्रतिवादी बराबर रहेको भए जुन इलाकाको अड्डामा दिए पनि हुन्छ - - - - - - ४

कुनै सरकारी कर्मचारीले नालिस वा प्रतिउत्तरपत्र दिनु पर्दा निज बहाल रहेको वा काज खटिएको इलाकाको नजिकमा त्यस किसिमको मुद्दा हेर्ने अड्डा भए सोही अड्डामा र त्यस्तो अड्डा नभए त्यस्तो अड्डाको पुनरावेदन सुन्ने अड्डा भए सो अड्डामा र सो पनि नभए नजिकको अरु अड्डामा दिन हुन्छ । सो बमोजिम नालिस वा प्रतिउत्तरपत्र दिन ल्याएकोमा लिई निजलाई सोही अड्डामा तारिखमा राखी नालिस वा प्रतिउत्तरपत्र इलाकाको सम्बन्धित अड्डामा चलान गरी पठाई दिनु पर्छ । सो मुद्दा कारबाही गर्ने अड्डाले जागिर भएका इलाकामा तारिखमा रहने झगडियालाई सक्कल कागज देखाई कारबाही गर्नु पर्ने भएमा झिकाई बयान गराउन हुन्छ । त्यसरी झिकाइएमा मुद्दा कारबाही हुने अड्डामा आफै जानु पर्छ वा ऐन बमोजिम वारिस पठाउनु पर्छ । जागिरे भएका इलाकाको अड्डाको तारिखमा रहेकोमा तारिख छोडेमा सो कुराको जनाउ सम्बन्धित अड्डाले मुद्दा परेको अड्डालाई दिनु पर्छ । सो कर्मचारी तारिखमा रहेको अड्डाको इलाकाबाट अर्को इलाकामा काजमा खटी गएमा सो अड्डाले निज काजमा खटिएको इलाकाको अड्डामा तारिख सारी दिई मुद्दा परेको अड्डालाई सो कुराको जनाउ दिनु पर्छ - - ५

वादी प्रतिवादी जागिरे भएका इलाकाको अड्डाबाट मुद्दा हेरिएकोमा यो मुद्दा हाम्रा घरद्वार भएका इलाकैको अड्डाबाट हेरी पाउँ भनी दुवै थरले दरखास्त दिए भने प्रमाण बुझिसकी छिनिने अवस्था पुगेकोमा बाहेक अरुमा सो मुद्दामा माथि १।२ दफा बमोजिमको जुन इलाकामा पठाउन दुवै थर मञ्जुर हुन्छन् सोही इलाकाको अड्डामा पठाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - ६

इलाका बाहेक बेइलाकाको अड्डामा फिरादपत्र दिन ल्याएमा इलाका पर्ने फलाना अड्डामा जानु भनी सो फिरादपत्रको पीठमा लेखी छाप लगाई तुरुन्त फिर्ता दिनु पर्छ । ऐन बमोजिमको म्यादभित्र दिन ल्याएमा इलाकाका अड्डाबाट सो दरपीठ भएकै फिरादपत्र दिए पनि लिई मुद्दा हेरिदिनु पर्छ । फिरादपत्र दर्ता भईसकेपछि माथि दफा दफामा लेखिए बमोजिम अरु अड्डामा पठाउँदा पनि तारिखमा रहने झगडियालाई तारिख तोकी जुन अड्डाबाट सो मुद्दा हेर्नु पर्ने हो सो अड्डाबाट बुझी कानून बमोजिम गर्नु भनी अड्डाको लेखोटसाथ पठाउनु पर्छ । अड्डाले पनि सो आएको मुद्दा बुझी आफूले हेर्नु नपर्ने भए तापनि फिर्ता गर्न हुँदैन । बाधा परे आफ्नो पुनरावेदन सुन्ने अड्डा मार्फत जाहेर गरी निकासा भई आए बमोजिम गर्नु पर्छ । निकासा दिने अड्डाबाट पनि ऐन बमोजिम जो मनासिब हो तोकी पठाईदिनु पर्छ - - ७

▣अड्डा सम्बन्धी काम कुरामा सरकारी कर्मचारी उपर वा त्यस्ता कर्मचारीका साथ अन्य व्यक्तिहरु समेत उपर नालिस दिनु पर्दा माथि दफा दफामा जुनसुकै कुरा लेखिएको भए तापनि त्यस्तो मुद्दा वादी रहेको वा सो काम कुरा भए गरेको इलाकाको उच्च अदालतमा दिनु पर्छ र सो बमोजिमको मुद्दामा त्यस्तो कर्मचारीलाई तारिखमा राख्न पर्दैन - - - - - - - - - - - - - - - - - - - - - - ८

इलाका नपर्ने ठाउँलाई इलाका हो भनी ढाँटी नालिस दिनेलाई र इलाका ढाँटेको भनी झुट्टा उजूर गर्नेलाई पाँच रुपैयाँ जरिबाना गर्नु पर्छ । इलाका ढाँटी नालिस दिएकोमा नालिस दिने हदम्यादमा सो ढाँटी दर्ता गराएका अड्डाबाट नालिस दिनु पर्ने अड्डामा हुलाकद्वारा कागज पुग्ने बाटाका म्यादका दिन बाँकी राखी नालिस दर्ता गराएको रहेछ भने सो ढाँटेको ठहर्नासाथ माथि दफा दफामा लेखिए बमोजिम जुन इलाकाको अड्डाबाट हेर्नु पर्ने हो सोही इलाकाको अड्डामा मिसिल झगडिया पठाई हेर्न लगाउनु पर्छ । ✂... ... - - - - - - - - - - - - - - - - - - - - ९

३० नं. ॥ ॥ मुद्दा हेर्न पाउने अधिकारी गैह्रले मुद्दा हेर्दा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

आफ्ना हाडमा अपुताली परे खान पाउने नाता र मामा माइज्यू, सानी ठूली आमा, सानु ठूलो बाबु, सासू, ससुरा, फुपू, फुपाज्यू, जेठू, साला, मीत, आफ्ना दिदी बहिनी, छोरी र यिनै दिएका जुवाई, भानिज भाञ्जी, भान्जी बुहारी, आमाका बाबु वा आमा, मन्त्र सुनाउने गुरु गुरुमा, मन्त्र सुनाएका शिष्य शिष्यनी, आफूले लेनदेन कारोवार गरेका र नोकर चाकर र लेखिएका मानिसको एकाघरसँग बसेका जहानको र झगडिया मानिसको मुद्दा पर्न आएमा आफूले हेर्न हुँदैन - - - - - - - - - - १

माथि १ दफामा लेखिए बमोजिम हेर्न नहुने मुद्दा पर्न आएमा सोही अड्डामा समान अधिकारको अन्य अधिकारी भए निजले हेर्नु पर्छ र त्यस्तो अधिकारी नभए समान

---

▣ पहिलो संशोधनद्वारा संशोधित ।

✂ नवौं संशोधनद्वारा झिकिएको ।

अधिकारको सबैभन्दा नजिकको अर्को अड्डामा यस अड्डाबाट यति कारणले हेर्न नहुने हुनाले त्यस अड्डाबाट हेरी कानून बमोजिम गरिदिनु भन्ने कारण समेत खोली लेखोटसाथ पठाई झगडियालाई पनि सोही अड्डामा जानु भनी सुनाई तारिख तोकी मिसिल समेत सोही अड्डामा पठाई दिनु पर्छ र सो अड्डाले पनि बुझिलिई आफ्नो अधिकार क्षेत्रभित्रको नभएपनि कानून बमोजिम हेरिदिनु पर्छ - - - - - - २

३१ नं. ॥ ॥ अड्डाका कुनै कर्मचारीका नाउँमा घूस खायो भनी नालिस दिंदा सो अड्डाको पुनरावेदन सुन्ने अड्डामा दिनु पर्छ । सो अड्डाले पनि कानून बमोजिम कारबाही किनारा गर्नु पर्छ । घूसको नालिस परे पनि सोभन्दा अगावै अड्डामा परेको मुद्दा भने फैसला नभई सर्न सक्तैन । जुन मुद्दामा घूस खायो भनेको हो सो मुद्दा फैसला भएपछि पुनरावेदन नदिए पनि फैसला र मिसिल समेत पठाइदिनु भनी पुनरावेदन सुन्ने अड्डाले लेखी पठाई झिकाई सो मिसिल पाएपछि इन्साफ जाँची कानून बमोजिम गर्नु पर्छ ।

३२ नं. ॥ ॥ साक्षी सरजमीन बाहेक अरुका नाउँमा घूसको नालिस दिंदा मुद्दामा भए जुन अड्डामा परेको मुद्दामा घूस खायो भनेको हो सो अड्डाबाट सो मुद्दा फैसला भएको मितिले र अरु कुरामा भए सो कुरा गरे भएको मितिले छ महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

✂३३ नं. ॥ ॥ कुनै मुद्दामा साक्षी वा सरजमीनले घूस खाई बक्यो भनी नालिस दिंदा सो बकेको पन्ध्र दिनभित्र दिनु पर्छ । त्यस्तो नालिस पर्दैमा सो साक्षी सरजमीन बकेको मूल मुद्दाको कारबाही किनारा गर्न बाधा हुने छैन । झुटा बकेकोमा सो वापत सोही मूल मुद्दाबाट सजाय हुनेछ ।

✂३४ नं. ॥ ॥ मुद्दामा विदेशमा रहे बसेको कोही व्यक्तिको नाउँमा समाव्हान, इतलायनामा, म्याद वा बन्दसवाल जारी गर्नु परेमा वा निजसँग केही बुझ्न परेमा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - -

नेपाल बाहिर बसेको कोही व्यक्तिको नाममा समाव्हान, इतलायनामा, म्याद वा बन्दसवाल जारी गर्न आवश्यक नै देखेमा यस सम्बन्धमा नेपाल सरकारले नियम बनाई व्यवस्था गरे बमोजिम जारी गरी तामेल गर्न पठाउनु पर्छ । त्यसरी जारी तामेल हुन नसकी त्यस्तो बुझ्नु पर्ने व्यक्ति बुझ्न नसकिए पनि कानून बमोजिम मुद्दाको कारबाही फैसला गर्न रोकिने छैन - - - - - - - - - - - - - - - - - - १

नेपाल बाहिरको अदालतले जारी गरेको समाव्हान, इतलायनामा, म्याद वा बन्दसवाल तामेल गरी पठाउँदा यस सम्बन्धमा नेपाल सरकारले नियम बनाई व्यवस्था गरे बमोजिम पारस्परिकताको आधारमा मात्र तामेल गरी पठाउनु पर्छ - - २

३५ नं. ॥ ॥ गैह्र अड्डाले कानून बमोजिम आफूले हेर्न हुने मुद्दा बाहेक अरु मुद्दा हेर्न हुँदैन । हेरे छिनेको भएपनि बदर हुन्छ ।

३६ नं. ॥ ॥ ऐनमा हदम्याद नलेखिएको कुरामा जहिलेसुकै नालिस दिए पनि लाग्न सक्छ ।

३७ नं. ॥ ॥ ⁾.......................... राजकाज सम्बन्धी वा सरकारी धनमाल चोरी मुद्दामा नालिस दिनालाई हदम्याद हुँदैन ।

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

⁾ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

३८ नं. ॥ ॥ जोर जुलूम करकाप गरी कागज गरे गराएमा आफूलाई फुर्सत भएका मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

३९ नं. ॥ ॥ ऐनमा हदम्याद लेखिएकोमा सो हदम्यादभित्र नालिस दिए हेर्नु पर्छ । सो हदम्याद नाघेपछि अड्डामा ल्याएकोमा भए लाग्दैन । हदम्यादभित्र दिन नपाएको ऐन बमोजिमको कारण भए प्रमाण समेत पुऱ्याई आजको पन्ध्र दिनभित्र ल्याउनु भनी पीठमा लेखी छाप लगाई यस कारणले फिर्ता बुझिलिएको भनी बुझिलिनेको भरपाई गराई फिर्ता दिनु पर्छ । सो पन्ध्र दिनभित्र नल्याए नालिस लाग्दैन । हदम्यादभित्र नालिस दिन नपाएको कारण लेखी सो पन्ध्र दिनभित्र ल्यायो र बुझ्दा ऐन बमोजिमको कारण ठहरे दर्ता हुने भनी पर्चा खडा गरी राखी पहिले कारणको प्रमाण बुझी ठहऱ्यो भने नालिस दरी हेर्नु पर्छ । ऐन बमोजिमको कारण रहेनछ भने नालिस लाग्दैन भनी पीठमा लेखी सहीछाप गरी भरपाई गराई नालिस फिर्ता गरिदिनु पर्छ ।

४० नं. ॥ ॥ हदम्यादभित्र नालिस गर्नु पर्ने मानिस सोह्र वर्ष नाघेको रहेनछ भने सोह्र वर्ष नाघेका दिनदेखि हदम्यादसम्म नालिस दिए लाग्छ । सो नाबालक सोह्र वर्ष नपुग्दै मऱ्यो भने सो मरेको दिनदेखि हदम्यादसम्म मर्नेको हकवालाले नालिस गरे लाग्छ ।

४१ नं. ॥ ॥ हदम्यादभित्र नालिस गर्नु पर्ने मानिस हदम्याद शुरु हुने बखतमा होस् ठेगान नभै बेहोस् भएको वा बौलाएको रहेछ भने सो निको भई सद्दे भएका दिनदेखि ऐनको हदम्यादसम्म नालिस दिए लाग्छ । हदम्याद शुरु भइसकेपछि मात्र होस् ठेगान नभै बेहोस भएको वा बहूलाएको रहेछ भने जति दिन सो भएको छ सो निको भई सद्दे भएपछि ऐनको हदम्याद पुगेको त्यति दिनसम्ममा नालिस दिए लाग्छ ।

४२ नं. ॥ ॥ हदम्यादभित्र नालिस गर्नु पर्ने मानिस हदम्याद शुरु हुने बखतमा होस् ठेगान नभई बेहोस भएको वा बौलाएको सद्दे नभई मऱ्यो भने सो मरेका दिनदेखि हदम्यादसम्म मर्नेको हकवालाले नालिस दिए लाग्छ । हदम्याद शुरु भईसकेपछि मात्र होस् ठेगान नभई बेहोस भएको वा बौलाएको मरेको रहेछ भने जति दिन सो भई मरेको छ हदम्याद पुगेको त्यति दिनसम्म मर्नेको हकवालाले नालिस दिए लाग्छ ।

४३ नं. ॥ ॥ हदम्यादभित्र नालिस गर्नु पर्ने मानिस सरकारी काजमा खटिई अन्त कही जाँदा वा आफू असाध्य भई थलिंदा वा केही व्यहोराले कही थुनिदा हदम्याद नाघेछ भने काजबाट फर्की आइपुगेका वा निको भएका वा फुर्सद भएका पैंतीस दिनभित्र नालिस दिए लाग्छ ।

४४ नं. ॥ ॥ हदम्यादभित्र नालिस गर्नु पर्ने मानिसको सो म्यादभित्र नालिस दिन नपाउने पेच गर्दा हदम्याद नाघेको रहेछ भने आफूलाई फूर्सद भएको पैंतीस दिनभित्र नालिस दिए लाग्छ ।

४५ नं. ॥ ॥ हदम्याद पुग्ने वा म्याद तारिखमा हाजिर हुनु पर्ने वा कुनै कागज दाखिल गर्नु पर्ने दिन अड्डाको तातिल परे [λ]तातिल पछि अड्डा खुलेको पहिलो दिनमा हाजिर हुने दाखिल गर्नेको हदम्याद वा म्याद तारिख गुज्रन सक्दैन ।

४६ नं. ॥ ॥ हदम्याद वा म्याद तारिखको वा अरु कुनै किसिमले दिनको हिसाब गर्नु पर्दा यति दिन भनी दिन तोकिएको जतिमा दिन गन्ती र यति महिना वर्ष भन्ने तोकिएकोमा जति दिनको महिना भएपनि सक्रान्तिले हिसाब गर्नु पर्छ ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

४७ नं. ॥ ॥ ऐनले थुनी पुर्पक्ष गर्नु पर्नेलाई वा तारिख लाग्दैन भन्ने लेखिएकालाई बाहेक अरु झगडियालाई हाजिर हुन आउनासाथ तारिखमा राखी पुर्पक्ष गर्नु पर्छ ।

४८ नं. ॥ ॥ तारिख दिनु पर्नेलाई तारिख दिंदा यसै महलको ४९ नम्बरको नमूना बमोजिमको तारिख पर्चा लेखी शिरमा अड्डाको छाप लगाई यो काम गर्नालाई यस टायममा यस अड्डामा वा फलाना ठाउँमा हाजिर हुन आउनु भनी तारिख तोकी तारिख पिच्छे सो तारिख तोक्ने कर्मचारीले दस्तखत गरी तारिख पाउनेलाई दिई सो व्यहोराको भरपाई गराई मिसिल सामेल राख्नु पर्छ ।

४९ नं. ॥ ॥ तारिख दिने पर्चाको नमूना

फलाना अड्डाबाट जारी भएको

तारिखको पर्चा -------------

वादी फलाना प्रतिवादी फलाना

मुद्दा फलाना

फलानाको नाउँको तारिख

फलाना मितिमा

फलाना काम गर्नालाई फलाना दिन यति बजे हाजिर हुन आउनु ।

५० नं. ॥ ॥ तारिख तोक्दा अड्डाखानाको ठेकिएको तातिलको दिन पर्ने गरी तोक्न हुँदैन ।

५१ नं. ॥ ॥ फिरादपत्र दर्ता भएपछि प्रतिवादीले पाउने दिन तीस र बाटाका म्याद समेत अन्जाम गरी वादीलाई भरसक प्रतिवादी पर्ने दिनको तारिख तोक्नु पर्छ । सो तारिख र प्रतिउत्तर परेको तारिख मिलेन भने प्रतिउत्तर परेपछि वादीले जुन दिनको तारिख लिएकोछ प्रतिवादीलाई पनि सोही दिनको तारिख तोकी त्यसपछि दुवै थरलाई एकै दिनको तारिख मिलाई तोक्नु पर्छ ।

५२ नं. ॥ ॥ वारेस दिएमा बाहेक एकै मानिसको मुद्दा परेको अड्डादेखि चार कोशभित्रको अरु अड्डामा पनि मुद्दा परेको रहेछ र सो कुरा झगडियाले भन्यो भने त्यस्तालाई तारिख तोक्दा अरु अड्डाको एकै दिनको तारिख पर्ने गरी तोक्न हुँदैन ।

५३ नं. ॥ ॥ तारिख तोक्दा यसै नम्बरमा लेखिएका नमूना बमोजिम किताब खडा गरी जुन दिन जे काम गर्नालाई तारिख तोकिन्छ तारिख भरपाईमा र झगडियालाई दिने तारिख पर्चामा समेत सो व्यहोरा जनाई तारिख दिई जुन काम कारबाहीलाई तारिख तोकिएकोछ सो काम कारबाहीको तारिख किताबको कोठामा मुद्दाको नम्बर लेखी अरु आवश्यक व्यहोरा जनाई तोकिएको तारिखको दिन झगडिया हाजिर भएपछि तोकिए बमोजिमको काम कारबाही गर्नु पर्छ । केही मनासिब माफिकको कारणले तोकिएको तारिखको दिन कारबाही गर्न नपाउने वा नभ्याउने भयो भने सोही व्यहोरा जनाई जुन दिन काम हुन्छ उस दिनको तारिख तोकी तारिख किताबमा तारिख

तेस्रो संशोधनद्वारा संशोधित ।

सरेको व्यहोरा कैफियत लेखी हाकिम हाजिर भए हाकिमले र हाकिम हाजिर नभए ऊ मुनिको सबैभन्दा ठूलो दर्जाको कर्मचारीले दस्तखत समेत गरी तोकिदिने गर्नु पर्छ ।

## शुरु कारबाही गर्नु पर्ने मुद्दाको
## तारिख किताब

| साल महिना | | प्रतिवादीलाई समाव्हान इतलायनामा जारी गर्नाके | प्रतिवादी पर्ने | प्रमाण मुकरर गर्ने | प्रमाण बुझ्नाके | | | छलफल गर्नाके | फैसला गर्नाके | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | कागज | साक्षी | नापी नक्सा सरजमीन बुझ्नाके | | | |
| गते | वार | | | | | | | | | |
| | | | | | | | | | | |
| | | | | | | | | | | |

पुनरावेदन साधक परेका मुद्दाको
तारिख किताब

| साल महिना | | मिसिल झिकाउने | | प्रमाण बुझ्नाके | | | | छलफल गर्नाके | फैसला गर्नाके | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | कागज | साक्षी | नापी नक्सा सरजमीन बुझ्नाके | झगडिया झिकाउने | | | |
| गते | वार | | | | | | | | | |
| | | | | | | | | | | |
| | | | | | | | | | | |

❐५४ नं. ॥ ॥ मुद्दामा हाजिर हुने मानिस अड्डाबाट थुनिए कैद परेको रहेछ भने म यस अड्डाबाट फलानासँगका फलाना मुद्दामा थुनिए कैद परेकोछु भनी मुद्दा परेकै अड्डामा लेखी पठाएको भए के व्यहोराले कैद परे थुनिएको कहिलेसम्ममा छुट्ने रहेछ सबै कुरा बुझी थुन्ने कैद गर्ने अड्डामा दरखास्त दिएको भए यस व्यहोराले यस अड्डाबाट थुनिए कैद परेकोछ यस बखतसम्ममा छुट्छ भनी छुट्ने देखिएको मिति खोली र छुट्ने अवस्था खुल्न नसके सोही व्यहोरा लेखी निजको दरखास्त मुद्दा परेको अड्डामा पठाई दिनु पर्छ । सो व्यहोरा लेखी आएपछि मुद्दा परेको अड्डाबाट पनि एक महिनासम्ममा छुट्ने रहेछ भने छुटेको मितिले बाटाका म्याद बाहेक पाँच दिनसम्ममा थुनिने कैद हुने मानिस हाजिर भए ऐन बमोजिम तारिख तोकी कारबाही गर्नु पर्छ । एक महिनाभन्दा बढी कैद परे थुनिएको वा यो अवस्थासम्ममा छुट्ने भन्ने अन्जाम नभएमा र नछुट्ने अवस्थामा परी थुनिए कैद परेकोमा भने कारबाही नगरी पर्खी रहन हुँदैन । निजलाई झिकाउनै परे कानूनको रीत पुऱ्याई झिकाई वा जो बुझ्नु पर्ने बुझी कारबाही गर्नु छिन्नु पर्छ । कारबाही गर्दा गर्दै छुटेकोमा भए छुटेका मितिले बाटाका म्याद बाहेक पाँच दिनभित्र हाजिर भए तारिखमा राखी कारबाही गर्नु पर्छ ।

❐५५ नं. ॥ ॥ मुद्दामा झगडियाले म्याद तारिख गुजारेमा पनि यसै महलको ५९ नम्बर बमोजिम थमाई पाउने म्यादसम्म फैसला गर्नु हुँदैन ।

५६ नं. ॥ ॥ ✖ ... ... ...

५७ नं. ॥ ॥ मुद्दा परी तोकिएको म्याद तारिखमा हाजिर हुनु पर्ने सरकारी कर्मचारीले घर बिदा पाई जानलाई घर बिदाको निकासाको सूचना दिने अधिकारीबाट यति दिन घर बिदा पाएका छन् भन्ने मुद्दा परेका अड्डाका नाउँमा पूर्जी गराई लिई जानु पर्छ । मुद्दा परेका अड्डाले पनि घर बिदाको पूर्जी ल्याउनासाथ उसले पाएका घर बिदाको दिनमा सात दिन थपी तारिख तोकिदिने गर्नु पर्छ । घर बिदा पाई गैसकेको अवस्थामा सो मानिसका नाउँमा नालिस परी घर बिदाको दिनभित्र अड्डामा हाजिर हुनु पर्ने म्याद तारिख परी सो म्याद तारिख गुज्रन गएमा पनि घर बिदाका दिन पुगी हाजिर हुनु पर्ने दिनदेखि सातदिनभित्र मुद्दा परेका अड्डामा हाजिर भई घर बिदा गएको भनी दरखास्त दियो भने बुझी पाएका घर बिदाका दिनभित्रमा म्याद गुज्रन गएको रहेछ भने म्याद तारिख थामिदिनु पर्छ ।

५८ नं. ॥ ॥ म्याद तारिखमा हाजिर हुनु पर्ने सरकारी कर्मचारी सरकारी काजमा खटिएमा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - -

जुन अड्डाको आदेश पूर्जीले काज खटिने भएकोछ उसै अड्डामा गै काजमा खटिएको जनाउ मुद्दा परेका अड्डालाई गरी पाउँ भनी दरखास्त गर्नु पर्छ । त्यस्तो दरखास्त गर्न आएमा अड्डाबाट पनि म्याद तोकी काज खटिएकोमा म्याद तोकी र म्याद नतोकिएकोमा खटिई गएका कामको अन्दाजले हाकिमको तजबीजले यति दिन वा महिनासम्म लाग्ला भनी तुरुन्तै पूर्जी लेखी मुद्दा परेको अड्डामा पठाई दिनु पर्छ । सो जनाउ आएपछि मुद्दा परेको अड्डाले तारिखको दिन नपरे पनि काजमा लाग्ने दिन र ऐन बमोजिम आउँदा जाँदा बाटोमा लाग्ने दिन समेतमा सात दिन थपी तारिख तोकी दिनु पर्छ । सो मुद्दाको अड्डामा हाजिर रहेका अरु झगडियालाई

---

❐ तेस्रो संशोधनद्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

तारिखको दिन तारिख तोक्दा पनि सोही काजमा जानेले लगेको मिति पारी तारिख तोक्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

आदेश पूर्जी हुनासाथ तुरुन्त जानु परेमा वा खटाउने अड्डादेखि टाढा बसेको कर्मचारी टाढैबाट जानु परेमा वा काजैबाट अर्को काजमा खटिई जानु परेमा वा खटिएको काजमै बस्नु पर्ने भएमा भने यस्तो कारण परी तोकिएको म्याद तारिखमा हाजिर हुन सकिन भनी मुद्दा परेका अड्डामा र खटिएको जनाउ मुद्दा परेका अड्डालाई गरी पाउँ भनी खटाउने अड्डामा दरखास्त पठाए पनि हुन्छ । त्यस्तो दरखास्त आएमा सो अड्डाहरुले पनि माथि १ दफा बमोजिम गरी जनाउ दिने र तारिख तोक्ने गर्नु पर्छ । काजमा जाने झगडियालाई तोकेको तारिख काजैमा पाउने गरी पठाई भरपाई लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - २

λ५९ नं. ॥ ॥ कुनै मुद्दामा आफ्नो काबु बाहिरको परिस्थितिले गर्दा म्याद तारिख गुज्रेमा एकै पटक वा तीन पटकसम्म गरी बढीमा तीस दिनसम्मको गुज्रेको म्याद तारिख थामिन सक्तछ । ☙... ... ... तर यसै महलको ६२ नम्बर र १७५ नम्बरमा लेखिए जतिमा सोही बमोजिम हुनेछ ।

λ६० नं. ॥ ॥ मुद्दा दायर गरी तारिख लिई सकेपछि तारिख गुजारेकोमा पटक कायम गर्दा म्याद थमाएको पटकको हिसाब गरी पटक कायम गर्न हुँदैन, तारिख लिई गुजारेको मितिदेखि मात्र पटकको हिसाब गरी कायम गर्नु पर्छ ।

६१ नं. ॥ ॥ मुद्दा फैसला गर्दा किनारा लगाउनु पर्ने जति जम्मै कुराको एकै पटक किनारा नलगाई वा खारिज नहुने खारिज गरी फैसला गरेको भै उसै अड्डामा इन्साफ गर्न पठाएको मुद्दामा वा यसै महलको १२ नम्बर बमोजिम मुलतबी रहेको बाहेक अरु कुनै प्रकारले मुलतबी रहेका मुद्दामा कारबाही गरी फैसला गर्ना निमित्त अघि तारिखमा रहेकालाई फेरी तारिखमा राखी पुर्पक्ष गर्नु पर्ने हुन आएमा अघि तारिखमा रहेको बखत लिइसकेको ►........ म्याद तारिख गुज्रेका पटकको हिसाब गर्न हुँदैन ।

❒६२ नं. ॥ ॥ देहायका अवस्थामा म्याद तारिख गुज्रेमा देहाय बमोजिम गर्नु पर्छ : - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

म्याद तारिखमा हाजिर हुने व्यक्तिको कोही मरी क्रिया बस्नु परेमा क्रिया समाप्त भएको मितिले बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र अड्डामा हाजिर भै निवेदनपत्र दिएमा म्याद तारिख थामी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - १

म्याद तारिखमा हाजिर हुनु पर्ने स्वास्नीमानिस सुत्केरी भै म्याद तारिख गुज्रेकोमा सुत्केरी भएको मितिले बाटाका म्याद बाहेक पैंतीस दिनभित्र अड्डामा हाजिर भै निवेदनपत्र दिएमा म्याद तारिख थामी दिनु पर्छ - - - - - - - - - - - - - - - २

ऐनले विगो भर्नु भराउनु, दिनु दिलाउनु वा सम्पत्ति चलन चलाउनु लिनु पर्ने मुद्दाका म्याद तारिखमा हाजिर हुनु पर्ने व्यक्ति मरी वा बौलाहा वा बेपत्ता भई म्याद तारिख गुज्रेमा मरी वा बौलाहा वा बेपत्ता भएको मितिले बाटाका म्याद बाहेक पैंतीस दिनभित्र निजको दैयादारले म्याद तारिख थामी मुद्दा सकार गर्न अड्डामा हाजिर भै

---

λ नवौं संशोधनद्वारा संशोधित ।

☙ दशौं संशोधनद्वारा झिकिएको ।

► तेस्रो संशोधनद्वारा झिकिएको ।

❒ तेस्रो संशोधनद्वारा संशोधित ।

निवेदनपत्र दिएमा म्याद तारिख थामी दिई मुद्दा सकार गराई दिनु पर्छ ⬆<u>तर मरी वा बौलाहा वा वेपत्ता भएको मितिको पैंतीस दिनपछिको म्याद तारिख तोकिएको रहेछ भने सो तोकिएको तारिखको दिन अड्डामा हाजिर भै मुद्दा सकार गर्नको लागि निवेदनपत्र दिए पनि सकार गराई दिनु पर्छ</u> - - - - - - - - - - - - - - ३

म्याद तारिखमा हाजिर हुनु पर्ने व्यक्ति सरकारी काजमा खटिई म्याद तारिख गुज्रेको सो व्यक्ति म्याद तारिख गुज्रेको मितिले पैंतीस दिनभित्र अड्डामा हाजिर हुन आएमा वा काजमा खटाउने अड्डाले लेखी पठाएमा अड्डैबाट पर्चा खडा गरी म्याद तारिख थामी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - ४

▩खोलो, पहिरो वा हिउँले बाटो बन्द भई वा कर्फ्यूको घोषणा भएको वा अन्य कुनै व्यहोराले यातायातको साधन नचलेको कारणबाट वा भूकम्प आदि जस्ता दैवी प्रकोप परेको कारणबाट तारिखमा हाजिर हुनु पर्ने व्यक्ति हाजिर हुन नसकी तारिख गुज्रेकोमा सम्बन्धित गाउँपालिका वा नगरपालिका वा सरकारी अड्डाबाट सो भएको व्यहोरा खुलाइएको निस्सा लिई बाटो खुलेको वा यातायातको साधन चलेको वा दैवी परेकोमा सो भएको मितिले बाटाको म्याद बाहेक दश दिनभित्र हाजिर भै निवेदनपत्र दिएमा म्याद तारिख थामी दिनु पर्छ - - - - - - - - - - - - - - - ५

६३ नं. ॥ ॥ ✖... ... ...

⌘६४ नं. ॥ ॥ तारिख पाउनेले तोकिएको तारिखका दिन तोकिएको ठाउँमा तोकिएको समयदेखि तारिख तोकिलिन नसकुन्ज्यालसम्म हाजिर भईरहनु पर्छ । तोकिएको समयमा तारिखमा हाजिर हुनु पर्ने झगडिया हाजिर भएन भने अड्डाले पर्खिरहनु पर्दैन । कानून बमोजिम मुद्दाको कारबाही गर्नु पर्छ । तोकिएको समयमा हाजिर नहुनेको तोकिएको तारिखको दिन तारिखमा लेखिएको काम भएन भन्ने कुराको उजूर लाग्न र अड्डा उठ्ने समय नाघी अड्डा उठिसकेपछि आउनेको तारिख थामिन सक्तैन ।

६५ नं. ॥ ॥ मुद्दामा वारिस दिंदा लिंदा देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - -

कानून बमोजिम पुर्पक्षका लागि थुनामा बस्नु पर्ने वा जमानत लाग्ने अवस्थामा जमानत दिन नसकी थुनामा बस्नु पर्ने भएको व्यक्तिले वारिस राख्न पाउँदैन । सो बाहेक जमानत लाग्ने अवस्थामा कानून बमोजिम जमानत दिने व्यक्तिले अड्डाबाट वारिस राख्न दिन मनासिब ठहराई इजाजत दिएमा वारिस राख्न पाउँछ - - - - - १

माथि १ दफामा लेखिएदेखि बाहेक अन्य अवस्थाको व्यक्तिको हकमा पर्याप्त कारणबाट अड्डाले वारिस राख्न दिन मनासिब नठहराई अन्यथा आदेश दिएमा बाहेक साधारणत: वारिस राख्न हुन्छ । देवानी मुद्दामा भने वारिस राख्न नपाउने गरी अड्डाले आदेश दिने छैन - - - - - - - - - - - - - - - - - - - - - - - २

✂ऐन बमोजिम वारिस दिंदा मेरो फलानासँगको फलाना मुद्दामा पुर्पक्ष गर्नलाई मेरो सट्टामा ऐनले दिन हुने फलानालाई वारिस गरी पठाएकोछु । निजले मुद्दा हारे

---

⬆ दशौं संशोधनद्वारा थप ।

▩ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

जितेमा मेरो मञ्जुर छ । मुद्दा फैसला हुँदा म आफै हाजिर भई जो परेको बुझाउँला अदालतबाट लागेको दण्ड, जरिबाना, दशौंद, आदेशले बाँकी रहेको कोर्ट फी, सरकारी विगो मैले बुझाउन बाँकी छैन नबुझाई बाँकी राखेको ठहरे यो अख्तियारनामा बदर गरी मुद्दा कानून बमोजिम होस् भन्ने वारिस दिनेको अख्तियारनामा र वारिस हुनेको पनि म फलानाको फलाना मुद्दामा ऐन बमोजिम वारिस भएँ । अदालतबाट लागेको दण्ड, जरिबाना, दशौंद, सरकारी विगो, आदेशले बाँकी रहेको कोर्ट फी मैले बुझाउन बाँकी छैन भन्ने सकारनामा कागज गराई लिई सो वारिसबाट कुरा बुझी अड्डाका रोहले सो मुद्दामा जुन कागज गराउन परे पनि सोही वारिसको कागज गराई मुद्दा हेर्नु पर्छ । अदालतबाट लागेको दण्ड, जरिबाना, दशौंद, सरकारी विगो, आदेशले बाँकी रहेको कोर्ट फी केही बाँकी रहेको पछि देखिन आए वारिस दिनेसँग बाँकी देखिए सो वारिस मार्फत नै वारिस दिनेलाई सात दिनको म्याद दिई झिकाई हाजिर भए एकसय रुपैयाँसम्म जरिबाना गरी बाँकी दण्ड, जरिबाना, सरकारी विगो, कोर्ट फी समेत असूल गरी र हाजिरै नभए वारिस बदर गरी मुद्दा कानून बमोजिम गर्नु पर्छ । वारिस हुनेसँग बाँकी देखिए त्यस्ता वारिस हुनेलाई अदालतले एक सय रुपैयाँ जरिबाना गर्नु पर्छ । त्यस्तो जरिबानाको कारणले वारिसनामा बदर हुने छैन - - - - - - - - - - - - - - - - - - - ३

वारिस राखेका मुद्दामा मिलापत्र गर्दा झगडिया आफै हाजिर भई गर्नु पर्छ । आफू हाजिर हुन जान नसक्नेले मेरो यस्तो जिकिर भएको फलानासँगको फलाना मुद्दामा यस हिसाबसँग मिलापत्र गर्नामा मेरो मञ्जुर छ मेरो वारिस फलानाद्वारा मिलापत्र होस् त्यसमा मेरो मञ्जुर छ भन्ने समेत व्यहोराको मञ्जुरीको लिखत लेखी ऐन बमोजिमको रीत पुऱ्याई कागज भएको ठाउँ समेत किटी आफ्नू र सो कागजमा आफूले सहीछाप गरेको देख्ने कम्तीमा दुई जना साक्षी र कागज लेख्ने लेखकको समेत फड्के किनारामा सहीछाप गराई सो मञ्जुरीको कागज र ऐनले लाग्ने बक्सौनी समेत मुद्दा परेको अड्डामा वारिसद्वारा पठाई दिनु पर्छ । लेखिए बमोजिम मञ्जुरीको लिखत गरी पठाई दिएकोमा अड्डाबाट पनि सो मञ्जुरीको लिखत बमोजिम गरी मिली जानामा अरु झगडियाले पनि मञ्जुर गऱ्यो भने ऐन बमोजिमको रीत पुऱ्याई ऐनले लाग्ने बक्सौनी लिई मिलापत्र गराई दिनु पर्छ । लेखिए बमोजिम वारिस राख्ने झगडियाको मञ्जुरीको लिखत नभई त्यसै वारिसद्वारा मिलापत्र गरे गराएको सदर हुँदैन - - - - - - - - - - - - - - - - - - - ४

विगो खोलिएको देवानी मुद्दामा ऐन बमोजिम वारिस दिंदा बाबु आमाले छोरालाई र स्वास्नीले लोग्नेलाई र अंश मानु नछुट्टिई सँग बसेका जहानलाई वारिस दिंदा बाहेक सो वारिस दिने वादी वा प्रतिवादी दुवै थरीले वादीले पक्रेको विगोको सयकडा पाँच रुपैयाँको दरले नगद धरौट राखे मात्र वारिस लाग्न सक्तछ । सो धरौट नराखे आफै हाजिर रही पुर्पक्ष गर्नु पर्छ । सो माथि लेखिएकालाई वारिस दिंदा र विगो नखोलिएको देवानी मुद्दामा र अरु वारिस लाग्ने फौजदारी मुद्दामा र विगो खुलेकै मुद्दामा पनि पुनरावेदन दिनालाई वारिस दिंदा भने धरौट राख्न पर्दैन । सो मुद्दा डिसमिस खारिज समेत गैह्र किसिमबाट फैसला हुँदा ऐन बमोजिम लाग्ने ठहरेको सजाय समेत जो लिनु पर्छ सो धरौट रहेकोबाट असूल गरी बढ्ता भए फिर्ता दिनु पर्छ । धरौट रहेकोले नपुग्ने भए ऐन बमोजिम झगडियाबाटै असूल गर्नु पर्छ- - - - ५

वारिस रहेको मुद्दा डिसमिस खारिज समेत गैह्र किसिमबाट फैसला हुँदा झगडियालाई लागेको विगो, जरिबाना, कैद समेत गैह्रमा झगडियालाई नै पक्री ऐन बमोजिम गर्नु पर्छ । वारिसलाई पक्रन हुँदैन - - - - - - - - - - - - - - - - ६

६६ नं. ॥ ॥ नेपाल सरहदमा अचल सम्पत्ति ज्यथा नभएका विदेशी मानिसको नेपालका अड्डामा परेको ऐनले वारिस दिन पाउने मुद्दामा वारिस दिंदा आफूले दावी गरेको ठहरेमा वा आफू उपर पोल उजूर परेको कुरा ठहरे लाग्ने ऐन बमोजिम सजाय धरौट राखेमा वा त्यस वापत नेपाल सरहदमा अचल सम्पत्ति ज्यथा भएको मानिसलाई जमानी दिए मात्र वारिस लाग्न सक्छ ।

६७ नं. ॥ ॥ अड्डामा दाखिल गर्न ल्याएको अख्तियारनामा ऐन बमोजिमको रीत पुगेको नभए यो यती रीत पुगेको छैन यति रीत पुऱ्याई ल्याए लाग्नेछ भनी तीन दिनको म्याद दिई सो अख्तियारनामाकै पीठमा लेखी अड्डाको छाप लगाई भरपाई लिई फिर्ता दिनु पर्छ । रीत पुऱ्याई ल्याएकोमा अत्तो लगाई फिर्ता दिनु हुँदैन ।

६८ नं. ॥ ॥ ऐनले वारिस लाग्ने मुद्दामा वारिस अख्तियार दिंदा लिंदा सोह्र वर्ष उमेर पुगेका देहायका व्यक्तिलाई वारिस दिन लिन हुन्छ - - - - - - - -

एकाघरसँग रहे बसेका नातेदारहरुमध्ये जोसुकैलाई - - - - - - - - - - - - - - - १

✂अरुका हकमा घूस कीर्तेमा सजाय पाएको र सो बाहेक नैतिक पतन देखिने अन्य फौजदारी अपराधमा सजाय पाएको व्यक्ति बाहेक जोसुकै व्यक्तिलाई - - - - - - - २

६९ नं. ॥ ॥ ऐनले वारिस दिन पाउने चार कोशभित्रका अड्डामा परिरहेको वा पर्ने मुद्दामा ऐनले वारिस दिन हुने मानिसलाई देहाय बमोजिम वारिस दिन लिन हुन्छ । चार कोशभन्दा टाढाका अड्डामा परेका मुद्दामा वारिस भैरहेकालाई अर्को अड्डामा परेको मुद्दामा वारिस दिन लिन हुँदैन । वारिस भैरहेको मानिस कुनै मुद्दामा थुनियो कैद भयो भने थुनामा रही अर्काको मुद्दा गर्न पनि पाउँदैन - - - - - - - -

एकै मानिसको एक अड्डामा जतिसुकै मुद्दा परे पनि सबै मुद्दामा एउटै मानिसलाई वारिस लिन दिन हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - १

धेरै मानिसको एउटै अड्डामा परेको एउटै मुद्दामा सबै मानिसले एउटैलाई वा पृथक पृथकले पृथक पृथकलाई भएपनि वारिस लिन दिन हुन्छ - - - - - - - - २

एक अड्डामा परेको एउटै मुद्दाका वादीहरुले वादीहरुमध्येकै र प्रतिवादीहरुले प्रतिवादीहरुमध्येकै मानिसलाई वारिस दिन लिन हुन्छ - - - - - - - - - - - - - - ३

एकै अड्डामा एउटाको मुद्दामा वारिस भैरहेकालाई वारिस भैरहेका मुद्दा फैसला नहुँदै वा वारिस कायम छँदै त्यसै अड्डामा परिरहेका वा पर्ने ✂अरु मुद्दाको झगडियाले पनि वारिस लिन दिन हुन्छ - - - - - - - - - - - - - - - - - - - ४

एक अड्डामा परिरहेका मुद्दामा राखेका वारिसलाई वारिस कायम छँदै सोही वारिसलाई सो वारिस दिई राख्ने झगडियाले वा त्यसका एकाघरका जहानले चार कोशभित्रका अड्डामा परेका वा पर्ने अरु मुद्दामा वारिस दिन लिन हुन्छ - - - - ५

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

७० नं. ॥ ॥ अख्तियारनामा लेखी अर्कालाई वारिस दिएकोमा जसको झगडा हो उसैले वा ऊ मरेपछि उसका दैयादारले आफै सकार गर्न वा पहिलेको वारिस बदली अर्को वारिस राख्न पाउँछ ।

७१ नं. ॥ ॥ अख्तियारनामा दिएको वारिस बदली अर्को वारिस राख्न पर्दा मेरो फलानासँगको फलाना मुद्दामा फलाना ठाउँ बस्ने फलानालाई वारिस दिइराखेकोमा निज वारिसलाई यो कारण परी बदल्नु परेकोले निजलाई बदला गरी फलानालाई अख्तियारनामा गरी पठाएकोछु भन्ने समेत ऐन बमोजिमको व्यहोरा लेखी वारिस हुनेलाई दिई मुद्दा परेको अड्डामा पठाउनु पर्छ । मुद्दा परेको अड्डाबाट पनि सो बमोजिम वारिस गरी पठाएमा सो अख्तियारनामा मिसिल सामेल राखी ऐन बमोजिम अघि राखेको वारिस बदली पछिको वारिस कायम गरी काम कारबाही गर्ने गर्नु पर्छ ।

◆७१क. नं. ॥ ॥ वारिस दिन हुने मुद्दामा कुनै व्यक्तिले चाहेमा ऐनले वारिस दिन हुने जुनसुकै मानिसलाई आफ्नो तर्फबाट मुद्दा दायर गर्न प्रतिवाद गर्न र त्यस सम्बन्धी अन्य कानूनी कारबाही गर्न सक्ने गरी अख्तियारनामा लेखी अधिकृत वारिस मुकरर गर्न हुन्छ । अधिकृत वारिसले अख्तियारनामामा लेखिए बमोजिम कुनै खास मुद्दा किटान भएकोमा सोही मुद्दामा मात्र र त्यसरी मुद्दा किटान नभै सामान्य रुपमा अख्तियार दिएको भए दायर रहेको वा पछि दायर हुने वा गर्नु पर्ने जुनसुकै मुद्दामा सो अख्तियारनामामा लेखिएको काम कुरा गर्न सक्नेछ र आवश्यक परेमा आफूलाई अख्तियार दिइएको कुनै पनि मुद्दामा वारिस समेत राख्ने अधिकार हुनेछ । अधिकृत वारिस मुकरर भएको मुद्दामा मुकरर गर्ने व्यक्तिका नाउँमा जारी हुने समाव्हान, इतलायनामा, म्याद, पूर्जी वा सूचना अधिकृत वारिसलाई तामेल गर्न सकिनेछ ।

◆७१ख. नं. ॥ ॥ कुनै मुद्दा किटान नगरी सामान्य रुपको अख्तियारनामा दिई अधिकृत वारिस मुकरर गर्दा सो अख्तियारनामा नेपाल }........ भित्र भए कुनै जिल्ला न्यायाधीश र विदेशमा भए }...... नेपाली राजदूत वा वाणिज्यदूतको रोहवरमा लेखी निजद्वारा प्रमाणित गराउनु पर्छ र त्यसरी प्रमाणित गराउन आएमा जिल्ला न्यायाधीश वा }....... नेपाली राजदूत वा वाणिज्यदूतले पनि प्रमाणित गरी दिनु पर्छ । त्यसरी प्रमाणित नभएको अख्तियारनामाको कानूनी मान्यता हुने छैन ।

◆७१ग. नं. ॥ ॥ माथि ७१ख. नं. बमोजिम दिइएका अख्तियारनामा देहायको अवस्थामा बदर हुनेछ - - - - - - - - - - - - - - - - - - - - - -

म्याद किटान गरी सो म्यादसम्म मात्र अख्तियारनामा कायम रहने भन्ने व्यहोरा उल्लेख भएको भए सो म्याद भुक्तान भएपछि - - - - - - - - - - - - - - - - - १

कुनै खास घट्ना वा अवस्था भएपछि अख्तियारनामा कायम नरहने व्यहोरा उल्लेख भएको सो घट्ना वा अवस्था भएपछि - - - - - - - - - - - - - - - - - - - २

माथि लेखिए बाहेक अन्य अवस्थामा कुनै व्यक्तिले अख्तियारनामा बदर गराउन चाहेमा सो कुराको लिखित सूचना सम्बन्धित अधिकृत वारिसलाई दिई नेपालका कुनै दुई प्रमुख समाचारपत्रहरुमा सबै व्यहोरा खुलाई सूचना प्रकाशित गराएपछि - ३

---

◆ तेस्रो संशोधनद्वारा थप ।

◆ तेस्रो संशोधनद्वारा थप ।

} गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

७२ नं. ॥ ॥ फिरादपत्र लिंदा देवानी फौजदारी मुद्दाको छुट्टाछुट्टै लिनु पर्छ । सो बाहेक एउटै फिरादपत्रमा एउटै मानिसले एउटै मानिस उपर जतिसुकै झगडाका विषयको कुरा लेखी ल्याएको र जतिसुकै मानिसले जतिसुकै मानिस उपर एउटै झगडाका विषयको कुरा लेखी ल्याएको भएपनि लिई सो बमोजिम सबै कुराको सोही फिरादपत्रबाट इन्साफ गर्नु पर्छ । लेखिएभन्दा बढ्ता कुरा एउटै फिरादपत्रमा लेखी ल्याएको रहेछ भने फिरादपत्र फिर्ता गर्न भने हुँदैन । बढी जति लेखी ल्याएको कुराको यस फिरादपत्रबाट इन्साफ गर्न नपर्ने अरु अड्डा वा यसै अड्डाबाट अर्को फिरादपत्र दिए मात्र इन्साफ गर्नु पर्ने भनी सो फिरादपत्रबाट जति कुराको इन्साफ गर्नु नपर्ने हो उति कुरा सोही फिरादपत्रका शिरमा लेखी हाकिमले दस्तखत गरी सो इन्साफ गर्नु नपर्ने भएको जति कुरा फिरादपत्रवालालाई थाहा हुना निमित्त सोही फिरादपत्रको भरपाईमा लेखी दिनु पर्छ ।

७३ नं. ॥ ॥ फिरादपत्र दिंदा उही मानिसको नाउँमा एकै पटक एउटै नालिस दिए हुने मुद्दामा सो नगरी पहिले दिएका नालिसको रुप विचार गरी मात्र सो मुद्दाका सो रुपले अरु कुरामा पछि नालिस दिने नियत लिई यति कुरा मात्र यस नालिसबाट दिलाई भराई वा सजाय गरी पाउँ भनी वादी दिन र सो वादीमा छुटेको त्यस्तो किसिमको बाँकी रहेको मुद्दामा पछि वादी दिन समेत पाउँदैन ।

७४ नं. ॥ ॥ नालिस गरेको कुरा सावित वा झुट्टा ठहरे घटी बढी भने पक्रेमा समेत ऐनले मोल विगो तिरो समेतको हिसाबबाट सजाय हुने मोल विगो किटी नालिस दिनु पर्ने मुद्दामा मोल विगो कसी नालिस दिंदा लिंदा सरकारी र दुनियाँहरुको हकमा समेत घटीमा देहाय बमोजिम वादीबाट मोल विगो किटी किटाई नालिस लिनु दिनु पर्छ । अंशबण्डा गरी पाउँ भन्ने समेत ऐनले पछि फाँटवारी लिई मोल विगो खुलाई दिनु पर्ने मुद्दा जतिमा ऐन बमोजिम फाँटवारी दिएका बखतमा घटीमा देहाय बमोजिम मोल विगो कायम गरी ऐन बमोजिम गर्नु पर्छ - - - - - - - - - - - -

जग्गा पक्रेकोमा सो जग्गामा ठेकिएको तिरोको अङ्कले र तिरो नठेकिएको पर्ति बाँझो जग्गा वा अरु कुनै किसिमका जग्गा पक्रेमा आँठा सरहको तिरो कायम गरी छ रुपैयाँ तिरोको एकसय रुपैयाँका दरले - - - - - - - - - - - - - - - - - - - १

सरकारी जग्गा जमीन तिरो दवाई खाए खुवाए नोक्सान पारेको समेत नेपाल सरकारले भराई असूल गरी लिनु पर्ने वा बाँकी बक्यौता समेत बाली तिरो जिन्सी माल जतिको नगद लिनु पर्दा इलाकाको सरकारी माल गुठी समेत तहसील गर्ने अड्डामा बुझाउनु पर्नेमा सो अड्डाबाट जिन्सीको नगद तहसील गरी लिन दरबन्दी भएका जतिको जुन अड्डामा बुझाउनु पर्ने हो सोही अड्डाका दरबन्दी बमोजिमको दरले र दरबन्दी नभएका जतिको शहर गाउँ बजारमा चलेका दरले - - - - - - २

घर, पसल र त्यसले चर्चेको सन्धिसर्पन जग्गाको सो पाताल भएका ठाउँमा चलेका दरले - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

नेपाल सरकारले दुनियासँग, दुनियाँले नेपाल सरकारसँग र दुनियाँले दुनियाँसँग लिनु पर्ने गैह्र जिन्सी मालहरुको शहर गाउँ बजारमा चलेको दरले - - - - - - - ४

ज्याला मजुरी नोक्सानीको मोल विगो जुन ठाउँको ज्याला मजुरी नोक्सानी हो उसै ठाउँमा चलेका दरले - - - - - - - - - - - - - - - - - - - - - - - - - ५

बुझाउने बखत यस दरले दिने लिने भन्ने लिखत भएकोमा लिखतैमा लेखिएका दरले - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ६

७५ नं. ॥ ॥ फिरादपत्र वा प्रतिउत्तरपत्र दिंदा ⌘पचास रुपैयाँ दस्तुर लाग्छ ।

७६ नं. ॥ ॥ फिरादपत्र लिंदा यसै नम्बरका नमूना बमोजिमको लिनु पर्छ ।

## फिरादपत्र

आगे फलाना जिल्ला, मौजा, ठाउँ बस्ने अन्दाजी यति वर्षको फलानाले यो यो व्यहोरा गरेको हुनाले यस कुराको मेरो भएको तपसिलमा लेखिएको साक्षी प्रमाण बुझी ऐन बमोजिम इन्साफ भई सजाय मिलोस् वा यो यति परिबन्दले हो चीज यति भराई दिलाई पाउँ (जो भएको व्यहोरा प्रकरण छुट्याई लेख्नु लेखाई लिनु पर्छ ।)

## तपसिल

यस कुराको प्रमाण - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

साक्षी - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

## देखी जान्ने

फलाना जिल्ला, मौजा, ठाउँ बस्ने अन्दाजी वर्ष यतिको फलाना वा नाउँ नजानेको चिन्हेको - - - - - - - - - - - - - - - - - - -

## सुनी जान्ने

फलाना जिल्ला, मौजा, ठाउँ बस्ने अन्दाजी वर्ष यतिको फलाना वा नाउँ नजानेको चिन्हेको - - - - - - - - - - - - - - - - - - -

कागज - - - - - - - - -- - - - - - - - - - - - - - - - - - - - - -

फलानो मितिको फलाना व्यहोराको कागज फलाना ठाउँमा छ - - - - - - - - - -

फलाना जिल्ला, मौजा, ठाउँमा जन्म भै हाल फलाना जिल्ला, मौजा, ठाउँ बस्ने ❒फलानाको छोरा, छोरी, पति वा पत्नी यति वर्षको फलानाले अड्डामा चढाएँ । (दिनेको सहीछाप गर्नु गराउनु पर्छ)

इति संवत् २० … … … साल … … गते रोज … शुभम् ------------------

🗍७७ नं. ॥ ॥ लिखतको प्रकृतिबाट आफूसँग रहनु पर्ने वा आफूले प्राप्त गर्न सक्ने लिखत प्रमाणको सक्कल र त्यसको एकप्रति नक्कल वादीले उजुरीकासाथ र प्रतिवादीले प्रतिउत्तरपत्रका साथ वा बयान गर्दा पेश गर्नु पर्छ । सो बमोजिम उल्लेख वा

---

⌘ दशौं संशोधनद्वारा संशोधित ।

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

🗍 तेस्रो संशोधनद्वारा संशोधित ।

पेश नगरेको सबूत प्रमाण पछि बुझिने वा लाग्ने छैन, तर देहायका अवस्थामा देहाय बमोजिम हुन्छ - - - - - - - -- - - - - - - - - - - - - - - - - - - - - - -

नेपाल सरकार वादी हुने र हूलदङ्गा कुटपीट मुद्दामा फिरादपत्र वा प्रतिउत्तरपत्रमा लेखिएदेखि बाहेकका लिखित प्रमाण वा साक्षी वा सरजमीनका मानिस पनि बुझ्नु पर्ने देखिएमा अड्डाले झिकाई बुझ्नु हुन्छ - - - - -- - - - - - - - - - - - - - - - १

अदालतमा बोकी ल्याउन नसकिने लिखतका हकमा माथि लेखिए बमोजिम लिखत दाखिल गर्दा सो लिखतको नक्कल मात्र दाखिल गरे पनि हुन्छ - - - - - - - - - - २

यसै महलको ७८ नम्बरमा लेखिएको कुरामा सोही बमोजिम हुन्छ- - - - - - - - - ३

यसै महलका ८३ नम्बर बमोजिम दायर भएका मुद्दा कुनै मनासिब कारण देखाई झगडियाले कुनै लिखत प्रमाण पेश गर्न अर्को तारिख तोकी पाउँ भनी निवेदन गरेमा अड्डाले सो लिखत प्रमाण पेश गर्न बढीमा पैंतीस दिनसम्मको अर्को तारिख तोकिदिन सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

कुनै नयाँ र महत्वपूर्ण लिखत प्रमाण फिरादपत्र वा प्रतिउत्तरपत्र दिंदाका बखत आफूले भरमग्दूर कोशिश गर्दा पनि थाहा नपाएको वा प्राप्त गर्न नसकेकोले सो प्रमाणपत्र पेश गर्न अनुमति पाउँ भनी झगडियाले निवेदन दिएमा व्यहोरा मनासिब देखिए अड्डाले सो कुराको पर्चा खडा गरी सो प्रमाण बुझ्न हुन्छ - - - - - - - - ५

[❐]७८ नं. ॥ ॥ सबूत प्रमाण बुझ्ने भनी तोकिएको तारिखमा वादीको प्रमाणको कागज प्रतिवादीलाई र प्रतिवादीको प्रमाणको कागज वादीलाई सक्कलै देखाई सुनाई सद्दे, कीर्ते वा जालसाजी के भन्छ सोही व्यहोराको बयान गराउनु पर्छ । उसै बखत सद्दे, कीर्ते वा जालसाजी छुट्याउन नसक्ने भै हाकिमका तजबीजले म्याद दिन पर्ने ठहराएमा तीन दिनसम्मको म्याद दिन हुन्छ । झगडिया बाहेक अरुको सहीछाप परेको कागज पेश भएकोमा उसै बखत सद्दे, कीर्ते वा जालसाजी छुट्याउन नसक्ने भै म्याद मागेमा प्रमाण सहित सद्दे, कीर्ते वा जालसाजीमा बयान गर्न बढीमा पैंतीस दिनसम्मको म्याद दिनु पर्छ । म्याद दिंदा सो म्याद पाउनेको सो कागज देखेँ सुनेँ भन्ने कागज गराउनु पर्छ । सो म्यादभित्र सद्दे, कीर्ते वा जालसाजी जे भन्छ बयान गराई लिनु पर्छ । कीर्ते वा जालसाजी हो भन्ने बयान गरेका दिन निजका झगडियाहरु हाजिर रहेको भए रहेका जतिको उसै दिन र मनासिब कारणले सो हाजिर नरहेको जतिलाई ऐन बमोजिम हाजिर भएकै दिन बयान गराई लिनु पर्छ । वारिस वा कानून व्यवसायी तारिखमा रहेकोमा झगडियालाई नै झिकाउनु आवश्यक देखिएमा झगडिया झिकाई झगडियाको बयान गराउन पनि हुन्छ । सो म्यादभित्र दाखिल गरे जति सबुतको दाखिल भएकै दिन अकर्ण गराई लिनु पर्छ । सो म्यादभित्र दाखिल नगरेको प्रमाण लाग्न सक्तैन ।

७९ नं. ॥ ॥ फिरादपत्र, प्रतिउत्तरपत्रमा प्रमाण लेखिएका कागजपत्रहरु दाखिल गरेपछि नक्कल सारी वा सराई सक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने त्यसै कागजमा दाखिल गर्ने झगडियाको र अड्डाका कम्तीमा मुखिया विचारी दर्जासम्मकाले सक्कलसँग नक्कल रुजु गरी दुरुस्त छ भन्ने सहीछाप गरी हाकिमको र अड्डाको छाप लगाई मिसिलसाथ राख्नु पर्छ । सो बखत सक्कलै कागजहरु लिनु पर्दैन । सो सक्कल कागजहरुमा क्रमैसँग नम्बर चढाई पीठमा अड्डाको छाप लगाई फिर्ता दिनु पर्छ । पछि सक्कल हेर्नु परेमा झगडियाबाट लिई हेरी फिर्ता दिनु पर्छ । कीर्ते भनी नालिस उजूर

---

[❐] तेस्रो संशोधनद्वारा संशोधित ।

परेमा जुन कागजलाई कीर्ते भनेकोछ सोही सक्कलै लिई हिफाजतसँग मिसिलसाथ राखी तुरुन्त झगडियालाई भरपाई दिनु पर्छ । त्यस्तो सक्कल कागज लिंदा लालमोहर वा अड्डाखानाबाट गरिदिएको कागज बाहेक अरु सक्कल कागजमा पीठमा दाखिल गर्नेको मैले दाखिल गरेको हुँ भन्ने लेखी लेखाई निजको र कीर्ते हो भनी बयान गर्नेको बयान गर्दा सो कागज देखाएका बखत दुबै औंठाको ल्याप्चे र लेख्न जान्ने भए हस्ताक्षर समेत गराई मिसिल सामेल राख्नु पर्छ ।

λ८० नं. ॥ ॥ अड्डामा परिरहेको फौजदारी मुद्दामा प्रतिवादीका लेखबाट उठेको ऐनले देवानी कायम हुने मुद्दा वा देवानी मुद्दामा प्रतिवादीका लेखबाट उठेको ऐनले फौजदारी कायम हुने मुद्दा सो फौजदारी वा देवानी मुद्दा हेर्ने अड्डालेनै त्यसै मिसिलबाट ठाडो बयान लिई यसै महलको ७८ नम्बर समेतको कानून बमोजिम कारबाही किनारा गर्नु पर्छ । तर कुनै ऐन बमोजिम तोकिएको वा सुम्पिएको मुद्दा मात्र हेर्ने अड्डाले सोही ऐन बमोजिम सो मुद्दामा मात्र कारबाही किनारा गर्नु पर्छ ।

८१ नं. ॥ ॥ वारेण्ट जारी हुने मुद्दा बाहेक अरु मुद्दामा फिरादपत्र दिनेले एकाघरसँग बसेका जहान बाहेक अरु पाँच जनासम्मका नाउँमा दिंदा जति जनाको नाउँमा दिनु परेकोछ त्यति प्रति, पाँच जनादेखि बढीको नाउँमा दिंदा जतिसुकै जना भएपनि पाँचै प्रति र एकाघरसँग बसेका जहानका नाउँमा दिंदा जति जना भएपनि सो जहान जतिलाई एक प्रति फिरादपत्रको नक्कल टिकटवाला लिफामा लेखी सक्कल फिरादपत्रकै साथमा वादीले सक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने लेखी सहीछाप समेत गरी अड्डाले पनि सो नक्कललाई सक्कलसँग रुजु गरी लिनु पर्छ ।

८२ नं. ॥ ॥ नेपाल सरकार वादी हुने मुद्दा र घूस खाने माग्ने सरकारी कर्मचारीकै हस्ताक्षरको लिखतको सबुत लिई नालिस गरेको घूस मुद्दामा जोसुकैले नालिस गरे पनि हुन्छ । सो बाहेक अरु गैह्र मुद्दामा जसको जुन कुरामा हक पुग्छ उसले सो कुरामा दावी गरी नालिस दिए मात्र लाग्छ ।

λ८३ नं. ॥ ॥ सोह्र वर्ष नपुगेका नाबालक वा उमेर पुगेको भएपनि वृद्धावस्था वा कुनै किसिमको कडा रोगले गर्दा होस ठेगानामा नभएको वा बौलाएको वा दुवै आँखा नदेख्ने अन्धा अन्धी वा वक्क लाटा लाटी मानिसहरुको र विदेशमा गई फर्की आउने ठेगाना नभएका मानिसको हक पुग्ने जुनसुकै कुरामा नालिस, प्रतिउत्तर, पुनरावेदन, निवेदन दिन वा मुद्दा मामिला सम्बन्धी अन्य कुनै काम कारबाही गर्नु पर्ने भएमा अड्डाको अनुमति लिई ती मानिसहरुको एकाघरसँग वसेका सोह्र वर्ष नाघेको हकवालाले हदम्याद भित्र गर्न पाउनेछ - - - - - - - - - - - - - - - - - - - - १

माथि दफा १ मा लेखिए बमोजिम एकाघरका हकवाला नभएमा सोही दफामा लेखिएको व्यक्तिको हकमा निजलाई रेखदेख वा संरक्षण गर्ने व्यक्तिले अड्डाको अनुमति लिई सो व्यक्तिको तर्फबाट नासिल, प्रतिउत्तर, पुनरावेदन, निवेदन दिन वा मुद्दा मामिला सम्बन्धी अन्य कुनै काम कारबाही गर्न पाउनेछ - - - - - - - - - - - - - - २

माथि १ र २ दफामा लेखिएको अवस्थामा त्यस्तो कारण परेको हो होइन पहिले त्यसको सबुत बुझी हो रहेछ भने वारिस अख्तियारनामा नभएपनि सो देखरेख गर्ने व्यक्ति संरक्षक वा हकवालाले सो व्यक्तिको तर्फबाट सो दफाहरुमा लेखिए बमोजिम मुद्दा मामिला सम्बन्धी काम कारबाही गर्न हुन्छ - - - - - - - - - - - - - - - - ३

---

λ नवौं संशोधनद्वारा संशोधित ।

माथि १ र २ दफा बमोजिम अनुमतिका लागि निवेदन परेमा प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि जो बुझ्नु पर्ने कुरा बुझी अनुमतिको लागि निवेदन परेको एक महिनाभित्र निवेदनमा निर्णय गरी दिनु पर्छ । त्यस्तोमा हदम्याद लाग्ने छैन - - ४

८४ नं. ॥ ॥ दुई थरीको कुटपीट हात हालाहाल, गाली गोफ्ता गरी झगडा गरेमा दुबै थरीले वादी दिए भने लिई कानून बमोजिम कारबाही किनारा गर्नु पर्छ ।

८५ नं. ॥ ॥ अड्डामा मुद्दा परी फैसला भएपछि सो फैसला उपर ऐन बमोजिमको पुनरावेदन नभई सोही मुद्दामा उसै झगडियाका नाउँको फिरादपत्र लिई सुन्न हुँदैन । लिएको भएपनि खारिज गरिदिनु पर्छ ।

८६ नं. ॥ ॥ फैसला डिसमिस, मिलापत्र, खारिज भएका मुद्दामा सो फैसला डिसमिस, मिलापत्र, खारिज भएकाले अर्काको हक समेत जाने भएको रहेछ भने जसको हक जानेछ त्यसैले थाहा पाएका पैंतीस दिनभित्र यसमा हाम्रो पनि हक लाग्छ यसले मात्र हारी वा डिसमिस, खारिज, मिलापत्र गराएकोले हाम्रो हक जाने होइन भनी आफ्नो हक जतिमा झगडियाका नाउँमा नालिस दिए इन्साफ गरिदिनु पर्छ ।

८७ नं. ॥ ॥ फिरादपत्र दिन ल्याएमा ऐन बमोजिमको ढाँचा नमिलेकोमा यति रीत पुऱ्याई ल्याउनु भनी जति कुराको रीत पुऱ्याई ल्याउनु पर्ने हो सो सबै व्यहोरा एकै पटक पीठमा लेखी मिति समेत हाली अड्डाको छाप लगाई भरपाई गराई फिर्ता दिनु पर्छ । रीत पुगेकोमा अत्तो थापी फिर्ता दिन हुँदैन ।

८८ नं. ॥ ॥ नेपाल सरकार वादी हुने फौजदारी मुद्दामा फिरादपत्र, प्रतिउत्तरपत्र वा बयान सो मुद्दा हेर्ने अड्डामा एक पटक दिइसकेपछि अरु पनि अभियुक्त हुन् वा छन् भनी उसै मानिसले पछि थपी लेखिदिएको सदर हुँदैन । प्रहरी प्रतिवेदनको हकमा भने यो बन्देज रहने छैन ।

८९ नं. ॥ ॥ एकै मुद्दामा एक जनाले एक अड्डामा वादी र अर्को चाँहिले उसै मुद्दामा अर्को ठाउँमा वादी दिएछ वा एकै जनाले एकै मुद्दामा दुवै अड्डामा वादी दिएछ भने अघि जहाँ जस्को वादी परेकोछ सो सदर हुन्छ । पछिको वातिल गरी मुद्दा छिन्नु पर्छ ।

९० नं. ॥ ॥ नेपाल सरकार वादी हुने मुद्दाको कसैको निवेदनपत्र वा दरखास्त हुलाकद्वारा मुद्दा हेर्ने अड्डामा आयो भने सो निवेदनपत्र वा दरखास्त दिने मानिसलाई तुरुन्त बाटाका म्याद बाहेक सात दिनको म्याद टाँसी झिकाई बुझ्दा निजले सो पठाएको मैले हो सावित गर्न सक्छु भन्यो भने सोही व्यहोराको प्रमाण खुलाउनु पर्ने भए खुलाई बयान लिई कानून बमोजिम रीत पुऱ्याई मात्र बात लागि माग्नेलाई पक्रन र कारबाही गर्न हुन्छ । सो मानिसले मैले पठाएको होइन भन्यो वा बेनामी रहेछ वा टाँसिएको म्यादभित्र कारबाही गराउन आएन भने त्यस्तो कागजले मुद्दा हेरिन वा मानिस पक्राउ र कारबाही हुन सक्तैन ।

९१ नं. ॥ ॥ नेपाल सरकार वादी नहुने ऐनले ठाडो बुझ्नु पर्ने कुराको निवेदनपत्रमा ठाडो बुझ्ने आदेश भै आएमा सो दाखिल भएका तीन दिनभित्र निवेदन पठाउनेका नाउँमा आदेशको व्यहोरा उल्लेख गरी सात दिने म्याद पठाउनु पर्छ । सो म्यादभित्र हाजिर हुन आए आदेश बमोजिम गर्नु पर्छ । म्यादभित्र हाजिर हुन आएन वा हाजिर भै मैले निवेदनपत्र पठाएकै होइन भनेमा सो आदेश बमोजिम गर्नु पर्दैन ।

❋९२ नं. ॥ ॥ नेपाल सरकार वादी हुने मुद्दा बाहेक अरु मुद्दामा कसैले कसैका नाममा अड्डामा नालिस दिएकोमा फैसला नहुँदै सो कुरा साबित गर्न सक्तिन भनी कागज लेखिदियो भने पाँच सय रुपैयाँसम्म जरिबाना गरी अड्डाले सो नालिस फिर्ता दिन सक्नेछ । पुनरावेदन वा निवेदन परेकोमा पुनरावेदक वा निवेदकले पुनरावेदन वा निवेदन दाबी जिकिर पुऱ्याउन सक्तिन भनी कागज गरिदियो भने अड्डाको अनुमति लिई त्यस्तो पुनरावेदन वा निवेदन फिर्ता लिन सक्नेछ ।

९३ नं. ॥ ॥ ऐनले झिकाउनु पर्ने झगडिया र प्रमाणको मानिसहरुलाई वारेण्ट, समाव्हान, इतलायनामा र म्याद पूर्जी जारी गरी झिकाउनु पर्दा अन्यथा लेखिएकोमा बाहेक मुनासिब माफिकको कारणले बाहेक प्रतिउत्तरवालालाई नालिस परी पहिले झिकाउनु पर्नेमा मुद्दा दायर भएका मितिले, अरु तारिखमा नरहेका झगडियालाई पछि झिकाउनु परेमा झिकाउने पर्चा खडा भएका मितिले र साक्षी प्रमाणको मानिस झिकाउनु पर्नेमा तलबाना दाखिल भएका वा झिकाउनु पर्ने यकिन भएका मितिले आफ्नै अड्डाबाट तामेल गर्नु पर्नेमा दश दिनभित्र जारी गरी तामेल समेत गरी र अरु अड्डाबाट तामेल गराउनु पर्नेमा तीन दिनभित्र पठाइसक्नु पर्छ ।

λ९४ नं. ॥ ॥ मुद्दा हेर्ने अड्डाले ⟩......................., ▯... ... कैदको सजाय हुने राजकाज सम्बन्धी मुद्दा, कर्तव्य ज्यान, ज्यान मार्नेको उद्योग, डाँका, गोबध, स्वदेशी वा विदेशी मुद्रा खोटो टक मारेको वा छापेको र त्यस्तो खोटो मुद्रा चलन गरेको वा गर्न उद्योग गरेको मुद्दा, जबरजस्ती करणीको महल अन्तर्गत सजाय हुने मुद्दा, जीउमास्ने बेच्नेको वा सो सम्बन्धी मुद्दा, ♑मानव बेचबिखन वा ओसार पसार सम्बन्धी मुद्दा, लागू औषध सम्बन्धी मुद्दा, राष्ट्र सेवकले नगद वा जिन्सी मसौट गरेको मुद्दा, सरकारी सम्पत्ति रहेको घरमा आगो लगाएको मुद्दामा अभियुक्तलाई गिरफ्तार गर्न सकेसम्मको हुलिया समेत खुलाई अभियुक्त रहे बसेको इलाकाको प्रहरी कार्यालय वा प्रहरी कर्मचारीका नाउँमा यसै महलको ९८ नम्बरको नमूना बमोजिमको वारेण्ट दुई प्रति र सात दिनसम्म तदारुखसाथ खोजतलाश गर्दा पनि अभियुक्त गिरफ्तार हुन नसके तामेल गर्न यसै महलको ९९ नम्बर बमोजिम सत्तरी दिने म्यादी पूर्जी समेत लेखी पठाई सो सात दिनको म्याद नाघेपछि उक्त म्यादी पूर्जी जारी भएको व्यहोरा अड्डाको सूचना पाटीमा र यथासम्भव कुनै स्थानीय पत्र-पत्रिकामा समेत प्रकाशित गर्नु पर्छ । प्रहरी कार्यालय वा कर्मचारीले पनि वारेण्ट पाएपछि सो बदर वा तामेल नभएसम्म तदारुखसाथ अभियुक्तलाई खोजतलाश गरी पत्री बाटाको म्याद बाहेक चौबीस घण्टाभित्र वारेण्ट जारी गर्ने अड्डामा दाखिल गराउनु पर्छ । अभियुक्त अन्य इलाकामा गई बसेको पत्ता लागे त्यस्तो प्रहरी कार्यालय वा कर्मचारीले आफ्नो नाउँको वारेण्ट अभियुक्त गई बसेको इलाकाको प्रहरी कार्यालय वा कर्मचारीको नाममा पठाई वारेण्ट जारी गर्ने अड्डालाई सूचना गर्नु पर्छ । त्यसरी आएकोमा प्रहरी कार्यालय वा कर्मचारीले आफ्नो नाउँमा आदेश भए सरह तामेल गर्नु गराउनु पर्छ । सो बाहेक

---

❋ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

⟩ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

♑ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

फौजदारी मुद्दामा समाव्हान र देवानी मुद्दामा इतलायनामा बाटाको म्याद बाहेक तीस दिनको म्याद दिई जारी गर्नु पर्छ र सो समाव्हान इतलायनामा यसै महलको १०४ नम्बरको नमूना बमोजिम हुनु पर्छ ।

✂९५ नं. ॥ ॥ बाटाको म्यादको हिसाब गर्दा यातायातको नियमित सेवा चलेको ठाउँमा रेल र बसबाट आउँदा वास्तविक लागेको दिन र त्यस्तो रेल वा बस नचलेको ठाउँको लागि चार कोशको एक दिनको दरले हिसाब गर्नु पर्छ । चार कोशदेखि घटी कोशलाई एक दिनको म्याद कायम गर्नु पर्छ । तर जम्मा चार कोश भन्दा घटी कोशको बाटोलाई बाटाको म्याद दिइने छैन ।

९६ नं. ॥ ॥ म्यादी पूर्जीका म्यादसम्ममा पनि हाजिर नहुँदा ऐन बमोजिम अंश रोक्का भएकोमा सो मानिस अंश रोक्का भएको छ वर्षसम्ममा हाजिर भयो भने मुद्दा फैसला हुँदा सो मानिसलाई सजाय हुने ठहरे जो लिनु पर्ने लिई बाँकी रहेकोमा बाँकी र केही नलाग्नेमा सबै फुकुवा गरी दिनु पर्छ । सो फुकुवा गर्दा चल सम्पत्ति लिलाम बिक्री भैसकेकोमा लिलाम बिक्री भै आम्दानी बाँधिए जति रुपैयाँ र लिलाम भै नसकेकोमा रोक्का भएको सबै फिर्ता दिनु पर्छ ।

९७ नं. ॥ ॥ ✖... ... ...

✂९८ नं. ॥ ॥ वारेण्टको नमूना

<u>फलाना अड्डाबाट जारी भएको वारेण्ट</u>

फलाना प्रहरी कार्यालय वा प्रहरी कर्मचारीकै पूर्जी उप्रान्त फलाना ठाउँ बस्ने यस्तो हुलिया भएको फलानालाई फलाना कसूरमा गिरफ्तार गर्नु परेको हुनाले यो वारेण्ट बदर नभएसम्म अभियुक्तलाई तदारुखसाथ खोजतलाश गर्दै रही फेला परेको बखत पक्री बाटामा भाग्न उम्कन नपाउने गरी यस अड्डामा पठाई दिनु । बाटाको म्याद बाहेक सात दिनसम्ममा पक्रिएन भने आठौं दिनका दिन यसैसाथ पठाएको म्यादी पूर्जी तामेल गरी त्यसपछि पनि पक्रन तदारुखसाथ खोजतलाश गर्दै रहनु । इति संवत् २० .. .. साल .. .. गते रोज .. .. शुभम् ---------------------------

✂ ९९ नं. ॥ ॥ म्यादी पूर्जीको नमूना ।

<u>फलाना अड्डाबाट जारी भएको फलाना ठाउँ बस्ने फलानाको नाउँको म्यादी पूर्जी</u>

उप्रान्त फलाना ठाउँ बस्ने फलानाले तपाईले फलानो कसूर गरेकोछ भनी नालिस दिएको वा फलाना कसूरमा बात लागेकोमा तपाईलाई गिरफ्तार गर्न वारेण्ट जारी भई राखेकोमा पक्राउ नपरेकोले यो म्यादी पूर्जी समेत टाँसिएकोछ । बाटाका म्याद बाहेक सत्तरी दिनभित्र आफै वा वारेण्ट बमोजिम पक्राउमा परी यस अड्डामा हाजिर हुन आए तपाईको व्यहोरा समेत बुझी ऐन बमोजिम कारबाही हुनेछ । नआई सो म्याद गुजारी फरार रहे तपाईको अंश रोक्का गरिनेछ र छ वर्षसम्ममा पनि पक्राउमा परी वा आफै हाजिर हुन नआए रोक्का भएको अंश समेतका हकमा ऐन बमोजिम हुनेछ र पछि उजूर गर्न पाउने छैन ।

१०० नं. ॥ ॥ ✤... ... ...

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

१०१ नं. ॥ ॥ समाव्हान इतलायनामा जारी गर्दा जनही नमूना बमोजिमको टिकटवाला एक प्रति र बेटिकटवाला एक प्रति समेत जम्मा दुई प्रति लेखी हाकिमको छाप वा दस्तखत गरी अड्डाको छाप लगाई तामेल गर्न लगाउनु पर्छ । वारेण्ट जारी हुने र ठाडो बुझिएको बाहेक अरु फिरादपत्र परेका मुद्दामा प्रतिवादीका नाउँमा सो समाव्हान इतलायनामा जारी गर्दा भने वादीले दाखिल गरेको फिरादपत्रको नक्कलमा हाकिमको छाप वा दस्तखत गरी र अड्डाको छाप लगाई एकाघरको जहान जतिलाई एक प्रति मात्र र सो बाहेक अरु पाँच जनासम्म प्रतिवादी भए प्रतिवादी पिच्छे जनही र पाँच जनादेखि बढी प्रतिवादी भए हाकिमका तजवीजले जस जसलाई पठाउँदा सो मुद्दाको प्रतिवादी सबैले सो नक्कल हेर्न बुझ्न पाउने हुन्छन् ती मुख्य मुख्य प्रतिवादीलाई एक एक प्रति दिनालाई सो समाव्हान इतलायनामाका साथमा पठाई तामेल गर्न लाउनु पर्छ ।

१०२ नं. ॥ ॥ वारेण्ट जारी हुने र ठाडो बुझिएको बाहेक अरु मुद्दाको प्रतिवादीको नाउँको समाव्हान इतलायनामाको नमूना ।

<u>फलाना अड्डाबाट जारी भएको फलाना ठाउँ बस्ने प्रतिवादी फलानाका नाउँको समाव्हान वा इतलायनामा</u>

उप्रान्त फलाना ठाउँ बस्ने फलानाले तपाईको नाउँमा फलाना मितिमा फलाना मुद्दामा यस अड्डामा फिरादपत्र दिएको हुनाले सो फिरादपत्रको नक्कल समेत यसैसाथ पठाई दिएको छ । तसर्थ बाटाका म्याद बाहेक तीस दिनभित्र प्रतिउत्तरपत्र र कानून बमोजिम आफ्नो लिखतको प्रमाण समेत लिई अड्डा खुल्ने टायममा यस अड्डामा हाजिर हुन आफै आउनु वा कानून बमोजिम वारिस वा कानूनी व्यवसायी पठाउनु ऐन बमोजिम पुर्पक्ष हुनेछ आफ्नो लिखत प्रमाणका सक्कल नक्कल प्रतिउत्तरपत्रको साथमा दाखिल गर्न नसके ऐन बमोजिम हुनेछ । सो म्यादभित्र प्रतिउत्तरपत्र लिई आफू पनि आउनु भएन वारिस वा कानून व्यवसायी पनि पठाउनु भएन भने ऐन बमोजिम मुद्दा फैसला हुनेछ पछि तपाईको उजूर लाग्ने छैन ।

इति संवत् .. .. .. साल .. .. .. गते रोज .. .. .. शुभम् -------------------

१०३ नं. ॥ ॥ फिरादपत्रको नक्कल समाव्हान वा इतलायनामाका साथैमा नगई अरु प्रतिवादीका नाउँमा मात्र गएकोमा जसका नाउँमा नक्कल गएकोछ सो मानिसको नाउँ लेखी फलानालाई पठाईदिएको छ भन्ने खुलाई समाव्हान इतलायनामा जारी गर्नु पर्छ ।

१०४ नं. ॥ ॥ ठाडो बुझिएका मुद्दामा प्रतिवादीका नाउँको समाव्हान इतलायनामाको नमूना ।

फलाना अड्डाबाट जारी भएको फलाना ठाउँ बस्ने प्रतिवादी फलानाका नाउँको समाव्हान वा इतलायनामा - - - - - - - - - - - - - - - - -

उप्रान्त फलाना ठाउँ बस्ने फलानाले तपाईको नाउँमा फलाना मितिमा फलाना मुद्दामा यस अड्डामा उजूर बयान दिएको वा तपाई उपर फलाना कसूरको

---

सातौं संशोधनद्वारा खारेज ।

तेस्रो संशोधनद्वारा संशोधित ।

तेस्रो संशोधनद्वारा संशोधित ।

अभियोग लगाई फलाना मितिमा यस अड्डामा प्रहरी प्रतिवेदन परेकोले सो मुद्दामा कारबाही हुने भएको छ । तसर्थ बाटाका म्याद बाहेक तीस दिनभित्र अड्डा खुल्ने टायममा यस अड्डामा हाजिर हुन आफै आउनु वा कानून बमोजिम वारिस वा कानून व्यवसायी पठाउनु ऐन बमोजिम पुर्पक्ष हुनेछ । आफू पनि आउनु भएन वारिस वा कानून व्यवसायी पनि पठाउनु भएन भने ऐन बमोजिम मुद्दा फैसला हुनेछ । पछि तपाईको उजूर लाग्ने छैन । इति संवत् ... ... साल ... ... गते रोज ... ... शुभम्-

१०५ नं. ॥ ॥ समाव्हान इतलायनामा जारी गर्दा ऐनले वारिस अख्तियार लिन नहुने मुद्दामा वारिस पठाउनु भन्ने वोली लेख्न हुँदैन ।

१०६ नं. ॥ ॥ साक्षीको नाउँको समाव्हानको नमूना ।

फलाना अड्डाबाट जारी भएको सरजमीनका मानिस वा वादी वा

प्रतिवादीको साक्षी फलाना ठाउँ बस्ने फलानाका नाउँको समाव्हान

उप्रान्त वादी फलाना प्रतिवादी फलानाको फलाना मुद्दामा तिमीसँग सोध्नु परेको हुनाले फलाना मितिमा यस बेला यस अड्डामा आउनु । आएनौ भने ऐन बमोजिम सजाय हुनेछ । इति संवत् २० ... ... साल ... ... गते रोज ... . शुभम् ।

१०७ नं. ॥ ॥ अड्डामा दिने फिरादपत्र, प्रतिउत्तरपत्र, पुनरावेदनपत्र इत्यादिमा ❐बाबु आमा वा पति पत्नीको नाम खोली लेख्नु पर्छ । अड्डाबाट जारी हुने समाव्हान, इतलायनामा, म्याद इत्यादिमा पनि जसका नाउँमा जारी हुने हो सो व्यक्तिको यथासम्भव ❐बाबु आमा वा पति पत्नीको नाम खोली जारी गर्नु पर्छ ।

⌘१०८ नं. ॥ ॥ समाव्हान वा इतलायनामा जारी गर्दा प्रत्येक प्रतिवादीको निमित्त दश रुपैयाँको दरले वादीसँग दस्तुर लिई जारी गर्नु पर्छ ।

१०९ नं. ॥ ॥ ✖... ... ...

११० नं. ॥ ॥ समाव्हान इतलायनामा म्याद सूचना तामेल गर्न पठाउँदा तामेल गर्दा देहाय बमोजिमको रीत पुऱ्याई तामेल गर्न पठाउने र तामेल गर्ने गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

✂समाव्हान, इतलायनामा, म्याद, पूर्जी, सूचना तामेल गर्न खटिएका सरकारी कर्मचारीलाई तामेल गर्नु पर्ने समाव्हान, इतलायनामा, म्याद, पूर्जी सूचनाको तीन प्रति जिम्मा दिई भरपाई गराउनु पर्छ । निजले पनि सम्बन्धित व्यक्ति चिने जहाँ फेला परे पनि निजलाई बुझाउन हुन्छ । सम्बन्धित व्यक्ति फेला नपरे वा नचिने निजको ठेगानामा गै बुझी घर डेरा पत्ता लगाई मानिस चिनी 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा सचिव र अरु स्थानीय भलादमी दुईजना रोहवरमा राखी वेटिकटवाला समाव्हान, इतलायनामा, म्याद, पूर्जी, सूचना दिए तामेल गरेको दिन मिति लेखी सम्बन्धित व्यक्ति भेट भए निजैलाई निज भेट नभए

---

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

त्यसका उमेर पुगेको एकाघरका ❒उमेर पुगेका कुनै व्यक्तिलाई दिई र निजहरु पनि भेट भएन वा भएपनि बुझी लिएन भने त्यसको घर डेराको ढोकामा सबैले देख्ने गरी टाँसी अड्डामा दाखिल गर्ने टिकटवाला समाव्हान, इतलायनामा, म्याद, पूर्जी, सूचनाको पीठमा कसलाई दिए टाँसिएको हो सो र सो दिए टाँसिएको दिनको मिति समेत लेखी सो दिए टाँसिएको बखतमा भएको माथि लेखिएका मानिसहरु समेतको प्रष्ट बुझिने गरी ऐन बमोजिम सहीछाप गरी गराई सो तामेल गर्ने कर्मचारीले समेत सहीछाप गरी दाखिल गर्न ल्याउनु पर्छ । घर दैलामा टाँसी तामेल गरिएकोमा तेस्रो प्रतिमा सो तामेली मिति जनाई 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकामा बुझाई छुट्टै भरपाई गराई लिनु पर्छ वा तामेली प्रतिको पीठमा नै सो जनाई सहीछाप गराई लिनु पर्छ । त्यसरी म्याद पाएपछि 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाले आफ्नो सूचना पाटीमा तत्कालै टाँस्नेछ त्यसरी 🕮गाउँपालिका वा नगरपालिकालाई नबुझाइएको वा नटाँसिएको कारणबाटै सम्बन्धित व्यक्तिको घर दैलामा रीतपूर्वक टाँसिएको म्याद वेरीत भएको मानिने छैन । घर दैलामा टाँसिएको मितिबाटै म्याद कायम हुनेछ म्याद तामेल गर्न जानेवालाले 🕮गाउँपालिका वा नगरपालिकामा बुझाउनु पर्ने म्याद नबुझाएमा निजलाई पटकै पिच्छे एक सय रुपैयाँसम्म जरिबाना हुनेछ - - - - -१

समाव्हान, इतलायनामा, म्याद, सूचना तामेल गर्नु पर्ने ठाउँका माथि १ दफामा लेखिएका 🕮गाउँपालिका वा नगरपालिकाको सदस्य जिमिदार, तालुकदार, चौकीदार, भलाद्मी इत्यादिले पनि सोही दफामा लेखिएको रीत पुऱ्याई साक्षी बसी तामेल गरी पठाइदिने गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - २

यस नम्बर बमोजिम कुनै कम्पनी कर्पोरेशन वा अन्य संगठित संस्था उपर कुनै मुद्दाका सम्बन्धमा समाव्हान, इतलायनामा, म्याद, सूचना तामेल गर्नु पर्दा सो संस्थाको त्यस बखत मुख्य भै काम गर्ने मैनेजिङ्ग डाइरेक्टर वा डाइरेक्टर वा अरु कुनै कर्मचारीलाई तामेल गर्नु पर्छ - - - - - - - - - - - -- - - - - - ३

☯माथि दफा १, २ र ३ मा जुनसुकै कुरा लेखिएको भए तापनि 🕮सरकारी कार्यालय वा संगठित संस्थाको नाममा वा त्यस्तो कार्यालय वा संस्थामा काम गर्ने कर्मचारीको नाममा समाव्हान, इतलायनामा, म्याद, सूचना तामेल गर्नु पर्दा रजिष्टरी गरी हुलाकद्वारा तामेल गर्न हुन्छ । त्यसरी हुलाकद्वारा पठाएकोमा त्यस्को पहुँच रसिद अड्डामा दाखिल भएपछि सो समाव्हान, इतलायनामा, म्याद वा सूचना अन्यथा प्रमाणित नभएसम्म रीतपूर्वक तामेल भएको मानिनेछ - - - - - - ३क.

*यस नम्बरमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि समाह्वान, इतलायनामा, म्याद, पूर्जी, सूचना तामेल गर्दा सरकारी कार्यालय वा संगठित संस्थामा कार्यरत कर्मचारी वा त्यस्ता संस्थाको कुनै सदस्य वा पदाधिकारीलाई म्याद बुझाउन जाँदा बुझी नलिएमा वा निज कार्यालयमा फेला नपरेमा कार्यालयमा पनि बुझाउन सकिनेछ । त्यसरी बुझाउँदा निजले नबुझेको वा निज फेला नपरेकोले त्यसरी बुझाउनु परेको व्यहोरा लेखाई ल्याएकोमा रीतपूर्वक तामेल भएको मानिनेछ ।

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

☯ नवौं संशोधनद्वारा थप ।

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

तर कार्यालयमा उपस्थित नभएको कर्मचारी, सदस्य वा पदाधिकारीको हकमा भने निज कार्यालयमा उपस्थित भएको दिनलाई नै म्याद तामेल भएको दिन मानिनेछ - - - - - - - - - -- - - - - - - - - - - - - - - - - - ३ख.

*दफा ३ख. बमोजिम समाह्वान, इतलायनामा, म्याद, पूर्जी, सूचना बुझाउन ल्याएकोमा सम्बन्धित कार्यालयले पनि बुझिलिई सोको जानकारी यथाशीघ्र सम्बन्धित कर्मचारीलाई दिनु पर्नेछ - - - - - - - - - - - - - - - - - - - ३ग.

*विदेशी व्यक्तिको नाममा म्याद तामेल गर्नु पर्दा त्यस्तो व्यक्तिको नेपाल ⁾........ भित्र कुनै किसिमको कार्यालय वा प्रतिनिधि भए त्यस्तो कार्यालय वा प्रतिनिधिको नाममा म्याद तामेल गर्नु पर्छ । त्यस्तो कार्यालय वा प्रतिनिधि नभएमा त्यस्तो व्यक्ति स्थायी बसोबास गर्ने वा रहेको ठेगानामा र नेपालमा निजले कुनै कारोबार गरेको भए कारोबार गर्दाको बखत पत्राचारको लागि निजले दिएको ठेगाना रहेछ भने त्यस्तो ठेगानामा टेलेक्स, टेलिफ्याक्स वा अभिलेख हुन सक्ने दूरसञ्चारका अन्य माध्यम मार्फत वा रजिष्टरी गरी हुलाक मार्फत म्याद तामेल गर्नु पर्छ । त्यसरी तामेल गर्दा लाग्ने खर्च अड्डाले कोर्ट फी सरह भराई दिनु पर्नेछ - - - - - - ३घ.

▩माथि दफा १, २, ३, ३क., ३ख., ३ग. र ३घ. बमोजिम तामेल गरी ल्याएको समाव्हान, इतलायनामा, म्याद, सूचना दाखिल भएपछि अड्डाले पनि ऐन बमोजिमको रीतपूर्वक तामेल भई आएको छ छैन भनी जाँच गरी ऐनको रीत पुगेको देखिए अड्डामा दाखिल गरेको मिति लेखी मैले घरद्वार मानिस फरक पारी वा तामेल नभए नदिएकोमा तामेल गरे गरिदिएँ भनी र नभएको मानिस साक्षीमा सहीछाप गराई ल्याएको समेत ठहरे ऐन बमोजिम सजाय बुझाउँला भनी अर्कै छुट्टै कागजमा लेखी तामेल गरी ल्याउनेको सहीछाप गराई सो बुझाउन ल्याएको समाव्हान, इतलायनामा, म्याद, सूचना मिसिल सामेल राख्ने गर्नु पर्छ - - - - - - ४

सो बमोजिम गरी लिई सकेपछि अड्डाले जाँच्दा ऐनको रीत नपुऱ्याई तामेल गरी ल्याएको देखियो वा उजूर परी बुझ्दा बेहिसाब गरेको ठहऱ्यो भने फेरि ऐनको रीत पुऱ्याई तामेल गराउनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - ५

◆कानून बमोजिम कुनै झगडियालाई तामेल गर्नु पर्ने समाव्हान, इतलायनामा, म्याद, सूचना निजको वारिस वा त्यस कामको लागि अधिकार पाएका कानून व्यवसायीलाई पनि माथि लेखिए बमोजिम तामेल गर्न सकिनेछ । सो बमोजिम तामेल भएकोमा झगडियालाई नै तामेल भएको मानिनेछ - - - - - - - - - - - ६

✂११ नं. ॥ ॥ अड्डाबाट तामेल गर्न पठाएको समाव्हान, इतलायनामा, म्याद, पूर्जी, सूचना तामेल गर्दा वा वारेण्ट बमोजिम पक्राउ, खानतलासी वा कब्जा गर्दा वा नक्सा सरजमीन गर्दा समेत 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य,

---

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

⁾ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

▩ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

◆ तेस्रो संशोधनद्वारा थप ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

तालुकदार, स्थानीय भलादमी समेतले सम्बन्धित मानिसको घरद्वार खोजी देखाई चिनाई काम तामेल गर्न आवश्यक सबै सहयोग गरी साक्षी बस्नु पर्नेमा बसी सहीछाप गरिदिनु पर्छ । सो नगर्नेलाई एक सय रुपैयाँसम्म जरिबाना हुन्छ । कसैले झुट्टा व्यहोरा लेखाई देखाई दिए वा व्यहोरा झुट्टा पारी तामेल गराएमा वा झुट्टा मुचुल्का गरी दिएमा वा सो कुनै काम तामेल गर्न बाधा विरोध गरेमा वा टाँसेको समाव्हान, इतलायनामा, म्याद, पूर्जी, सूचना कैफियत गरी च्याते उखाडेमा वा वारेण्ट बमोजिम पक्राउ गर्नु पर्ने मानिसलाई भाग्न उम्कन मद्दत दिएमा वा दबाई छिपाई राखेमा वा पक्राउ गर्न सहयोग नगरेमा वा तामेल गर्न जानेले बदनियत गरी काम तामेल नगरेमा निजलाई एक हजार रुपैयाँसम्म जरिबाना वा पन्ध्र दिनसम्म कैद वा दुवै सजाय हुनेछ ।

११२ नं. ॥ ॥ घरद्वारको पत्ता नभएको मानिसलाई समाव्हान, इतलायनामा, म्याद, सूचना जारी गर्नु पर्दा उसको गाउँ, शहर, टोल लेखिएको भए सोही ठाउँमा र गाउँ, शहर, टोल पनि पत्ता नलागेको भए अड्डाका नजिक सबैले देख्ने ठाउँमा टाँसिदिनु पर्छ ।

११३ नं. ॥ ॥ आफ्ना अड्डाका इलाका बाहेक अरु इलाकामा समाव्हान, इतलायनामा, म्याद, सूचना तामेल गर्नु पर्दा आफ्ना अड्डाको पूर्जीसाथ इलाकाका अड्डामा पठाउनु पर्छ । सो इलाकाका अड्डाले पनि यसै महलको ११० नम्बर बमोजिम रीत पुऱ्याई तामेल गराउनु पर्छ ।

*११३क. नं. ॥ ॥ यसै महलको ११३ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि अरु अड्डाको इलाका अन्तर्गत पर्ने ठाउँ भएपनि मुद्दा दायर भएको अड्डाबाटै पायक पर्ने ठाउँ हो भनी म्याद तामेल गर्न निवेदन पर्न आएमा सो अड्डाले मनासिब देखेमा आफ्नो इलाकामा म्याद तामेल गरे सरह त्यस्तो म्याद तामेल गर्न आदेश दिनेछ ।

११४ नं. ॥ ॥ ✖... ... ...

❒११५ नं. ॥ ॥ प्रमाण बुझ्न तोकिएको तारिखमा हाजिर नभएका साक्षीलाई वातिल गर्नु पर्छ । तर नेपाल सरकार वादी हुने वा फौजदारी मुद्दामा नबुझी नहुने साक्षीका सम्बन्धमा समाव्हान जारी गरी बुझ्न हुन्छ । मनासिब कारण भएमा बाहेक सो बमोजिम समाव्हान जारी गर्दा पनि हाजिर नहुने साक्षीलाई पचास रुपैयाँ जरिबाना गरी पक्राउ गर्न पठाई ल्याई बकाउनु पर्छ । पक्रन पठाउँदा पनि फेला परेन भने बाटाका म्याद बाहेक सात दिनको फेरि समाव्हान जारी गर्नु पर्छ । सो समाव्हान बमोजिम तोकिएको तारिखमा पनि हाजिर हुन आएन भने पक्राउ गर्न पठाई ल्याई बकाई पन्ध्र दिनदेखि पैंतालीस दिनसम्म कैद गर्न सक्नेछ । त्यति गर्दा पनि पक्रिएन भने त्यस्तालाई सो बमोजिम सजाय गर्ने गरी बुझिएको प्रमाणबाट मुद्दा फैसला गरिदिनु पर्छ ।

११६ नं. ॥ ॥ वारेण्ट जारी गरी पक्रनु पर्ने मानिसलाई र हतियार खजाना सम्बन्धी मुद्दाका अभियुक्तलाई घरभित्र पसी पक्रन पर्दा जुनसुकै बखतमा भएपनि पक्रनु पर्ने मानिस भाग्न नपाउने गरी बाटो रोक्का गरी जनाउ दिई घरभित्र

---

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

❒ तेस्रो संशोधनद्वारा संशोधित ।

पसेर पक्रन हुन्छ । लेखिएदेखि बाहेक अरु मानिसलाई पक्रनु पर्दा घरको चोक आँगनमा सम्म गई पक्रन हुन्छ । सो ठाउँसम्म जाँदा पक्राउ हुन सकेन भने जनाउ दिई सूर्योदयदेखि सूर्यास्तसम्ममा घरभित्र पसेर पनि पक्राउ गर्न हुन्छ ।

११७ नं. ॥ ॥ स्वास्नीमानिसलाई पक्रन पठाउनु पर्दा स्वास्नीमानिस सिपाही भएका अड्डाले स्वास्नीमानिस सिपाही र नभएका अड्डाले दुई जना सिपाही पठाई डाकी ल्याउनु पर्छ । लोग्नेमानिसले हात हाली पक्रन हुँदैन । नआई अडिई भने मात्र नाडीमा समाई ल्याउनु पर्छ ।

[λ]११८ नं. ॥ ॥ देहायका मुद्दाका मानिसलाई देहायमा लेखिए बमोजिम गरी राखी मुद्दा हेर्नु पर्छ । - - - - - - - - - - - - - - - - - - - - - - - - - -

[}]..........................- - - - - - - - - - - - - - - - - - - - - - १

देहायको कुनै अपराधमा तत्काल प्राप्त प्रमाणबाट कसूरदार देखिने भएमा वा त्यस्तो प्रमाणबाट कसूरदार हो भन्ने विश्वास गर्ने कुनै मनासिब आधार भएमा अन्यथा प्रमाणित नभएसम्म अड्डाले अभियुक्तलाई थुनामा राखी मुद्दाको पुर्पक्ष गर्नु पर्छ - - २

[▯]...... जन्म कैदको सजाय हुन सक्ने अपराध - - - - - - - - - - - - - १

नेपाल सरकार वादी भै चलेको तीन वर्ष वा सो भन्दा बढी कैदको सजाय हुन सक्ने अपराध - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

माथि उल्लिखित अपराधको उद्योग, दुरुत्साहन वा अपराधिक षडयन्त्र गरेको वा त्यस्तो अपराधमा मतियार भएको अपराध - - - - - - - - - - - - - - १

नेपाल [}]......... मा स्थायी बसोवास नभएको कुनै अभियुक्त तत्काल प्राप्त प्रमाणबाट छ महिना वा सो भन्दा बढी कैदको सजाय हुन सक्ने अपराधको कसूरदार हो भन्ने विश्वास गर्ने कुनै मनासिब आधार भएमा अड्डाले निजलाई थुनामा राखी मुद्दाको पुर्पक्ष गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - ३

माथि २ र ३ दफामा जुनसुकै कुरा लेखिएको भए तापनि अभियुक्त नाबालक वा शारीरिक वा मानसिक रोग लागेको कारणबाट थुनामा राख्नु अनुपयुक्त हुने भनी अड्डाले ठहऱ्याएको व्यक्ति रहेछ भने अड्डाले धरौट वा जमानत लिई निजलाई थुनामा नराखेपनि हुन्छ । अपराध हुँदाको परिस्थिति, अभियुक्तको उमेर निजको शारीरिक वा मानसिक अवस्था र पहिलेको आचरणलाई विचार गर्दा कुनै अभियुक्तलाई थुनामा राख्न उपयुक्त नदेखिएमा, [▯]....... जन्मकैदको सजाय हुन सक्ने अपराध गरेको वा सो अपराधको उद्योग, दुरुत्साहन वा अपराधिक षडयन्त्र गरेको वा त्यस्तो अपराधमा मतियार भएको अभियोग लागेको अभियुक्त बाहेक त्यस्तो अभियुक्तसँग अदालतले धरौट वा जमानत लिई निजलाई थुनामा नराखे पनि हुन्छ - - - - - - ४

माथि २ वा ३ दफा बमोजिम हुनेमा बाहेक तत्काल प्राप्त प्रमाणबाट कुनै अभियुक्त कसूरदार हो भन्ने विश्वास गर्ने कुनै मनासिब आधार भएमा अड्डाले निजसँग धरौट वा जमानत लिई मुद्दाको पुर्पक्ष गर्नु पर्छ - - - - - - - - - - - - - - ५

---

λ नवौं संशोधनद्वारा संशोधित ।

} गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

पुर्पक्षका लागि थुनामा वा जमानत वा धरौटीमा नरहेको अभियुक्त पछि प्राप्त प्रमाणबाट कसूरदार हो भन्ने विश्वास गर्ने आधार भएमा मुद्दाको कारबाही जुनसुकै अवस्थामा पुगेको भएपनि अड्डाले माथि दफा २, ३ वा ५ बमोजिम अभियुक्तलाई अवस्थानुसार थुनामा राख्न वा निजसँग धरौट वा जमानत माग्न हुन्छ । शुरुमा अभियुक्तलाई थुनामा नराखेको वा निजसँग धरौट वा जमानत नलिएको कारणले मात्र पछि निजलाई सो बमोजिम थुनामा राख्न वा निजसँग धरौट वा जमानत माग्न अड्डालाई बाधा पारेको मानिने छैन - - - - - - - - - - - - - - - - ६

यस नम्बरको दफा २, ३, ८ वा ९ बमोजिम थुनामा परेको कुनै अभियुक्त पछि प्राप्त प्रमाणबाट कसूरदार होइन भन्ने विश्वास गर्ने कुनै मनासिब आधार भएमा मुद्दाको कारबाही जुनसुकै अवस्थामा पुगेको भएपनि अड्डाले निजलाई थुनाबाट छाड्न सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - ७

यो नम्बर बमोजिम अड्डाले मागेको धरौट वा जमानत नदिने अभियुक्तलाई अड्डाले थुनामा राखी मुद्दाको कारबाही गर्नेछ - - - - - - - - - - - - - - - - ८

कुनै अभियुक्तसँग लिएको धरौट वा जमानत पछि अपर्याप्त देखिन आएमा अड्डाले निजसँग थप धरौट वा जमानत माग्न र निजले सो बमोजिम थप धरौट वा जमानत नदिएमा निजलाई थुनामा राख्न सक्नेछ - - - - - - - - - - - - - ९

माथि दफा दफा बमोजिम लिनु पर्ने धरौट वा जमानतको अङ्क तोक्दा देहायका कुराहरुको विचार गरी तोक्नु पर्नेछ - - - - - - - - - - - - - - - - - - - - १०

अपराधको प्रकृति - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

अभियुक्त वा कसूरदारको आर्थिक अवस्था एवं पारिवारिक स्थिति - - - - - - - १

निजको उमेर र पहिले कुनै अपराधको कसूरदार ठहरी सजाय पाएको छ वा छैन

भन्ने कुरा - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

व्यहोर्नु पर्ने क्षतिपूर्ति - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

माथि दफा दफा बमोजिम कुनै व्यक्तिसँग मागिएको धरौट वा जमानत चर्को वा अपर्याप्त भयो भन्ने कुनै मनासिब कारण देखाई मुद्दाको कुनै पक्षले निवेदन दिएमा पुनरावेदन सुन्ने सो अड्डाले धरौट वा जमानतको अङ्क घटाउन वा बढाउन सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ११

λ११९ नं. ॥ ॥ यस महलमा यस अघि जुनसुकै कुरा लेखिएको भए तापनि अभियुक्तलाई कुनै हालतमा पनि निज उपर लगाइएको अभियोग प्रमाणित भएमा हुन सक्ने अधिकतम कैदको सजायको अवधिभन्दा बढी अवधिसम्म थुनामा राखिने छैन ।

१२० नं. ॥ ॥ पुर्पक्षको निमित्त थुनामा रहेको व्यक्तिलाई मुद्दा फैसला हुँदा लाग्ने ठहरिएको जरिबाना वा कैदको सजायको अङ्कमा निज थुनिएको दिन मिनाहा दिई बाँकी मात्र असूल गरिने वा कैद गरिनेछ ।

λ१२१ नं. ॥ ॥ मुद्दाको सम्बन्धमा जुनसुकै व्यहोराले थुनामा राख्दा यस्तो अभियोगमा यस कानूनको यो नम्बर दफा अनुसार थुनामा राखिएको हो भनी सो थुनामा राखिइने व्यक्तिलाई कारण खोली पूर्जी नदिई थुनामा राख्न हुँदैन । सम्बन्धित

---

λ नवौं संशोधनद्वारा संशोधित ।

पक्षको निवेदन नपरे पनि पुनरावेदन सुन्ने अड्डाले थुना गैर कानूनी वा बेरीत हो वा होइन भनी जाँचबुझ गर्न र गैर कानूनी वा बेरीत देखिएमा कानून बमोजिम उपयुक्त आदेश दिन सक्नेछ ।

१२२ नं. ॥ ॥ कुनै मुद्दामा कुनै व्यक्ति थुनिएको छ, कुनै व्यक्ति धरौट जमानीमा वा तारिखमा छ वा फरार भई राखेको छ र नथुनिएको व्यक्तिको हकमा कानून अनुसार अङ्ग पुऱ्याउन समय लाग्ने भै एकैसाथ कारबाही गर्दा थुनिएका हकमा निज थुनिएको मितिले कानूनको म्यादभित्र किनारा लगाउन नसकिने देखिएमा अदालतले थुनिएका व्यक्तिको सम्बन्धमा मात्र जो बुझ्नु पर्ने बुझी किनारा लगाउन सक्नेछ । त्यसरी किनारा लगाउन हुनेका हकमा किनारा नलगाई बिना कारण थुनामा राख्न हुँदैन ।

λ१२३ नं. ॥ ॥ यस महल बमोजिम कारबाहीको लागि थुनामा राखिएको कुनै अभियुक्तको सम्बन्धमा प्रमाण बुझ्न पहिलो पटक तोकिएको तारिखको मितिले एक वर्षभित्र मुद्दाको किनारा नभएमा त्यस्तो अभियुक्तलाई यसै महलको ११८ नम्बरको दफा २ बमोजिम थुनामा राखिएको भए निजसँग धरौट वा जमानत लिई र सोही नम्बरको दफा ८ वा ९ बमोजिम थुनामा राखिएको भए धरौट वा जमानत केही नलिई थुनाबाट छोडी मुद्दाको कारबाही गर्नु पर्छ । तर पाँच वर्ष वा सो भन्दा बढी कैद ▯... ... वा जन्म कैदको सजाय हुने कुनै अपराधको अभियोग लागेको कुनै अभियुक्तको सम्बन्धमा यो नम्बरको व्यवस्था लागू हुने छैन र पटके अपराधीलाई अड्डाले मनासिब सम्झेमा थुनामै राखी कारबाही गर्न सक्नेछ ।

λ१२४ नं. ॥ ॥ अड्डाबाट तोकिएको समय र स्थानमा उपस्थित हुनु पर्ने व्यक्ति तोकिए बमोजिम उपस्थित नभएमा तत्सम्बन्धमा राखेको धरौट जफत हुनेछ र जमानत दिएको भए यसै महलको १२४क. नम्बर बमोजिम गराइएको कागज अनुसार जमानतको रकम असूल गर्नु पर्छ । तर त्यस्तो व्यक्तिले आफू उपस्थित हुन नसकेको कुनै मनासिब कारण देखाएमा अड्डाले सो बमोजिम नगर्न पनि सक्नेछ ।

☯१२४क. नं. ॥ ॥ यसै महलको ११८ नम्बर बमोजिम कुनै व्यक्तिसँग धरौट लिंदा अड्डाबाट तोकिएको समय र स्थानमा उपस्थित नभएमा धरौट जफत हुने शर्त उल्लेख गरी कागज गराउनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - १

यसै महलको ११८ नम्बर बमोजिम जमानत लिंदा जमानतको अङ्क तोकी सो बमोजिमको सम्पत्ति जमानत लिनु पर्छ । जमानत दिनु पर्ने व्यक्तिले आफ्नै सम्पत्ति जमानत दिएको भए अड्डाबाट तोकिएको समय र स्थानमा उपस्थिति नभएमा जमानतको रकम सो जमानत रहेको सम्पत्ति वा निजको अरु कुनै सम्पत्तिबाट असूल गर्ने शर्त उल्लेख गरी निजको कागज गराउनु पर्छ । निजको लागि अरु कसैले आफ्नो सम्पत्ति जमानत दिएको भए अड्डाबाट तोकिएको समय र स्थानमा निजलाई उपस्थित नगराएमा जमानतको रकम सो जमानत रहेको सम्पत्ति वा जमानी हुने व्यक्तिको अरु कुनै सम्पत्तिबाट असूल गर्ने शर्त गराई जमानी हुने व्यक्तिको कागज गराउनु पर्छ - २

धरौट वा जमानत दिनु पर्ने व्यक्ति नाबालक भए माथि दफा १ वा २ बमोजिम गराउनु पर्ने कागज निजको सट्टा निजको संरक्षकबाट गराउनु पर्दछ - - - - - - - - - - ३

---

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

λ नवौं संशोधनद्वारा संशोधित ।

☯ नवौं संशोधनद्वारा थप ।

☯१२४ख. नं. ॥    ॥ यो ऐन वा अन्य प्रचलित कानून बमोजिम अन्यथा हुनेमा बाहेक तहकिकातको सिलसिलामा लिएको धरौट वा जमानत तहकिकात सकिएपछि फिर्ता वा फुकुवा गरी दिनु पर्छ । अड्डाले कुनै मुद्दामा कारबाहीका लागि लिएको धरौट वा जमानत सो मुद्दाको निर्णय भएपछि फिर्ता वा फुकुवा गरी दिनु पर्छ ।

☯१२४ग. नं. ॥    ॥ अड्डाले कुनै अभियुक्तलाई थुनामा राख्दा, थुनामा राखिएको अभियुक्तलाई छाड्दा वा कुनै अभियुक्तसँग धरौट वा जमानत लिंदा कारण सहितको पर्चा खडा गर्नु पर्छ । सो पर्चामा चित्त नबुझ्नेले पुनरावेदन सुन्ने अड्डामा निवेदन दिन सक्नेछ । त्यस्तो निवेदनमा तीस दिनभित्र निर्णय दिई सक्नु पर्छ ।

१२५ नं. ॥    ॥ धरौट वा जमानीमा छुटेको व्यक्तिबाट फैसला बमोजिम असूल गर्नु पर्ने केही भए असूल गरी बाँकी धरौट फिर्ता हुनेछ र जमानीपत्र स्वत: खारिज भएको मानिनेछ ।

१२६ नं. ॥    ॥ कुनै व्यक्ति उपर कुनै फौजदारी अभियोग लगाई नालिस गर्ने वा त्यस्तो अभियोग लगाई कारबाही चलाउन प्रहरीलाई कुनै अपराधको सूचना दिने व्यक्तिलाई त्यस्तो नालिस गरेको वा सूचना दिएको कारणले मात्र तहकिकात वा पुर्पक्षका लागि धरौट वा जमानी मागिने वा थुनामा राखिने छैन ।

१२७ नं. ॥    ॥ नेपाल सरकार वादी भै चलाएको फौजदारी मुद्दामा पक्राउ भै आएका वा आफै हाजिर हुन आएका प्रतिवादीलाई मुद्दा हेर्ने अड्डाबाट निज उपर लागेको अभियोगको सबै कागज सुनाई मतलब सम्झाई सोधी कसूरमा साबित भए उसै बखत ठाडै बयान लिई र इन्कारमा रहे हाकिमको तजबिजले ठाडै बयान गराउन पर्ने भए ठाडै बयान लिई र आफू पोलिनाको कारण बताई सबुत प्रमाण खोली प्रतिवादी दिन मौका दिन हुने भए प्रतिवादीलाई ऐन बमोजिम गरी राखी सात दिनसम्मको म्याद दिई म्यादभित्र प्रतिवादी दिए प्रतिवादीबाट र म्यादभित्र प्रतिवादी दिन नसके म्याद नाघेकोमा भोलिपल्ट अड्डैबाट सवाल गरी जवाफ लिई सो बमोजिम कारबाही किनारा गर्नु पर्छ ।

१२८ नं. ॥    ॥ प्रतिउत्तर दिंदा वादीले पक्रे बमोजिम इन्साफ गर्नु पर्ने कुराको चाहिने व्यहोराको जवाफ लेखी ल्याएको मात्र यसै नम्बरको नमूना बमोजिमको प्रतिउत्तरपत्र लिन हुन्छ । बढ्ता मुद्दाको लेखी ल्याएको लिन हुँदैन ।

## प्रतिउत्तरपत्र

आगे फलाना जिल्ला, मौजा, ठाउँ बस्ने वर्ष यतिका फलानाले मेरो नाउँमा दिएको यति नम्बरका फिरादपत्रको मुद्दामा मेरो भएको व्यहोरा यो हो वा यो व्यहोराले दिनु तिर्नु पर्दैन गरेको होइन ऐन बमोजिम इन्साफ होस् । यो व्यहोरा नठहरे ऐन बमोजिम बुझाउँला । (जो व्यहोरा छ सो व्यहोरा प्रकरण छुट्याई लेख्नु लेखाई लिनु पर्छ)

## तपसिल

यस कुराको प्रमाण - - - - - - - - - - - - - - - - - - - - - - - - - -

साक्षी - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

## देखी जान्ने

फलाना जिल्ला, मौजा, ठाउँ बस्ने अन्दाजी वर्ष यतिको फलाना

वा नाउँ नजानेको चिन्हेको - - - - - - - - - - - - - - - - -

## सुनी जान्ने

फलाना जिल्ला, मौजा, ठाउँ बस्ने अन्दाजी वर्ष यतिको फलाना

वा नाउँ नजानेको चिन्हेको - - - - - - - - - - - - - - - - -

कागज - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

फलाना मितिको फलाना व्यहोराको कागज फलाना ठाउँमा छ ---

---

फलाना जिल्ला, मौजा, ठाउँमा जन्म भई हाल फलाना जिल्ला, मौजा, ठाउँ बस्ने ❒फलानाको छोरा, छोरी, पति वा पत्नी वर्ष यतिको फलानाले फलाना अड्डामा चढाएँ (दिनेको सहीछाप गर्नु गराउनु पर्छ)

इति संवत् २० ... ... साल ... ... गते रोज ... ... शुभम् --------------------

१२९ नं. ॥ ॥ समाव्हान, इतलायनामा, म्याद तामेल भएको झगडियाले तोकिएका म्यादभित्र जुन दिनमा प्रतिउत्तरपत्र वा बयान दिन आए पनि उसै दिन तुरुन्त लिनु पर्छ ।

१३० नं. ॥ ॥ म्यादभित्र प्रतिउत्तरपत्र दिन ल्याएकोमा वतनसम्म फरक परेको वा उमेर नखुलेको भए अर्कै कागतमा खुलाई र अक्षर दोहोरिएको वा ढाँचा नमिलेको देखिए प्रतिवादीको किनारामा कैफियत लेखी झगडियाको सहीछाप गराई सोही कुरा शिरमा समेत लेखी हाकिमले दस्तखत समेत गरी राख्नु पर्छ ।

१३१ नं. ॥ ॥ ✖ ... ... ...

१३२ नं. ॥ ॥ ऐनले फिरादपत्र प्रतिउत्तरपत्र लिई हेर्नु पर्ने मुद्दा बाहेक अरु ठाडै कारबाही गरी हेर्नु पर्ने मुद्दामा मुद्दा हेर्ने अड्डाबाट वादी प्रतिवादीसँग जो खुलाउनु पर्ने कुरा सोधी जवाफ लिई प्रमाण समेत खुलाई बयान लिई कारबाही किनारा गर्नु पर्छ ।

१३३ नं. ॥ ॥ झगडियासँग हाकिमले सोध्नु परेको मनासिब माफिकको कुरा जहिलेसुकै सोधी कागज गराए पनि हुन्छ ।

१३४ नं. ॥ ॥ स्वास्नीमानिसलाई केही कुराको अभियोग लागी आउँदा बेमनासिब ठट्टा मस्करीका हिसाबसँग सोध बुझ गर्न हुँदैन ।

१३५ नं. ॥ ॥ ❖... ... ...

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

❖ छैठौं संशोधनद्वारा खारेज ।

१३६ नं. ॥ ॥ सरजमीन वा मौका तहकिकात गर्दा सो ठाउँमा फेला परेसम्मका अभियुक्तको कागज गराई निजलाई समेत रोहवरमा राखी गर्नु पर्छ ।

१३७ नं. ॥ ॥ नेपाल सरकार वादी भई सरजमीनमा गई तुरुन्त बुझ्नु पर्ने बाहेक देवानी मुद्दामा प्रतिवादीहरुको प्रतिउत्तरपत्र परिनसकी वा प्रतिउत्तरपत्र नलाग्ने अवस्था पुगिनसकी र फौजदारी मुद्दामा बयान वा प्रतिउत्तर लिईनसकी वा सो नलाग्ने अवस्था पुगिनसकी प्रमाण बुझ्न हुँदैन ।

१३८ नं. ॥ ॥ ✖ ... ... ...

१३९ नं. ॥ ॥ वादी प्रतिवादीका पेटबोलीमा लेखिएको मानिस नबुझी मुद्दा नछिनिने देखिएमा प्रमाणका तवरले अड्डाबाट बुझ्नु हुन्छ । सो बुझ्दा प्रतिवादी सरह कारणी देखिन आएमा प्रतिवादी सरह प्रमाण समेत खुलाई बयान लिई कारणी सरह नै तारिखमा राखी उसले दिएको प्रमाण समेत बुझी र सो व्यक्ति प्रमाण सरहसम्म देखिएमा बयानसम्म गराई फैसला गर्नु पर्छ ।

१४० नं. ॥ ॥ प्रतिउत्तर परेकोमा सरकारी अड्डामा रहेको समेत दुई थरको प्रमाण बुझ्नालाई प्रतिउत्तर दर्ता भएको मितिले र तोकिएका तारिखमा प्रतिउत्तर दिन नसकी एकतर्फी हुने भएकोमा एकतर्फी प्रमाण बुझ्नालाई सो तारिख गुज्रेका मितिले सात दिनदेखि बढ्ता मनासिब माफिकको कारणले बाहेक ढिला गर्न हुँदैन ।

१४१ नं. ॥ ॥ ⁾..................... राजकाज सम्बन्धी वा ज्यान सम्बन्धी मुद्दामा वारदात भएको देख्ने साक्षीलाई जुन अड्डामा मुद्दा परेकोछ उसै अड्डामै झिकाई बकाउनु पर्छ । सो बाहेक सुन्ने र अरु मुद्दाका साक्षीलाई हाकिमका तजबीजले अड्डामा ल्याई बकाउनु पर्नेलाई झिकाई र अड्डैमा झिकाई बकाउनु नपर्ने टाढाका भए नजिक अड्डा मार्फत बन्दसवालद्वारा बुझ्नु पर्छ ।

१४२ नं. ॥ ॥ नबुझी नहुने अड्डामा आउन नसक्ने बूढा बूढी र होश भएको अशक्त बेरामीलाई साक्षी बुझ्नु पर्ने भएमा उसैका घरमा गई उसले भने बमोजिमको बकपत्र लेखाई ल्याउन हाकिम आफै गै वा आफूभन्दा मुनिको सबभन्दा ठूलो दर्जाको कर्मचारीलाई खटाई पठाउन हुन्छ ।

⌘१४३ नं. ॥ ॥ वादी प्रतिवादीमा लेखिएका साक्षी वा सरजमीनका मानिसहरुलाई बुझ्ने तारिख तोक्दा झगडियालाई पनि उसै दिनको तारिख मिलाई तोकिदिनु पर्छ । अलग अलग तारिख तोक्नु हुँदैन । साक्षी वा सरजमीनका मानिसलाई बुझ्दा झगडियाहरुको रोहबरमा बुझ्नु पर्छ । झगडिया हाजिर नभएकोमा भने झगडिया नभएपनि बुझ्न हुन्छ ।

⌘१४४ नं. ॥ ॥ वादी प्रतिवादीमा लेखिएका साक्षीहरुलाई अड्डाले तोकेको तारिखमा मुद्दाका पक्षहरु आफैले उपस्थित गराउनु पर्छ । सो बमोजिम उपस्थित गराउन नसकेमा यसै महलको ११५ नम्बर बमोजिम हुनेमा बाहेक पछि त्यस्तो साक्षी बुझिने छैन । तर पुर्पक्षको लागि थुनामा रहेको अभियुक्तले पेश गर्न चाहेको साक्षीलाई अड्डैबाट समाव्हान जारी गरी बुझी पाउँ भन्ने निवेदनपत्र दिएमा अड्डाले प्रति साक्षी

---

✖ तेस्रो संशोधनद्वारा खारेज ।

⁾ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

पाँच रुपैयाँको दरले समाव्हान दस्तुर लिई त्यस्तो साक्षीका नाउँमा समाव्हान जारी गरी बुझ्न हुन्छ ।

*१४४क. नं. ॥ ॥ यस महलको १४४ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि अड्डाले तोकेको तारिखमा खोलो, पहिरो वा हिउँले बाटो बन्द भई वा कर्फ्यु घोषणा भई वा अन्य कुनै व्यहोराबाट यातायातको साधन नचलेको वा भूकम्प जस्ता दैवी प्रकोप परी साक्षी उपस्थित गराउन नसकेकोमा बाटो बन्द भएको वा यातायातको साधन नचलेको र बाटो खुलेको वा यातायातको साधन चलेको मिति तथा दैवी प्रकोप परेको समेत व्यहोरा खुलाई सम्बन्धित गाउँपालिका वा नगरपालिका वा सरकारी अड्डाबाट निस्सा लिई पुन: अर्को तारिख तोकी साक्षी बकाई पाउँ भनी पक्षले सो तारिख गुज्रेको मितिले बाटाको म्याद बाहेक दश दिनभित्र उपस्थित भई कारण खोली निवेदन दिएमा अर्को तारिख तोकी साक्षी बुझ्नु पर्छ ।

१४५ नं. ॥ ॥ ⌦ ... ... ...

१४६ नं. ॥ ॥ साक्षी बकाउँदा भरसक तोकिएका तारिखका दिनैमा साक्षी बकाउन तारिख तोकिएको सबै मुद्दाको साक्षी बकाईसक्नु पर्छ । त्यस्तो सबै मुद्दाको साक्षी बकाउन नभ्याउने भएमा जुन मुद्दाको उसै दिन सकिन्छ सो मुद्दाको त्यसै दिन बकाई अरु मुद्दाको साक्षीलाई भोलिपल्टैको तारिख तोकिदिनु पर्छ । नभ्याउने भएमा बाहेक एकै मुद्दाको साक्षीहरुलाई पनि कोही आज कोही भोलि पर्सि गरी बकाउन हुँदैन ।

१४७ नं. ॥ ॥ बयान बकपत्र गराउँदा जसको इजलास हो उसैले गराउनु पर्छ र सो गराउँदा निजले आफ्ना अड्डाको कम्तीमा मुखिया विचारी दर्जासम्मका कर्मचारीको आवश्यक सहायता लिन हुन्छ ।

१४८ नं. ॥ ॥ ⁂ ... ... ...

१४९ नं. ॥ ॥ ⁂... ... ...

१५० नं. ॥ ॥ साक्षी बकाउँदा यस मुद्दामा झुट्टा बके यो सजाय होला इमान धर्म सम्झी भएको साँचो कुरा जस्ताको तस्तो बयान गर भनी पहिले सुनाई मनासिब माफिक चाहिने व्यहोराको कुरा पुऱ्याई मुद्दा नछुट्याई सवाल जवाफ गरी नमूना बमोजिमको बकपत्र वा बन्द सवाल जो गर्नु पर्ने गर्नु पर्छ ।

१५१ नं. ॥ ॥ ⁂ ... ... ...

१५२ नं. ॥ ॥ साक्षीको बकपत्रको नमूना ।

जिल्ला फलाना, मुकाम फलाना, फलाना अड्डाका हाकिम फलानाका इजलासमा वादी वा प्रतिवादीको साक्षी वा यस व्यहोराको फलानाले इमान धर्म सम्झी बकेको बकपत्र- - - - -

---

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

⌦ दशौं संशोधनद्वारा खारेज ।

⁂ प्रमाण ऐन, २०३१ द्वारा खारेज ।

| | |
|---|---|
| सवाल-❒तिम्रो बाबुआमा भए बाबुआमाको नभए संरक्षकको नाउँ, तिम्रो नाउँ, थर, उमेर, पेशा के हो ? घर कहाँ हो ? - - - - - १ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - १ |
| सवाल-दुई थर झगडियासँग तिम्रो चिनाजानी कारोवार, नाता, इबी वा झगडा छ छैन ?-- २ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - २ |
| सवाल-तिमीले झुट्टा बकेमा सजाय पाएको छ छैन ? - - - - - - - - - - - - - - - ३ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - ३ |
| सवाल-फलानाले फलाना माथि यस मुद्दाको नालिस दिएको छ वा फलाना कुरामा फलाना पक्राउ भएकोछ त्यसमा तिमीले देखे जाने सुनेको के के छ खुलासा बयान गर (वा हाकिमका तजबीजले अरु चाहिने कुराको जवाफ लिए पनि हुन्छ) - - - - -- - - - - - ४ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - ४ |

(यस्तै रीतसँग जे सोध्नु पर्छ सवाल गरी सोध्न र जे जवाफ दिन्छ सो लेख्नु पर्छ)

१५३ नं. ॥ ॥ ⁂ ... ... ...

१५४ नं. ॥ ॥ साक्षीसँग सवाल गर्नु पर्ने सबै गरी जवाफ लिई सकेपछि यस विषयमा तिम्रो बयान गर्नु पर्ने केही बाँकी छ कि भनी र तिम्रो बयान र बयान बमोजिम लेखिएको दुरुस्त छ कि भनी सोधी जे जवाफ दिन्छ सो पनि लेख्नु पर्छ ।

१५५ नं. ॥ ॥ सवाल जवाफ सबै लेखिसकेपछि जवाफको पुछारमा अरु अक्षर थप्न नहुने गरी साक्षीको नाउँ लेखी त्यसमा र बन्द बन्दमा समेत साक्षीको सहीछाप गराउनु पर्छ । पुछारमा मिति लेखी शिरमा र बन्दमा अड्डाको छाप लगाई शिर पुछार र बन्द बन्दमा हाकिमले दस्तखत पनि गर्नु पर्छ ।

१५६ नं. ॥ ॥ साक्षी बकाउँदा जसको साक्षी हो सो झगडिया रोहवरमा भए सो झगडियाको र सो झगडिया रोहवरमा नभए जुन झगडिया छ उसको सो साक्षीले बके बमोजिम लेखेको दुरुस्त छ भन्ने साक्षीका बकपत्रका पुछारमा लेखी सहीछाप गराउनु पर्छ । दुई थर झगडिया नभए वा झगडियाले सहीछाप नगरे सोही कैफियत लेखी हाकिमले दस्तखत गर्नु पर्छ ।

१५७ नं. ॥ ॥ झगडियाको बयान लिनु पर्दा बकपत्रको रीतसँग सवाल जवाफ गरी लिनु पर्छ । इमान धर्म सम्झी बकेको भन्ने र तिम्रो बयान गर्नु पर्ने केही कुरा बाँकी छ कि भनी सोध्न लेखाउन पर्दैन ।

λ१५८ नं. ॥ ॥ बयान बकपत्र गराउँदा कुरा फोरी मुद्दा छुट्याई छोटकरी सवाल गरी सोधिएको सवाल र जवाफ उल्लेख गर्नु पर्छ ।

१५९ नं. ॥ ॥ झगडिया वा साक्षीको अड्डाबाट सोधनी गर्नु पर्ने कुराको समेत गैह्र कागज गराउँदा जवाफै दिएन वा आफूले दिएको जवाफमा सहीछाप गरेन भने कैफियत लेखी हाकिमको र उ मुनिका सबैभन्दा ठूलो दर्जाको एकजना कर्मचारीको दस्तखत गरी सो कागज स्रेस्तामा राख्नु पर्छ ।

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

⁂ प्रमाण ऐन, २०३१ द्वारा खारेज ।

λ नवौं संशोधनद्वारा संशोधित ।

१६० नं. ॥ ॥ अड्डामा हाजिर नगराए हुने वा टाढाको मुद्दा परेको झगडिया साक्षीका बकपत्र वा बन्द सवाल अड्डाबाट गराउन नपाई अर्को अड्डामा पठाई तामेल गराई लिनु पर्नेमा नमूना बमोजिमको बन्दसवाल लेखी जति कुरा सोध्नु पर्ने हो उति कुराको सवाल लेखी शिरमा अड्डाको छाप र हाकिमको दस्तखत गरी जुन अड्डामा पठाई जवाफ लिनु पर्ने हो उसै अड्डाका नाउँमा यति दिनभित्र बन्दसवाल ऐन बमोजिम रीत पुऱ्याई तामेल गरी पठाइदिनु भन्ने मनासिब माफिकको म्याद दिई लेखोट साथ पठाउनु पर्छ ।

१६१ नं. ॥ ॥ बन्दसवालको नमूना ।

फलाना अड्डाका हाकिम फलानाले जारी गरेको
फलाना ठाउँ बस्ने फलाना झगडिया, साक्षी वा अरु
व्यहोराको फलानाको बन्द सवाल मिति फलाना - - -

वादी फलाना - - - - - - - - - - - - - - प्रतिवादी फलाना - - - - - - - - -

मुद्दा फलाना

| सवाल | जवाफ |
|---|---|
| सवाल-तिम्रो ❐बाबुआमा भए बाबुआमाको नभए संरक्षकको नाउँ, तिम्रो नाउँ, थर, उमेर, पेशा के हो ? घर कहाँ हो ?- - - - - - - - - - - १ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - १ |
| सवाल-दुई थर झगडियासँग तिम्रो चिनाजानी कारोवार, नाता वा इबी झगडा छ छैन ?- - २ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - २ |
| सवाल-तिमीले झुट्टा बकेमा सजाय पाएको छ छैन ? - - - - - - - - - - - - - - - - ३ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - ३ |
| सवाल-फलानाले फलाना माथि यस मुद्दाको नालिस दिएको छ वा फलाना कुरामा फलाना पत्राउ भएकोछ त्यसमा तिमीले देखे जाने सुनेको के के छ खुलासा बयान गर (वा हाकिमका तजबीजले अरु चाहिने कुराको जवाफ लिए पनि हुन्छ)- - - ४ | जवाफ- जे भन्छ सो लेख्नु पर्छ - ४ |

(यस्तै रीतसँग जति कुरा सोध्नु पर्ने हो सो कुराको सवाल लेख्नु पर्छ । झगडियाका नाउँको बन्दसवालमा भने सवाल २।३ जस्ता सवाल उठाउन पर्दैन)

१६२ नं. ॥ ॥ बन्दसवालको जवाफ लिने अड्डाले ऐनको रीत पुऱ्याई मानिस झिकाई सवालको जवाफ लिई सो जवाफबाट केही मुनासिब माफिक कुराको सवाल गर्नु पर्ने देखियो भने सो कुराको सवाल पनि गरी जवाफ लिई बकपत्रको रीत पुऱ्याई सहीछाप गरी गराई लेखोटसाथ तोकिएका म्यादभित्र पठाईदिनु पर्छ । सो म्यादमा कागज गराउनु पर्ने मानिस हाजिर नभै बन्द सवाल तामेल गर्न नपाए कारण खोली जवाफसाथ फिर्ता पठाईदिनु पर्छ ।

१६३ नं. ॥ ॥ देवानी मुद्दामा नाउँ नजानेको साक्षी लेखी ल्याएको लिन र जुनसुकै मुद्दामा भागे बेपत्ता भएको साक्षी लेखी ल्याएको पनि बुझ्न हुँदैन ।

१६४ नं. ॥ ॥ ⁂ ... ... ...

---

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

⁂ प्रमाण ऐन, २०३१ द्वारा खारेज ।

१६५ नं. ॥ ॥ ⁂ ... ... ...

१६६ नं. ॥ ॥ ⁂... ... ...

१६७ नं. ॥ ॥ ⁂... ... ...

१६८ नं. ॥ ॥ ⁂... ... ...

१६९ नं. ॥ ॥ झगडियाले किटानसाथ लेखी नदिएकोमा साक्षीबाट पक्का प्रमाण पुग्ने गरी बकिदियो भने त्यस्ता साक्षीले नभएको झुट्टा कुरा बकी लेखिदिएको ठहरेमा त्यस्तो साक्षीलाई त्यसले बके लेखेको कुराबाट झगडियालाई ... ... सर्वस्व सहित जन्म कैद वा जन्म कैद हुनेमा भए छ महिनादेखि दुई वर्षसम्म कैद, छ वर्ष वा सो भन्दाबढी कैद हुने वा सर्वस्व हुनेमा भए तीन महिनादेखि एक वर्षसम्म कैद र अरु कैद हुनेमा भए पाँच दिनेदेखि पाँच महिनासम्म कैद हुन्छ । झगडियाले किटानसाथ लेखिदिएकोमा साक्षीले सोही कुराको प्रमाण पुग्ने गरी बकी दिएको भए निजले झुट्टा बकी लेखी दिएको ठहरेमा त्यस्तो साक्षीलाई निजले बके लेखेको कुराबाट झगडियालाई ... ... सर्वस्वसहित जन्मकैद वा जन्मकैद हुनेमा भए दुई हजार रुपैयाँसम्म जरिबाना वा एक महिनासम्म कैद वा दुवै सजाय हुन्छ, छ वर्ष वा सोभन्दा बढी कैद वा सर्वस्व हुनेमा भए एक हजार पाँच सय रुपैयाँसम्म जरिबाना वा बीस दिनसम्म कैद वा दुवै सजाय हुन्छ र अरु कैद हुनेमा भए एक हजार रुपैयाँसम्म जरिबाना वा पन्ध्र दिनसम्म कैद वा दुवै सजाय हुन्छ । लेखिएदेखि बाहेक झगडियालाई जरिबाना मात्रको सजाय हुनेमा भए सात सय रुपैयाँसम्म जरिबाना वा दश दिनसम्म कैद वा दुवै सजाय हुन्छ । ... ... ...

१७० नं. ॥ ॥ यसै महलको १६९ नम्बर बमोजिम झुट्टा बक्ने साक्षीलाई तोकिएको सजाय असूल गर्दा हार्ने झगडियाले पुनरावेदन दिन पाउने म्यादसम्म र पुनरावेदन परिसकेकोमा इन्साफको टुङ्गो लागी आखिरी फैसला नभएसम्म साक्षीलाई पक्री असूल गर्न हुँदैन । लगतसम्म कसी व्यहोरा जनाई राखी झगडियाले म्यादभित्र पुनरावेदन नदिई गुजारी बसेमा र पुनरावेदन परेमा आखिरी फैसला भई आएपछि मात्र साक्षीलाई पक्री फैसलाले लागेको सजाय ऐन बमोजिम असूल गर्नु पर्छ ।

◆१७०क. नं. ॥ ॥ झगडियाले प्रस्तुत गर्न नसक्ने तर मुद्दामा इन्साफ गर्न चाहिने अरु व्यक्तिको कब्जामा रहेको लिखत पेश गर्न भनी सो व्यक्तिलाई मुद्दा चलिरहेको जुनसुकै बखत अड्डाले आदेश दिन सक्नेछ र त्यस्तो आदेश पाएमा सो आदेशमा तोकिएको अवधिभित्र सो लिखत आफै अड्डामा उपस्थित भई वा अरु कुनै व्यक्ति मार्फत पेश गर्नु निजको कर्तव्य हुनेछ । सो बमोजिम लिखत पेश नगर्ने वा लिखत पेश गर्न नसकेको मनासिब कारण पनि नदेखाउने व्यक्तिलाई अड्डाले पाँचसय रुपैयाँसम्म जरिबाना गर्न सक्नेछ ।

१७१ नं. ॥ ॥ झगडा परेको अचल केहीको नक्सा वा नापजाँच नगरी मामला फैसला गर्न नहुने देखिएकोमा नक्सा खडा गराउँदा वा झगडा परेको वस्तु घर

---

दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

सातौं संशोधनद्वारा झिकिएको ।

◆ तेस्रो संशोधनद्वारा थप ।

जग्गा नापजाँच गर्नु पर्दा दुवै थर झगडियालाई सो नक्सा वा नाप जाँच गर्नु पर्ने ठाउँमा हाजिर हुन जानु भनी तारिख तोकी वा तारिखको सूचना गरी सो तारिखको दिन हाकिम वा कम्तीमा मुखिया विचारी दर्जासम्मका एक जना कर्मचारी र नजिक अमिन भएका ठाउँमा अमिन समेत गै दुई थर झगडिया, सरजमीनका मानिस, 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि र भरसक जिमिदार पटवारी तालुकदार समेत राखी घर जग्गाको समेत जे हेर्न नापजाँच गर्न पर्ने हो हेरी नापी जाँची नक्सा खडा गर्नु पर्नेमा जस्ताको तस्तै दुरुस्त पारी नक्सा खडा गरी मुख्य नक्सा खडा गर्नु पर्ने जुन वस्तु हो ठीक तवरसँग हेरी दुरुस्त देखिने गरी नक्सा लेखी सो नक्साका पुछारमा माथि नक्सामा यो यो यस्तो यस्तो कुरा लेखिएको दुरुस्त छ भन्ने नक्साको रुप कैफियतबाटै बुझ्न सक्ने गरी कैफियत समेत खोली र नापजाँच गरेकोमा नापी जाँची यस्तो यस्तो भएको भनी सबै व्यहोरा खुलाई झगडिया र सो सरजमीनमा रहे बसेका सबैको सहीछाप गराई खटी गएका कर्मचारीले पनि सहीछाप गरी मिसिलसाथ राख्नु पर्छ । सो नक्सा नापजाँच गर्नु पर्ने ठाउँमा झगडिया गएनन् वा गए पनि सहीछाप गर्न मञ्जुर गरेनन् वा झगडिया तारिखमा हाजिर नभएका मुद्दा भए माथि लेखिएका अरु मानिसहरु राखी माथि लेखिए बमोजिम जो गर्नु पर्ने नक्सा नापजाँच गरी झगडिया नभएको वा भएपनि सहीछाप नगरेको कैफियत जनाई खटिएका मुख्य कर्मचारी र 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि कम्तीमा एकजना सदस्यले सहीछाप गर्नु पर्छ । सो रीत नपुगेको नक्सा नाप जाँच सदर हुँदैन । लेखिए बमोजिम नक्साको रुप स्पष्ट देखिने गरी कैफियत खोली लेख्ने कुरा बाहेक अरु कुरा सो नक्सामा लेख्न हुँदैन ।

▩१७१क. नं. ॥ ॥ चल अचल सम्पत्ति वा विगो दाबी भएको तथा हक बेहकको प्रश्न उठेको मुद्दामा विवादित अचल सम्पत्ति यथास्थितिमा राखी कुनै किसिमको निर्माण गर्न नदिन वा भइरहेको निर्माण बिगार्न वा भौतिक स्वरुप परिवर्तन गर्न नदिन तथा चल अचल सम्पत्तिको उपभोग सम्बन्धी प्रश्न उठेकोमा त्यस्तो उपभोग सम्बन्धमा उपयुक्त व्यवस्था गराउन, कुनै बैंक कम्पनी वा अन्य निकायमा रहेको कुनै किसिमको निक्षेप वा हिसाबबाट प्रतिवादीले पाउने बाँकी भएको निक्षेप वा हिसाबको भुक्तानी नगर्न नगराउन वा राजीनामा वा अन्य कुनै व्यहोराबाट त्यस्तो चल अचल सम्पत्तिको हक हस्तान्तरण नगराउनको लागि पक्षले निवेदन दिएकोमा अदालतले मुद्दाको प्रकृति र औचित्य हेरी प्रतिउत्तरपत्र नपरेसम्मको लागि वा मुद्दाको किनारा नभएसम्मको लागि वादीको दाबी पुग्न सक्ने जस्तो देखिएमा दाबी पुग्नेसम्मको सम्पत्ति रोक्का गर्न वा अन्य उपयुक्त आदेश जारी गर्न सक्नेछ ।

*१७१ख. नं. ॥ ॥ यसै महलको १७१क. नं. बमोजिम जारी भएको आदेश कायम राख्नु पर्ने होइन भनी निवेदन पर्न आएमा त्यस्तो निवेदन उपर विचार गरी त्यस्तो आदेश कायम राख्नु नपर्ने भए अड्डाले अघि जारी गरेको आदेश खारिज गर्न सक्नेछ ।

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

▩ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

तर बालीको हकमा जग्गा मिच्नेको महलको १० नं. को रीत पुऱ्याई रोक्का गर्नु पर्छ ।

१७२ नं. ॥ ॥ नेपाल सरकार वादी हुने फौजदारी मुद्दामा तहकिकात गर्दा जुन अपराधका सम्बन्धमा सो तहकिकात गर्न लागेको हो सो अपराधसित सम्बन्धित कुनै वस्तु वा धनमाल कुनै घर वा अरु कुनै ठाउँमा फेला पर्ने सम्भावना छ भन्ने विश्वास गर्ने मनासिब माफिकको कारण भएमा र सो वस्तु वा धनमाल सो घर वा ठाउँको तुरुन्त तलासी नलिएको खण्डमा प्राप्त नहुने आशंका भएमा आफूले विश्वास गर्नु परेको कारण र जुन वस्तु वा धनमालका सम्बन्धमा तलासी लिनु पर्ने हो सो वस्तु वा धनमालको विवरण स्पष्ट बुझिने गरी लेखी राखी कम्तीमा λप्रहरी सहायक निरीक्षक दर्जासम्मका प्रहरी अधिकृतले सो घर वा ठाउँको देहाय बमोजिम तलासी लिन वा लिन लगाउन सक्नेछ र सो बमोजिम तलासी लिइसकेपछि सो लिएको तीन दिनभित्र तलासी लिएको कारण र तलासी लिएको वस्तु वा धनमाल इत्यादिको फिहरिस्तको एक प्रति नक्कल मुद्दा हेर्ने अड्डामा पठाउनु पर्छ - - - - - - - - - - - - - - - -

कुनै घर वा ठाउँको तलासी लिनु पर्ने भएमा सो घर वा ठाउँमा बसोवास गरी आएका वा सो घर वा ठाउँका धनी वा जिम्मा लिएको मानिसलाई तलासी लिन खोजेको कारण खोली सो कुराको सूचना दिनु पर्छ र सो बमोजिम सूचना पाएमा त्यस्ता मानिसले पनि तलासी लिन आएको प्रहरी अधिकृतलाई बाधा रोकावट नगरी सरासर प्रवेश गर्न दिनु पर्छ - - - - - - - - - - - - - -- - - - - - - - - - १

माथि १ दफा बमोजिम तलासी लिने घर वा ठाउँमा बस्ने वा सो घर वा ठाउँका धनी वा जिम्मा लिएका व्यक्तिले तलासी लिने प्रहरी अधिकृतलाई लेखिए बमोजिम प्रवेश गर्न नदिएमा सो प्रहरी अधिकृतले सो घर वा ठाउँमा रहेबसेका स्वास्नी मानिसहरुलाई हट्ने सूचना र मौका दिई आवश्यकता अनुसार बाहिरी वा भित्री कुनै झ्याल ढोका वा छेका खोली तोडी फोडी भित्र पसी तलासी लिन हुन्छ - - - - - २

यस नम्बरमा लेखिए बमोजिम कुनै घर वा ठाउँको तलासी लिंदा यसै महलको ११६ नम्बरमा घरभित्र पस्ने कुराका सम्बन्धमा गरिएको व्यवस्थाको समेत पालन गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

यस नम्बर बमोजिम कुनै घर वा ठाउँको तलासी लिदा त्यस ठाउँको 🕮गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि, दुईजनामा नघटाई भलादमीहरु, घर धनी वा उसको एकजना प्रतिनिधि र पाएसम्म जिमिदार, तालुकदार, पटुवारी समेत साक्षी राखी तलासी लिने र साक्षी बस्ने सबैको आँग खोली केही वस्तु नलिई सो घर वा ठाउँभित्र पसी तलासी लिनु पर्छ - - - - - - - ४

माथिका दफाहरु बमोजिम तलासी गर्दा तलासी गरिएको वस्तु वा धनमालका सम्बन्धमा कुनै मानिसको आँगको तलासी लिनु परेमा सो समेत लिन हुन्छ र सो

λ नवौं संशोधनद्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

बमोजिम [◎]महिलाको आँगको तलासी लिनु परेमा सो [◎]महिलाको बेइज्जत नहुने गरी पत्यारकी अर्की [◎]महिलाबाट लिन लाउनु पर्छ - - - - - - - - - - - - - ५

यस नम्बर बमोजिम तलासी लिंदा निस्केको मालसामान वा वस्तुको सबै विवरण र सो पाइएको ठाउँ र अवस्था खोली फेहरिस्त बनाई तलासी लिने र साक्षी बस्ने सबैले सहीछाप गर्नु पर्छ र घर धनी वा निजको प्रतिनिधिलाई सो फेहरिस्तको एक प्रति नक्कल र सो मध्ये कुनै धनमाल वा वस्तु प्रहरी अधिकृतले कब्जा गरी लगेमा त्यसको भरपाई समेत दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - ६

माथि ४ दफा बमोजिम साक्षी बस्नु पर्ने मानिसहरुले साक्षी बस्न इन्कार गरेमा वा साक्षी बसी सहीछाप गरी नदिएमा निजलाई एकसय रुपैयाँसम्म जरिबाना हुन्छ- - - ७

१७३ नं. ॥ ॥ मुद्दामा मानिस सनाखत गर्नु पर्ने भएमा सनाखत गर्नु पर्ने मानिसलाई देख्न हेर्न नपाउने ठाउँमा राखी जुन मानिसलाई सनाखत गराउनु पर्छ सो मानिस जस्तै किसिमका उमेर वर्ष वर्ण पहिरन मिल्ने कम्तीमा चारजनामा नघटाई अरु मानिसहरु ल्याई यथासम्भव सबैलाई एकनास गराई निजहरुका साथमा उभ्याई राखी सनाखत गर्ने प्रत्येक मानिस छुट्टाछुट्टै ल्याई सनाखत गराउनु पर्छ र सो गराउँदा चिन्हेमा चिन्हेको व्यहोरा र चिन्ह नसकेमा नसकेको व्यहोरा लेखी मिसिल सामेल राख्नु पर्छ ।

१७४ नं. ॥ ॥ [✖]... ... ...

[❐]१७५ नं. ॥ ॥ देहायका कामको मानिसले देहायका कामको नाताबाट हक दावी गरी दायर गरेको वा त्यस विषयमा निजहरु उपर परिरहेको मुद्दा फैसला नहुँदै अघिबाटै सो मुद्दामा पुर्पक्ष गरी आएका देहायका काम गरी आएका कामदार मरी वा कामबाट छुट्न गई तारिख गुज्रन गएकोमा सो मुद्दा पुर्पक्ष गरी आएमा साविकवालाले नालिस उजूर गरेको वा प्रतिवादी दिएको कुरा कायम गराई माग्ना निमित्त त्यसको काम गर्नालाई मुकरर भएका हालवालाले तारिख गुज्रेका मितिले बाटाको म्याद बाहेक पैंतीस दिनभित्र मुद्दा सकार गर्न आए मुद्दाबाट हारजित हुँदा अघि पुर्पक्ष गरी आएका साविकवालाको हानि नोक्सानी नहुने देहायका कलममा साविकवालाको मुद्दा हालवालाले सकार गरी पुर्पक्ष गर्न पाउँछ । सकार गराई ऐन बमोजिम गर्नु पर्छ । सकार गर्न नआए कानून बमोजिम गरी छिनी दिनु पर्छ । रैकर र रैकर सरह हुने राजगुठी समेतको काम चलाई आएको मेनेजर, महन्त, पूजारी, तालुकदार, जिम्मावाल ठेक्दार, छुटवाला र जग्गा घर चलन गरी आउने समेतले रैकर र सो सरहका राजगुठीको लगतमा दरिएको चल अचल चोरी दबाई चापी खाएको विषयको - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

सरकारी रकमको नाइके रकमीले सरकारी रकम कायम गराई माग्ने विषयको - - २

बैङ्क, कम्पनी वा अन्य सङ्गठित संस्थाका मुख्य भई दैनिक प्रशासनको काम चलाउनेले सो बैङ्क, कम्पनी वा संस्थाको लिने दिने हक दावी कायम गर्ने विषयको - - - - - ३

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

✖ तेस्रो संशोधनद्वारा खारेज ।

❐ तेस्रो संशोधनद्वारा संशोधित ।

१७६ नं. ॥ ॥ गैह्र मुद्दामा अभियोग लागेको मानिस फैसला नहुँदै मऱ्यो भने सो मर्नेलाई खत बात लाग्दैन । सकार गरेको मुद्दामा पनि सकार गर्ने व्यक्तिलाई सो सकार गरेको नाताले मात्र अपराधी ठहराउन हुँदैन ।

१७७ नं. ॥ ॥ ⁂ … … …

१७८ नं. ॥ ॥ ⁂… … …

⌘१७९ नं. ॥ ॥ नेपाल सरकार वादी हुने मुद्दा बाहेक अरु मुद्दामा दुवैथरी झगडियाले तारिख गुजारेमा यसै महलको ५९ र ६२ नम्बर बमोजिम गुज्रेको तारिख थमाई पाउने म्याद पछि सो मुद्दा डिसमिस हुन्छ । डिसमिस गराए बापत वादीलाई निजले दावी गरेको वा पोलेको कुरा साँचो नठहरे निजलाई हुन सक्ने सजायको प्रमाण नबुझ्दै भए सयकडा पाँच र प्रमाण बुझी सकेको भए सयकडा दश सजाय हुन्छ । डिसमिस भैसकेपछि त्यसै वादीको त्यसै प्रतिवादी उपर त्यसै कुरामा अर्को नालिस लाग्न सक्तैन । वेरितसँग डिसमिस भएकोमा सो वेरित भएको कुरामा सम्म पैंतीस दिनभित्र पुनरावेदन लाग्न सक्छ ।

१८० नं. ॥ ॥ दोहोरो नालिस पुनरावेदन दिएकोमा बाहेक दाखिल गर्न ल्याएको नालिस पुनरावेदनबाट दर्ता हुन नसक्ने देखिएकोमा पनि कानून बमोजिम उसै बखत फिर्ता नगरी अड्डाबाट दर्ता गरेको भई पछि खारिज हुने भएकोमा खारिज वापतको सजाय हुँदैन । सो बाहेक अरु अवस्थामा खारिज भएको मुद्दामा देहाय बमोजिम सजाय हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

दर्ता गर्न ल्याएको फिरादपत्र पुनरावेदनपत्रबाट नालिस पुनरावेदन लाग्ने देखी दर्ता भै मुद्दा चलेकोमा पछि बुझिए दाखिल भएको कागजबाट मात्र मुद्दा नचल्ने भई खारिज हुन आएको भए नलाग्ने दर्ता गराए वापत नालिस खारिज भएकोमा वादीलाई निजले दावी गरेको वा पोलेको कुरा सावित नठहरे निजलाई हुन सक्ने सजायको सयकडा पाँच र पुनरावेदन खारिज भएकोमा अपिलाटलाई इन्साफ सदर ठहरे हुन सक्ने सजायको सयकडा पाँचको दरले सजाय हुन्छ - - - - - - - - - १

परिरहेका मुद्दा नछिनी त्यसै मुद्दामा दोहोरो वादी वा दोहोरो पुनरावेदन दिएको भई पछि दिएको खारिज हुने भएकोमा पछि दिएको ऐन बमोजिम खारिज गरी जानी जानी दोहोरो नालिस पुनरावेदन दिनेलाई बीस रुपैयाँ जरिबाना हुन्छ - - - - - - - २

१८१ नं. ॥ ॥ डिसमिस खारिज भएकोमा लागेको जरिबाना वापत कैद गर्नु पर्दा छ महिनाभन्दा बढी कैद गर्न हुँदैन ।

१८२ नं. ॥ ॥ नेपाल सरकार वादी हुने फौजदारी मुद्दामा, घूस मुद्दामा र घूसको नालिस नपरेको भएपनि अरु परेको मुद्दाका वादी प्रतिवादीबाट वा प्रमाणलाई पेश भएको कागजबाट सरकारी कर्मचारीले घूस खाए मागेको कुरा देखिन आएको घूस मुद्दामा पनि मिलापत्र हुन सक्तैन । सो बाहेक अरु गैह्र मुद्दामा फैसला नभएसम्म जुनसुकै तहमा पनि झगडियाहरुले मिलापत्र गर्न चाहेमा दुवै थर झगडियाले आफू मिल्ने भएको व्यहोराको दरखास्त लेखी मुद्दा परेको अड्डामा दिनु पर्छ र सो बमोजिम दुवै थर झगडियाहरुले दरखास्त दिएमा सो मुद्दा परेको अड्डाको हाकिमले पनि सो

---

⁂ प्रमाण ऐन, २०३१ द्वारा खारेज ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

दरखास्तहरु दुवै थर झगडियाहरुलाई पढी सुनाई त्यसको मतलब र परिणाम समेत राम्रोसित सम्झाई बुझाई त्यसरी सम्झाउँदा बुझाउँदा पनि दुवै थरले हाम्रो मञ्जुरी बमोजिम लेखिएको ठीक दुरुस्त छ भनी मञ्जुर गरेमा हाकिमले सो दरखास्त बमोजिमको मिलापत्र लेखी सो मिलापत्र पढी सुनाई सो झगडियाहरुको सहीछाप गराई आफ्नो दस्तखत समेत गरी अड्डाको छाप लगाउनु पर्छ । सो बमोजिम मिलापत्र भएकोमा मिलापत्र बमोजिम गरिदिएन गरी पाउँ भन्ने बाहेक मिलापत्रमा चित्त बुझेन भन्ने उजूर लाग्न सक्तैन ।

१८३ नं. ॥ ॥ मिलापत्र गर्न हुने मुद्दामा मिलापत्र गर्दा देहाय बमोजिम बक्सौनी लाग्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

शुरु तहको मुद्दामा भए वादी प्रतिवादीका साथैमा दाखिल भएको प्रमाण बाहेक अरु प्रमाण केही नबुझिएको भए देहायमा लेखिएको अङ्कको सयकडा एक, अरु प्रमाण समेत बुझेको भए सो अङ्कको सयकडा तीन र वादी प्रतिवादीमा लेखिएको गैह्र प्रमाण बुझिसकी छिन्न मात्र बाँकी भए सो अङ्कको सयकडा पाँच बक्सौनी लाग्छ - १

विगोको प्रमाण भएकोमा वादीले पक्रेको विगोको अङ्कको - - - - - - - - - - - - १

विगोको प्रमाण नभै वादीका उजूरी बमोजिम कैद हुनेमा सो हुन सक्ने कैदको महिना एकको पैंतालीस रुपैयाँका दरले हुने रुपैयाँको अङ्कको - - - - - - - - - - - २

कैद नभै जरिबाना मात्र हुनेमा सो जरिबानाको अङ्कको - - - - -- - - - - - - ३

पुनरावेदन तहको मुद्दामा भए ※दुईसय रुपैयाँ बक्सौनी लाग्छ । △तल्लो तहको फैसलाले लागेको कैद वापत महिना एकको पैंतालीस रुपैयाँका दरले हुने रुपैयाँ बुझाए लिई सो कैदको लगत काटी दिनु पर्छ - - - - - - - - - - - - - - - - - २

माथि १।२ दफा बमोजिम लाग्ने बक्सौनी असूल गर्दा दुवै थर झगडियाबाट आधा आधा असूल गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

१८४ नं. ॥ ॥ अड्डाखानामा गै रजिष्ट्रेशन वा दाखिल खारिज नामसारी वा दर्ता गराई दिने वा बुझाउनु पर्ने बुझाई दिने समेत इत्यादि काम गर्ने गराउने गरी अड्डामा मिलापत्र भएकोमा सो मिलापत्र भएको जनाउ मिलापत्र गराउने अड्डाले मिलापत्र भएका पाँच दिनभित्र मिलापत्र बमोजिमको काम गरिदिने अड्डालाई लेखी पठाइदिनु पर्छ । सो बमोजिम गराई माग्नालाई दण्ड सजायको महलको ४४ नम्बर बमोजिमका म्यादभित्र आएमा सो अड्डाले पनि मिलापत्र र कानून बमोजिम गर्नु पर्छ ।

◆१८४क.नं. ॥ ॥ प्रतिउत्तरपत्र परी झगडियाहरुको उपस्थितिको निमित्त तोकिएको तारिखमा दुवै पक्षको रोहवरमा फिरादपत्र र प्रतिउत्तरपत्र तथा दाखिल भएको सबै लिखत हेरी देखाई वादी प्रतिवादीसँग आवश्यक कुरा सोधपुछ समेत गरी त्यसबाट दुवै थरको कुरा मिले नमिलेको अड्डाले विचार गरी कुरा मिलेको देखिन आएमा तुरुन्त निर्णय सुनाउनु पर्छ । दुवै थरको कुरा आंशिक वा पूर्ण रुपमा नमिलेको देखिन आएमा जुन जुन कुरा नमिली इन्साफ गरी ठहराउनु पर्ने हो सो कुराहरु र त्यस सम्बन्धमा

---

※ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

△ सातौं संशोधनद्वारा थप ।

◆ तेस्रो संशोधनद्वारा थप ।

बुझ्नु पर्ने प्रमाणहरु स्पष्ट खोली पर्चा खडा गरी सबुत प्रमाण झिकाउन आदेश दिई सबुत प्रमाण बुझ्ने तारिख समेत तोक्नु पर्छ । प्रमाण बुझ्न तोकिएको तारिखमा अड्डाले यसै महलको ७८ नम्बर बमोजिम कारबाही गर्नु पर्छ ।

λ१८५ नं. ॥ ॥ यस महलको १८४क. नम्बर बमोजिम अड्डाले बुझ्नु पर्ने भनी ठहराएका प्रमाणहरु बुझिसकेपछि अड्डाले मुद्दाको छलफल गर्नालाई तारिख तोकी सो तोकिएको दिनमा हाजिर भएसम्मका झगडियालाई राखी झगडियाले कुनै लिखित बहस पेश गरे सो समेत लिई मिसिल सामेल राखी छलफल गरी ठहराई दुवै थरका हकमा जो दिने सजाय समेत सुनाई सो कायम भएको ठहर राय उसै दिन राय लेख्ने किताबमा लेखी निर्णय गर्ने अधिकार प्राप्त व्यक्तिले सहीछाप गर्नु पर्छ र उपस्थित रहेका झगडियाको समेत सहीछाप गराउनु पर्दछ । राय कायम भैसकेपछि मनासिब कारणले बाहेक फैसला लेख्न सात दिन भन्दा बढी ढिला गर्नु हुँदैन । फैसला लेख्दा अड्डाले मुद्दाको संक्षिप्त व्यहोरा, झगडियाहरुका कुरा नमिली इन्साफ गरी ठहराउनु पर्ने कुरा, त्यस सम्बन्धमा कुनै झगडिया वा कानून व्यवसायीले बहस गरेको भए सो बहसको मुख्य मुख्य बुँदाहरु र त्यस सम्बन्धमा अड्डाले निर्णय र त्यसको आधार तथा तत्सम्बन्धी कानूनहरु समेत प्रत्येक कुराहरु प्रकरण छुट्याई छुट्टा छुट्टै उल्लेख गर्नु पर्छ । माथि लेखिए बमोजिमको प्रमाण बुझी सकेपछि उसै दिन मुद्दा किनारा गर्न मुद्दाको जटिलताले गर्दा बढी अध्ययन वा मनन गर्न आवश्यक भएको वा एक भन्दा बढी व्यक्ति भएको निर्णयकर्ताको इजलासबाट मुद्दाको सुनुवाई भै परस्परमा छलफल गरी राय कायम गर्न बढी समय आवश्यक भएको कारणले नसकिने भएमा त्यस सम्बन्धमा कारण सहितको पर्चा खडा गरी मुद्दा किनारा गर्न अर्को तारिख तोक्नु पर्छ । कुनै कारणले मुद्दा किनारा गर्न अनिश्चित कालसम्म अर्को तारिख तोक्न नसकिने भएमा यसै महलको १५ नम्बर बमोजिमको कारबाही समेत गर्नु पर्छ र मुद्दामा प्रमाण बुझ्ने समेतको पूरा गर्नु पर्ने कार्यविधि पूरा भैसकेकोमा पक्षले तारिखमा बस्न नचाहेमा पछि अड्डाबाट सूचना पाएका बखत हाजिर हुने गरी झगडियालाई सूचना दिने ठेगाना समेत उल्लेख गरी कागज गराई तारिख छुटाई दिनु पर्छ ।

◆१८५क. नं. ॥ ॥ अड्डाले तोकेको कुनै एकथर झगडिया हाजिर हुन नआएमा सो गुज्रेको म्याद वा तारिख थाम्ने म्याद गुज्रेको पन्ध्र दिनभित्र अड्डाले देहाय बमोजिम मुद्दाको कारबाही र किनारा गर्नु पर्छ :- - - - - - - - - - - - - - - -

वादी हाजिर रहेको तर प्रतिवादी हाजिर नरहेको भए वादीको सबुत प्रमाण सबै बुझी मिसिल सामेल रहेको वादी प्रतिवादीको सबै सबुत प्रमाण हेरी त्यसको आधारमा मुद्दा फैसला गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - १

नेपाल सरकार वादी हुने मुद्दा बाहेक अरु मुद्दामा प्रतिवादी हाजिर भएको तर वादी हाजिर नभएकोमा प्रतिउत्तरपत्र र मिसिल सामेल रहेका अरु प्रमाणबाट प्रतिवादीले वादीको दावी पूरै वा आंशिक तवरले स्वीकार गरेको देखिन आएमा वा ठहरेमा सो हदसम्म इन्साफ गर्ने गरी र स्वीकार नगरेको वा नठहरेको हदसम्म डिसमिस गर्ने गरी मुद्दा फैसला गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - २

---

λ नवौं संशोधनद्वारा संशोधित ।

◆ तेस्रो संशोधनद्वारा थप ।

माथि दफा २ बमोजिम आंशिक वा पूरै डिसमिस भएको मुद्दामा पूरै डिसमिस भए सरह यसै महलको १७९ नम्बर बमोजिम हुन्छ । डिसमिस गराए वापत हुने सजायका हकमा भने डिसमिस भए जति दावीका हिसाबले मात्र सजाय हुन्छ - - - ३

◆१८५ख. नं. ॥ ॥ धेरै जना वादी वा धेरै जना प्रतिवादी भएको मुद्दामा सबै हाजिर नभै दुबैतर्फको एक एक जना वा एक जनाभन्दा बढी हाजिर भएकोमा मुद्दा छिन्नालाई अरु हाजिर नभएसम्म पर्खी रहनु पर्दैन । हाजिर नरहेकाको हकमा समेत हाजिर रहे सरह ऐन बमोजिम मुद्दा छिनिदिनु पर्छ ।

λ१८६ नं. ॥ ॥ ॥.............. ▯... ... सर्वस्वसहित जन्मकैद वा जन्मकैद हुने ठहराएको वा प्रचलित कानून बमोजिम साधक जाहेर गर्नु पर्ने मुद्दामा साधक जाहेर गरी अधिकार प्राप्त अड्डाबाट साधक सदर भए बमोजिम गरी र अरु गैह्र मुद्दामा अड्डैबाट कानून बमोजिम जो गर्नु पर्ने गरी फैसला गर्नु पर्छ ।

१८७ नं. ॥ ॥ ⊖ ... ... ...

१८८ नं. ॥ ॥ ऐनले ▯... ... सर्वस्व सहित जन्मकैद वा जन्मकैद गर्नु पर्ने भएका मुद्दामा सावित ठहरे पनि इन्साफ गर्ने हाकिमका चित्तले भवितव्य हो कि भन्न हुने सम्मको शङ्काले वा अपराध गरेको अवस्था विचार गर्दा कसूरदारलाई ऐन बमोजिमको सजाय दिंदा चर्को हुने भई घटी सजाय हुनु पर्ने चित्तले देखेमा ऐनले गर्नु पर्ने सजाय ठहराई आफ्ना चित्तले देखेको कारण सहितको खुलासा राय पनि साधक तोकमा लेखी जाहेर गर्नु हुन्छ । अन्तिम निर्णय दिनेले पनि त्यस्तो देखेमा ऐनले हुने सजायमा घटाई तोक्न हुन्छ ।

१८९ नं. ॥ ॥ फैसला गर्दा यसै नम्बरको नमूना बमोजिमको ढाँचामा लेखी फैसला गर्नु पर्छ ।

शुरु फैसलाको नमूना

फलाना अड्डाका हाकिम फलानाले

गरेको फैसला (वा जाहेरी फैसला)

२० ... सालको दायरी नं.

मुद्दा : फलाना

| | |
|---|---|
| वादीको नाउँ, थर, वतन - - - - - - - - - - | प्रतिवादीको नाउँ, थर, वतन - - - |
| वादीको साक्षी - - - - - - - - - - - - - - | प्रतिवादीको साक्षी - - - - - - - - |
| फलाना - - - - - - - - - - - - - - - - - | फलाना - - - - - - - - - - - - - |
| फलाना - - - - - - - - - - - - - - - - | फलाना - - - - - - - - - - - - - |
| कागज - - - - - - - - - - - - - - - - - | कागज - - - - - - - - - - - - - |
| फलाना - - - - - - - - - - - - - - - - - | फलाना - - - - - - - - - - - - - |
| फलाना - - - - - - - - - - - - - - - - - | फलाना - - - - - - - - - - - - - |

λ नवौं संशोधनद्वारा संशोधित ।

॥ केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

⊖ नवौं संशोधनद्वारा खारेज ।

<u>अड्डाबाट बुझेको</u>

साक्षी - - - - - - -

फलाना - - - - - - -

फलाना - - - - - - -

---

कागज - - - - - - -

फलाना - - - - - - -

फलाना - - - - - - -

---

(यस्तै रीतसँग जति साक्षी छन् उति जनाको नाउँ र कागज समेत लेख्नु पर्छ)

यस मुद्दाका सबै कागज बुझ्दा यसो भन्ने वादी यसो भन्ने प्रतिवादी वा यस्तो व्यहोराले यस्तो भएकोमा यस्तो यस्तो फलानो फलानो प्रमाण भएको हुनाले यो यो रीत प्रमाण र यो यो कानूनले यो ठहर्छ । यो कानूनले यसो गर्ने ठहराई फैसला गरिदिएँ । इति संवत् २० ...... साल ... ... गते रोज ... ... शुभम् - - - - - - - - - - -

<u>पुनरावेदन फैसलाको नमूना</u>

फलाना अड्डाका हाकिम फलानाले गरेको

पुनरावेदन फैसला (वा जाहेरी फैसला)

२० .... सालको दायरी नम्बर

| अपिलाट (वादी) (प्रतिवादी) को नाम, | रेस्पोण्डेण्ट (वादी) (प्रतिवादी) को नाम, |
|---|---|
| थर, वतन - - - - - - - - - - - | थर, वतन - - - - - - - |

<u>मुद्दा : फलाना</u>

यसमा यस्तो भन्ने वादी यस्तो भन्ने प्रतिवादी यो यस्तो प्रमाण भएकोमा शुरु ... ... ... अड्डाबाट यो यसो ठहराई ... ... मितिमा गरेको फैसला उपर फलानाको पुनरावेदन परेको हुँदा यो कानून यो यस्तो प्रमाणबाट यो मुद्दामा यस्तो हुने ठहर्छ । इति संवत् २० ...... साल ... ... ... गते रोज ... ... शुभम् - - - - - -

[◆◆]१९० नं. ॥ ॥ वारेण्ट जारी हुने मुद्दाका अभियुक्तमध्ये मुद्दा हेर्ने अड्डामा प्रतिवादी वा बयान दिइसकेको अभियुक्तको वा एकफेरा सो अड्डामा हाजिर भई मागेकोमा प्रतिवादी वा बयान नदिएको भएपनि त्यस्तो अभियुक्तको हकमा जो बुझ्नु पर्ने बुझी ठहरे माफिक फैसला गरिदिनु पर्छ । अड्डामा हाजिर नभएको अभियुक्तको हकमा भने भएसम्मको साक्षी प्रमाण सरजमीन बुझी राखी वारेण्ट जारी भएको [λ]<u>छ महिनासम्ममा</u> पनि हाजिर भएन वा पक्रिएन भने हाजिर भएका वा पक्रिएका बखतमा मुद्दा खडा गरी बुझी कानून बमोजिम गर्ने भनी मुलतवी राखी सो मुलतवी रहेका मुद्दाका अभियुक्त

---

◆◆ पाँचौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

फेला परेन वा हाजिर भएन भने पनि सो अभियुक्तको ❋अंश रोक्का भएको दुई वर्ष पुगेपछि मुद्दा खडा गरी बुझेसम्मको प्रमाणबाट ठहरे बमोजिम फैसला गरी दिनु पर्छ ।

१९१ नं. ॥ ॥ मुलतबी रहेको मुद्दामा जुन हाजिर नहुँदा मुलतबी रहन गएको हो सो बाहेकका अरु हाजिर भए पक्रिएका प्रतिवादी सावित वा इन्कार भएपनि गैर हाजिर भएका प्रतिवादी पक्राउ भई नआएसम्म पुर्पक्षलाई थुनामा र तारिखमा रहेकालाई त्यसै थुनामा र तारिखमा राखी छाड्नु हुँदैन । थुनामा रहेकालाई सावित ठहरेमा हुने सजायसम्म थुनिदा पनि गैर हाजिर भएका मानिस पक्री आएन अथवा पक्रिए हाजिर भएपनि मुद्दा फैसला गर्न अङ्ग पुगिसकेको नभएपनि उसले पाउने सजाय भुक्तान हुनासाथ तुरुन्त छाडी गैर हाजिर भएका मानिस पक्रिए हाजिर भैसकेका मुद्दा फैसला गर्न अङ्ग पुगी नसकेकोमा भए पुर्पक्षलाई राख्नु पर्ने देखिए तारिखमा र गैर हाजिर हुने चाहि पक्री वा हाजिर हुन नआएको भए थुनाबाट छुटेका र तारिखमा रही रहेकाको समेत अड्डाबाट जनाउ पाएका बखत हाजिर हुन आउँला भन्ने कागज लेखाई तारिख खिची फुर्सद दिनु पर्छ । गैर हाजिर भएको मानिस पक्री वा आफै आएपछि मुद्दा फैसला गर्ने कारबाही र पुर्पक्षलाई ती अघि थुनाबाट छुटेका वा तारिखबाट फूर्सद पाएका मानिस समेतलाई झिकाउनु पर्ने भयो भने चाहिएका बखत झिकाई बुझ्न र तारिखमा राख्न हुन्छ ।

१९२ नं. ॥ ॥ वारेण्ट जारी हुने वा चोरीको महलले मुलतबी रहने मुद्दाका अभियुक्त अड्डामा पक्री नआएको वा हाजिरै नभएकाको हकमा बाहेक गैह्र मुद्दा फैसला गर्दा एउटै मिसिलबाट गर्नु पर्ने काम मध्ये केही बाँकी राखी पछि बुझी छिन्ने भन्ने व्यहोरासँग फैसला गर्न हुँदैन ।

१९३ नं. ॥ ॥ अड्डाबाट मुद्दा फैसला गरेपछि हाजिर रहेको झगडियालाई सो फैसला बाँची सुनाई पुनरावेदन लाग्ने वा नलाग्ने व्यहोरा र पुनरावेदन लाग्ने भए पुनरावेदन सुन्ने अड्डाको नाम समेत बताई निजबाट सुनी पाएको व्यहोराको कागज गराई राख्नु पर्छ । झगडिया हाजिर नरहेकोमा सो फैसला भएको तीन दिनभित्र यो मुद्दामा यो कुरा ठहरेको हुनाले तिमीलाई यो यति सजाय भएको छ भन्ने र पुनरावेदन लाग्ने भए पुनरावेदन लाग्ने अड्डाको नाम समेत खुलाई सो झगडियाको नाममा म्याद जारी गर्नु पर्छ । पुनरावेदन लाग्ने मुद्दामा झगडिया रोहवरमा भै फैसला सुनेकोमा सो सुनेको मितिले र झगडिया रोहवरमा नभै म्याद जारी भएकोमा सो म्याद तामेल भएको मितिले पैंतीस दिनभित्र झगडियाले चित्त नबुझेको कुरामा सो फैसला उपर पुनरावेदन दिन पाउँछ, सो म्याद नाघेपछि पुनरावेदन लाग्न सक्तैन ।

🠉१९३क. नं. ॥ ॥ देवानी मुद्दामा कानून बमोजिम लाग्ने दस्तुर र कोर्ट फी बुझाएको निस्सा दाखिल नभै फैसला वा अन्तिम आदेश उपर पुनरावेदन वा उजूरी सरहको निवेदन लाग्ने छैन । दर्ता भएको रहेछ भने पनि खारिज हुन्छ । तर नेपाल कोर्ट फी ऐन, २०१७ बमोजिम पछि मुद्दा फैसला हुँदा ठहरे बमोजिम कोर्ट फी लिने गरी पुनरावेदन वा निवेदन दर्ता भएकोमा कोर्ट फी दाखिल नभएको कारणले मात्र सो अनुसार पुनरावेदन वा निवेदन खारिज हुने छैन - - - - - - - - - - - - - - - १

---

❋ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

🠉 दशौं संशोधनद्वारा थप ।

फौजदारी मुद्दामा प्रतिवादीलाई सजाय गर्ने गरी फैसला भएकोमा देहाय बमोजिम नभै सो फैसला उपर पुनरावेदन वा उजूरी सरहको निवेदन लाग्ने छैन- - - - - - - - २

फैसलाले कैदको सजाय पाउने व्यक्ति सो अनुसार कैदमा रहेको भनी सम्बन्धित कारागारले प्रमाणित गरिदिएको निस्सा दाखिल नभै सो फैसला उपर निजको पुनरावेदन वा उजूरी सरहको निवेदन लाग्ने छैन - - - - - - - - - - - - - - १

फैसलाले जरिबाना लागेको व्यक्तिले सो अनुसार जरिबाना बुझाएको वा सो बापत जेथा जमानत राखेको निस्सा पेश नगरेसम्म सो फैसला उपर निजको पुनरावेदन वा उजूरी सरहको निवेदन लाग्ने छैन - - - - - - - - - - - - - - - - - - - २

माथि दफा १ र २ मा जुनसुकै कुरा लेखिएको भए तापनि यसै महलको १९४ नम्बरमा लेखिएको कुरामा सोही बमोजिम हुन्छ - - - - - - - - - - - - - - - ३

[◆◆]१९४ नं. ॥ ॥ फैसला गर्ने अड्डाले फौजदारी मुद्दामा फैसला हुँदा कैदको सजाय पाउने कसूरदार ठहरिएकोलाई सो फैसला उपर पुनरावेदन गर्न बढीमा ३ वर्षसम्म कैदको सजाय भएकोमा र पुर्पक्षलाई थुनामा बस्नु नपर्ने मुद्दा भएमा वा नबसेको भएमा पुनरावेदन गर्ने म्यादसम्मलाई सो अड्डाले धरौट वा जमानीमा छाड्न सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

[λ]पुनरावेदन सुन्ने अड्डाले भए पुनरावेदन गर्ने म्यादसम्मलाई र पुनरावेदन दर्ता भएकोमा किनारा नभएसम्मलाई बढीमा १० वर्षसम्म कैदको सजाय भएकोमा र पुर्पक्षलाई थुनामा बस्नु नपर्ने मुद्दा भएमा वा नबसेको भएमा धरौट वा जमानीमा छाड्न सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

[λ]दफा १ र २ बमोजिम धरौट वा जमानीमा राख्दा शुरु अड्डामा पुर्पक्षको लागि धरौट वा जमानीमा रहेकोमा अड्डाको तजबीजले सो धरौट वा जमानीको बढीमा पच्चीस प्रतिशतसम्म थप धरौट वा जमानी लिनु पर्छ । अन्य अवस्थामा यसै महलको ११८ नम्बरको दफा १० मा लेखिएका कुराहरुको विचार गरी धरौट वा जमानीको अङ्क तोकी सो बमोजिमको धरौट वा जमानी लिनु पर्छ - - - - - - - - - - - - - - - - - - ३

तर पुनरावेदन परेपछि पुनरावेदन सुन्ने अड्डाले न्यायको रोहबाट पुनरावेदकलाई थुनामा राखी पुनरावेदन सुन्न पर्ने देखेमा सो बमोजिम गर्न कुनै बाधा हुने छैन ।

माथि दफा १ र २ मा जुनसुकै कुरा लेखिएको भए तापनि धरौट वा जमानीमा राख्दा वा राख्न इन्कार गर्दा सो कुराको आधार खुलाई पर्चा खडा गर्नु पर्छ र देहायको अवस्थामा धरौटी वा जमानीमा छाड्न इन्कार गर्न सक्नेछ- - - - - - - - - - - ४

धरौटी वा जमानीमा छाड्दा सजाय पाएको व्यक्ति भागी जाने सम्भावना भएकोमा - १

निजले सबुत प्रमाणमा हस्तक्षेप गर्ने सम्भावना भएकोमा - - - - - - - - - - - १

निजले अरु अपराध गर्ने सम्भावना भएकोमा - - - - - - - - - - - - - - - - - १

[◆◆] पाँचौं संशोधनद्वारा संशोधित ।

[λ] नवौं संशोधनद्वारा संशोधित ।

[λ] नवौं संशोधनद्वारा संशोधित ।

देहायको मुद्दामा एक वर्षभन्दा बढी कैदको सजाय पाएकोमा फैसला गर्ने अड्डाले र ३ वर्षभन्दा बढी कैदको सजाय पाएकोमा पुनरावेदन सुन्ने अड्डाले धरौटी वा जमानीमा छाड्न इन्कार गर्न सक्नेछ - - - - - - - - - - - - - - - - - - - - - - - - ५

भ्रष्टाचार निवारण ऐन, २०५९ अन्तर्गतको मुद्दा, कालो बजार, नाफा खोरी, जम्माखोरी वा मिसावट सम्बन्धी मुद्दा,

निकासी पैठारी सम्बन्धी मुद्दा,

आवश्यक सेवा, आवश्यक पदार्थ वा आवश्यक वस्तुसम्बन्धी मुद्दा,

मुद्रा, नोट, विदेशी विनिमय र नाप तौल सम्बन्धी मुद्दा,

प्राचीन स्मारक, पुरातात्विक महत्वको मूर्ति, चित्र, पुस्तक वा अन्य कलाकृति सम्बन्धी मुद्दा,

लागू औषध सम्बन्धी मुद्दा,

सरकारी विगो सम्बन्धी मुद्दा,

सरकारी कागजात, अदालतको फैसला वा आदेश, राहदानी, बीमा, चेक, ड्राफ्ट कीर्ते गरेको वा चोरी गरेको मुद्दा,

नेपाल सरकारको वा नेपाल सरकारको ५१ प्रतिशत स्वामित्व भएको संस्थानको वा बैङ्कको धनमाल चोरी गरेको, तहबील मसौट गरेको वा सम्पत्ति हिनामिना गरेको वा नेपाल सरकार, त्यस्तो संस्थान वा बैङ्कलाई ठगेको मुद्दा ।

[⬆]यस नम्बर बमोजिम अड्डाले धरौट वा जमानत लिंदा फैसला बमोजिम लाग्ने ठहरेको सरकारी वा सार्वजनिक संस्थाको विगो बापत समेत आवश्यकता र उपयुक्तताको विचार गरी धरौट वा जमानत माग्न सक्नेछ - - - - - - - - - - ६

१९५ नं. ॥ ॥ पुनरावेदन दिंदा जुन अड्डाले मुद्दा छिनेको छ उसको पुनरावेदन सुन्ने अड्डामा वा मुद्दा छिन्ने अड्डामा वा थुनिएको मानिसले आफू थुनिएको अड्डामा वा सरकारी कर्मचारीले आफू बहाल रहेको वा काज खटिएको इलाकाको नजिकमा त्यस किसिमको पुनरावेदन सुन्ने अड्डा भए सोही अड्डामा र त्यस्तो अड्डा नभए पुनरावेदन तहको मुद्दा सुन्ने अरु अड्डामा र सो पनि नभए मुद्दा हेर्ने अरु जुनसुकै अड्डामा पनि दिन हुन्छ र सो बमोजिम दिंदा लिंदा देहायका कुरामा देहाय बमोजिम हुन्छ - - - -- - - - - - - - - - - - - - - - - - - - - - - -

थुनिएका अड्डामा पुनरावेदनपत्र लेखी दिन ल्याएमा सो पुनरावेदनपत्रका लेखाइबाटै म्यादभित्र परे नपरेको र ढाँचा मिले नमिलेकोसम्म जाँची सो बमोजिमको रीत पुगेको देखिए पुनरावेदनपत्रमा झगडियाको सहीछाप गराई लिई लिफा जारी नभएसम्म पुनरावेदन दस्तुर आम्दानी बाँधी झगडियालाई भरपाई दिई आफूले बुझेको तीन दिनभित्र सो पुनरावेदन लेखोटसाथ पुनरावेदन सुन्ने अड्डामा बुझाई भरपाई लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

सरकारी कर्मचारीले माथि लेखिए बमोजिम नजिक अड्डामा पुनरावेदन दिन ल्याएमा कानूनको रीत पुऱ्याई पुनरावेदनपत्र बुझी लिई पुनरावेदनको दस्तुर आम्दानी बाँधिएको रसिद र पुनरावेदनपत्र बुझी लिएको भरपाई पुनरावेदन दिनेलाई

---

[⬆] दशौं संशोधनद्वारा थप ।

दिई सो मुद्दामा भएको दण्ड सजाय बुझाएको रसिदको नक्कल पुनरावेदनपत्रसाथ नत्थी गरी दस्तुर आम्दानी बाँधिएको मिति पुनरावेदनपत्रको पीठमा जनाई तीन दिनभित्र सो पुनरावेदनपत्र लेखोटसाथ पुनरावेदन सुन्ने अड्डामा पठाई दिनु पर्छ - २

मुद्दा छिन्ने अड्डामा पुनरावेदन दिन ल्याएमा कानून बमोजिम जति रीत पुऱ्याई लिनु पर्छ उति रीत पुऱ्याई पुनरावेदनपत्र बुझी लिई सो मुद्दामा पुनरावेदन दिने झगडियालाई लागेको दण्ड सजाय असूल भई आम्दानी बाँधिएको भए त्यसको रसिदको नक्कल पुनरावेदनपत्र साथै नत्थी गरी र सो दण्ड सजायमा यसै महलको १९४ नम्बर बमोजिम धरौटी वा जमानी दिएको वा कैद परेको भए सो कुरा पुनरावेदन पठाउने चलानी पूर्जीमा लेखी ऐनले पुनरावेदन दिने झगडिया तारिखमा रहने भए पुनरावेदन मिसिल पुग्दा झगडिया समेत पुग्ने अन्जाम गरी अपिलाटलाई तारिख तोकी भरपाई लिई सो मुद्दाको मिसिल सात दिनभित्र आफ्नो पुनरावेदन सुन्ने अड्डामा पठाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - ३

पुनरावेदन सुन्ने अड्डामा झगडियाले दिन ल्याएको पुनरावेदन र अरु अड्डा मार्फत आएको पुनरावेदन समेत दाखिल हुनासाथ ऐन बमोजिम रीत पुगे नपुगेको जाँची रीत पुगेको रहेछ भने सो दाखिल भएका तीन दिनभित्र मिसिल पठाउनु भनी र थुन्ने अड्डाबाट पठाएको पुनरावेदनको हकमा अपिलाटसँग दण्ड सजाय असूल भैसकेको वा कैद म्याद ठेकिई सकेको छ छैन भए सोही माफिकको जनाउ र सो बमोजिम भैसकेको नभए असूल उपर गर्न वा कैद म्याद ठेक्नु जो गर्नु पर्ने गरी तामेली जनाउ तुरुन्त पठाउनु भनी मुद्दा छिन्ने अड्डालाई पूर्जी गरी मिसिल र जनाउ समेत झिकाई सो जनाउ मिसिल आएपछि कानून बमोजिम गर्नु पर्छ - - - ४

पुनरावेदन मिसिल पठाउने अड्डाले पुनरावेदन दिने झगडिया थुनामा रहेको भए सो झगडियालाई मिसिल साथ पहिले नै पुनरावेदन सुन्ने अड्डामा पठाउनु पर्दैन । पुनरावेदन सुन्ने अड्डाले झिकाउन परे झिकाउन हुन्छ । झिकाएमा कानूनको रीत पुऱ्याई पठाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - ५

थुनामा बसी पुनरावेदन दिने मानिस पुनरावेदन फैसला नहुँदै अघिबाटै छुट्यो भने छुटेका मितिले बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र मुद्दा परेका अड्डामा हाजिर हुनु पर्छ वा वारिस राख्न पाउने मुद्दामा भए ऐन बमोजिम वारिस गरी पठाए पनि हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ६

पुनरावेदन बुझिलिंदा सो मुद्दामा अघिल्लो अड्डाबाट गरेको दण्ड सजाय असूल भएको वा सो दण्ड सजायमा कैद परेको वा यसै महलको १९४ नम्बर बमोजिम धरौट वा जमानत लिएकोमा त्यसको निस्सा दाखिल गरेमा वा सो नम्बर बमोजिम धरौट वा जमानत लिन हुनेमा सो बमोजिम धरौट वा जमानत दिएमा वा लागेको दण्ड सजाय पुनरावेदनपत्रका साथै बुझाएमा मात्र पुनरावेदन लाग्न सक्तछ - - - ७

१९६ नं. ॥ ॥ [α]पुनरावेदनपत्र लिंदा [⌘]एकसय रुपैयाँको दस्तुर सहित यस नम्बरका नमूना बमोजिमको फाराममा लेखी ल्याएको मात्र लिनु पर्छ ।

फलाना अड्डामा चढाएको

पुनरावेदनपत्र

---

α छैठौं संशोधनद्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

संवत् २० ... सालको देवानी । फौजदारी $\frac{\text{पहिला}}{\text{दोस्रा}}$ पुनरावेदन नं.

फलाना फलाना हरेकको पूरा नाउँ, थर, वतन $\frac{\text{वादी}}{\text{प्रतिवादी:}}$ अपिलाट

विरुद्ध

फलाना फलाना हरेकको पूरा नाउँ, थर, वतन $\frac{\text{वादी}}{\text{प्रतिवादी:}}$ रेस्पोण्डेण्ट

फलाना अड्डाका फलाना हाकिमले संवत् २० ... ... को शुरु पुनरावेदन । ठाडो । साधक नं. ... ... ... को मुद्दामा फलाना मितिमा म वा हामीहरुलाई यस्तो गर्ने गरी फैसला गर्नु भएकोमा चित्त नबुझेको हुनाले मुद्दाको मोल विगो यति वा सजाय यति भएको हुनाले सो दण्ड सजाय बुझाएको वा धरौट वा जमानत दिएको निस्सा सामेल राखी वा थुनामा रही पुनरावेदन गरेकोछु वा गरेका छौं । यसमा म वा हामी अपिलाटको निम्न लिखित पुनरावेदन जिकिर छ ।

१. ... ... ...

२. ... ... ...

अपिलाट

फलाना ठाउँ बस्ने फलाना

(एक भन्दा बढी अपिलाट भएमा १, २, ३ नम्बर दिई सबैको पूरा नाउँ, थर, वतन, उमेर लेखी त्यसमा लेखपढ गर्न जान्नेले हस्ताक्षरको सही र अरुले ल्याप्चे सही गर्नु पर्छ) इति संवत् २० ... साल ... गते रोज ... ... शुभम् - - - - - - - - - -

१९७ नं. ॥ ॥ यसै महलको १९३ नम्बर बमोजिम पुनरावेदनको म्याद दिनु पर्नेमा अड्डाबाट त्यस्तो म्याद जारी नै गरिएको रहेनछ भने झगडियाले आफूलाई लागेको दण्ड सजाय तिरेको वा फैसलाको नक्कल लिएकोमा सो मध्ये जुन काम अघिल्ला मितिमा भए गरेको छ सोही मितिले पुनरावेदन दिने म्याद कायम गर्नु पर्छ ।

१९८ नं. ॥ ॥ ⌦ ... ... ...

➨१९९ नं. ॥ ॥ यसै महलको १९४ नम्बर बमोजिम दण्ड सजाय बुझाई वा धरौट वा जमानत दिई पुनरावेदन गर्न पाउनेमा सो बमोजिम नगरी थुनामा बसी पुनरावेदन दिएको रहेछ भने त्यस्तो व्यक्तिलाई निजले सो बमोजिम दण्ड सजाय बुझाए वा धरौट वा जमानत दिए, मुद्दा जुनसुकै अवस्थामा भएपनि थुनाबाट छाडी कानून बमोजिम गर्न हुन्छ ।

२०० नं. ॥ ॥ धरौट वा जमानत दिन नसकी थुनामा रही पुनरावेदन दिने अपिलाटलाई पुनरावेदन सुन्ने अड्डाले कारबाहीको सिलसिलामा न्यायको दृष्टिले थुनामा राख्न उचित नदेखेमा धरौट वा जमानत नलिई तारिखमा राखी कारबाही गर्न सक्नेछ ।

---

⌦ दशौं संशोधनद्वारा खारेज ।

➨ पाँचौं संशोधनद्वारा संशोधित ।

⌘२०१ नं. ॥ ॥ पुनरावेदनको तहमा पुनरावेदक र यसै महलको २०२ नम्बर बमोजिम झिकाईएको प्रत्यर्थी तारिखमा नबसे पनि हुन्छ । तारिखमा बसेको पुनरावेदकले तारिख गुजारे पनि मुद्दा डिसमिस गर्नु हुँदैन र प्रत्यर्थीले तारिख गुजारेको कारणले मात्र निजको प्रतिवाद जिकिरहरुमा विचार नगरी मुद्दा फैसला गर्न पनि हुँदैन । मिसिल संलग्न लिखत र प्रमाणहरु समेत सबै कुरा उपर विचार गरी कानून बमोजिम पुनरावेदन फैसला गर्नु पर्छ ----------------------१

तोकिएको तारिखमा पुनरावेदक वा प्रत्यर्थी अदालतमा उपस्थित नभएपनि अदालतले सो तारिखमा तोकिएको काम गर्न हुन्छ । पुनरावेदक वा प्रत्यर्थी उपस्थित नभएको कारणले मात्र तोकिएको तारिखमा तोकिएको काम नगरी रहन हुँदैन ----------२

तोकिएको तारिखमा पुनरावेदक वा प्रत्यर्थी अदालतमा उपस्थित नभएपनि माथि दफा २ बमोजिम सम्पन्न भैसकेका काम कारबाही बाहेक मुद्दाको बाँकी काम कारबाहीमा तोकिएको तारिखमा उपस्थित भै सामेल हुन पाउँछ ---------------३

आफ्नो काबू बाहिरको कुनै कारणले गर्दा तोकिएको म्याद वा तारिखमा उपस्थित हुन नसकेकोले सो म्याद वा तारिखमा सम्पन्न नभै बाँकी रहेको कुनै काम कारबाही गरी पाउँ भनी सो म्याद वा तारिखको मितिले पन्ध्र दिनभित्र पुनरावेदक वा प्रत्यर्थीले निवेदन दिएमा कारण मनासिब वा विश्वसनीय देखिए सोही व्यहोरा खोली पर्चा खडा गरी अदालतले सो काम कारबाही गर्न हुन्छ ------------------४

⌘२०२ नं. ॥ ॥ पुनरावेदन, साधक वा अरु कुनै किसिमबाट अगाडिको फैसला सदर बदर गर्न अधिकार प्राप्त अड्डाले इन्साफ जाँच्दा तलको अड्डाले गरेको इन्साफमा तात्विक फरक हुने अवस्था नदेखिएमा झगडिया झिकाई रहनु पर्दैन । ठहरे बमोजिम फैसला गरिदिनु पर्छ । इन्साफ जाँच्दा अगाडिको इन्साफ वा फैसला फरक पर्ने देखियो भने सो व्यहोराको पर्चा खडा गरी सो खडा गरेको तीन दिनभित्र फलानासँगका फलाना मुद्दामा तपाई समेत राखी छलफल गर्नु पर्ने भएकोले बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र हाजिर हुन आउनु सो म्याद भित्र हाजिर नभएमा पछि उजूरी लाग्ने छैन भनी झगडियाको नाउँमा म्याद जारी गरी सो म्यादमा झगडिया हाजिर हुन आए वा ऐन बमोजिम वारिस पठाएमा निजलाई समेत राखी पैंतीस दिनभित्र फैसला गर्नु पर्छ । सो म्यादमा हाजिर नहुने झगडियाको पछि उजूर लाग्न सक्दैन । पुनरावेदन लाग्नेमा पुनरावेदनको म्याद दिनु पर्छ ।

२०३ नं. ॥ ॥ ⌦ ... ... ...

२०४ नं. ॥ ॥ ⌦ ... ... ...

२०५ नं. ॥ ॥ एकै मुद्दामा हार्ने झगडियामध्ये कसैको पुनरावेदन उजूर परेकोबाट जाँचिदा इन्साफ वा सजाय उल्टिने भई सो इन्साफ सजाय उल्टाई फैसला गर्दा पुनरावेदन उजूर नदिने झगडियाका हकमा समेत इन्साफ सजाय उल्टिन जाने भयो भने त्यस्तोमा पुनरावेदन उजूर परेको छैन भनी सदर गरी दिन हुँदैन । पुनरावेदन उजूर नदिनेका हकमा समेत पुनरावेदन उजूर दिने सरह उल्टाई छिनिदिनु पर्छ ।

---

⌘ दशौं संशोधनद्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

⌦ दशौं संशोधनद्वारा खारेज ।

२०६ नं. ॥      ॥ पुनरावेदन दिनालाई कैद वापतको रुपैयाँ धरौट राखी छुटेका झगडिया पुनरावेदनमा जित्ने ठहऱ्यो भने तारिखमा हाजिर रहेको वा नरही गुजारेको समेत जे भएपनि धरौट रहेको रुपैयाँ फिर्ता दिनु पर्छ । हार्ने ठहऱ्यो भने कैद हुनेमा फैसला हुँदा हाजिर रहेको भए रुपैयाँ फिर्ता गरी कैद गर्नु पर्छ । तारिख गुजारी गैर हाजिर रहेको भए पुनरावेदन फैसला भएका मितिले पाँच वर्षभित्र आफै हाजिर हुन आयो वा फेला परी पक्राउ भई आयो भने धरौट रहेको रुपैयाँको सयकडा दुई जरिबाना गरी बाँकी फिर्ता दिई उसलाई फैसला बमोजिम कैद गर्नु पर्छ । सो म्यादभित्र हाजिर हुन वा पक्राउ भई नआए धरौट रहेको रुपैयाँ जफत गरी झगडियाका हकमा कानून बमोजिम गर्नु पर्छ ।

२०७ नं. ॥      ॥ मुद्दामा अड्डाबाट भए गरेको फैसलाको उल्टी पटकेको रेकर्ड नेपाल सरकारले तोकेको ढाँचामा पुनरावेदन फैसला गर्ने अड्डाले राख्नु पर्छ ।

२०८ नं. ॥      ॥ अड्डाबाट जारी भएको समाव्हान इतलायनामाको म्याद तारिखमा प्रतिवादी नदिई म्याद गुजारी बसेका झगडियाको ऐन बमोजिम एकतर्फी प्रमाण बुझी भएका फैसला उपर पुनरावेदन लाग्न सक्तैन । समाव्हान इतलायनामा तामेल गर्दा यसै महलको ११० नम्बर बमोजिम रीत नपुऱ्याई तामेल गरेकोले थाहा पाउन नसकी प्रतिवादी दिन नपाई म्याद गुज्रेको भन्ने उजूरीसाथ फैसला भएको छ महिनाभित्रमा थाहा पाएको पैंतीस दिनभित्र झगडियाले प्रतिवादी लेखी दिन ल्यायो भने पहिले मिसिल सामेल रहेको तामेली समाव्हान हेरी रीतपूर्वक तामेल भएको देखिन आएन भने सोही व्यहोराको पर्चा लेखी प्रतिवादी दर्ता गरी ऐन बमोजिम बुझ्नु पर्ने प्रमाण बुझी मुद्दा फैसला गर्नु पर्छ । रीत पुगी तामेल भएको देखिएमा सोही व्यहोरा खोली उजूर लाग्न सक्तैन भनी दरपीठ गरी फिर्ता दिनु पर्छ ।

२०९ नं. ॥      ॥ पुनरावेदन परी वा केही व्यहोराले इन्साफ जाँचिने अड्डामा आएका मुद्दामा प्रमाणलाई दाखिल भएका लिखत कागजहरु सद्दे कीर्ते छुट्याई इन्साफ गर्नु पर्ने अवस्था देखिएकोमा सो कारबाही तल्ला अड्डाले नगरी छिनेको रहेछ भने पुनरावेदन सुन्ने अड्डाबाटै सो कागज सक्कलै झिकाई अड्डामा दाखिल भएपछि मिसिल सामेल राखी उजूरवालाको बयान गराई प्रतिवादीहरु अन्त टाढा जिल्लामा बसेको भए निजहरु मध्ये मुख्य कारणी र लेखक साक्षी र अरु सक्कल कागजै हेरी देखाई बयान गर्नु पर्ने जतिलाई ऐन बमोजिम गरी अड्डैमा झिकाई बयान लिई र ती बाहेकका अरु प्रतिवादीसँग बन्दसवालद्वारा निजहरु बसेका इलाकाको अड्डामा पठाई तामेल गरी ऐन बमोजिम जो बुझ्नु पर्ने प्रमाण बुझी फैसला गर्नु पर्छ । बन्दसवालद्वारा बुझिएका प्रतिवादीलाई तारिखमा राख्न पर्दैन । त्यस्ताले मुद्दा परेको अड्डामा तारिखमा बस्छु भने पनि बस्न पाउँछ ।

२१० नं. ॥      ॥ पुनरावेदन परेको वा दोहरिएको मुद्दामा अघिको इन्साफ सदर ठहरिई फैसला भएकोमा सो फैसला गर्ने अड्डाले अघि जित्ने झगडिया तारिखमा नरहेको भए विगो भराउने, चलन चलाउने, अंश बण्डा छुट्याउने, दाखिल दर्ता गराउने र लिखत पास गराउने समेत ऐनका म्यादभित्र फैसला बमोजिम गराई माग्नु पर्ने कलमहरुमा सो अघि जितेको झगडियालाई आफ्ना अड्डाबाट फैसला भएका मितिले तीन दिनभित्र इन्साफ सदर भएको जनाउ पठाई यसै महलको ११० नम्बर बमोजिम तामेल गराउनु पर्छ । सो जनाउ पाएका मितिले फैसला बमोजिम गराई माग्ने म्याद शुरु हुन्छ ।

[α]२११ नं. ॥ ॥ मुद्दा हेर्ने अड्डामा रहेको मिसिल कागजपत्रको नक्कल सरोकारवाला जोसुकैले मागे पनि दिनु पर्छ । सो बमोजिम नक्कल दिंदा लिंदा नक्कल लिनेले आफ्नै तर्फबाट सारी लिनेमा निजलाई सम्बन्धित कर्मचारीको रोहवरमा राखी फुलस्केप साईजको प्रत्येक पानाको [⌘]दुई रुपैयाँको दरले दस्तुर लिई नक्कल सार्न दिनु पर्छ । अड्डाबाट नक्कल सारी पाउँ भनेकोमा फुलस्केप साइजको प्रत्येक पानाको [⌘]तीन रुपैयाँको दरले दस्तुर लिई नक्कल सारी दिनु पर्छ । नक्कल लिंदा दिंदा सो नक्कलको शिरमा फलानाले लिएको भन्ने र सक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने लेखी अड्डाको र हाकिमको छाप लगाई दस्तुर दाखिल गरेको मितिले फिरादपत्रको नक्कल भोलिपल्टसम्ममा र अरु कागजको नक्कल तीन दिनभित्रमा दिनु पर्छ ।

२१२ नं. ॥ ॥ सरकारी कर्मचारी वा थुनामा रहेको मानिसको मुद्दाको मिसिलको हुलाकद्वारा नक्कल पाउँ भनी सो कर्मचारी वा थुनिएको मानिसले कानून बमोजिमको दस्तुर समेत दाखिल गरी आफू बहाल रहेको वा तारिखमा रहेको वा थुनिएको अड्डामा दरखास्त दिएमा सो अड्डाले बुझिलिई सो बमोजिम नक्कल पठाउन मिसिल रहेको अड्डालाई लेखी पठाउनु पर्छ र सो बमोजिम लेखी आएमा सो मिसिल रहेको अड्डाले पनि नक्कल सार्न लगाई दरखास्त परेको अड्डामा पठाई दिनु पर्छ ।

२१३ नं. ॥ ॥ अड्डाले मुद्दामा साधक जाहेर गर्दा सो मुद्दाको सक्कल मिसिल समेत राखी सो मुद्दाको मानिस थुनामा रहेको भए थुनामा रहेको मिति र ठाउँ थुनाबाट भागेको भए भागेको मिति समेत खुलाई जाहेर गर्नु पर्छ ।

२१४ नं. ॥ ॥ साधक जाहेर गर्नु पर्ने मुद्दामा साधक जाहेर गर्दा [⌇]........ कसूरदार ठहरेकालाई ऐन बमोजिम गरी राख्नु पर्छ ।

२१५ नं. ॥ ॥ मुद्दाको साधक जाहेर गरेकोमा पुनरावेदन परेको रहेछ भने साधकको लगत काटी सो मुद्दा पुनरावेदनको तहबाट हेर्नु पर्छ । सो बमोजिम पुनरावेदन हेर्दा वा पुनरावेदन नपरेकोमा साधक जाँच्दा साधक जाहेर गर्ने अड्डाले बुझ्नु पर्ने प्रमाण नबुझी काम बाँकी राखी जाहेर गरेको रहेछ र प्रमाण वा झगडिया नबुझी फैसला गर्न वा निकासा दिन नहुने देखियो भने सो बुझ्नु पर्ने झगडिया हाजिर रहेकोमा निज समेत अरु जो बुझ्नु पर्ने प्रमाण बुझी म्यादभित्र फैसला गर्नु वा निकासा दिनु पर्छ । साधक जाँच्दा बुझ्नु पर्ने काम बाँकी बाहेक अरु रीत नपुगेकोमा भने यति रीत पुऱ्याई पठाउनु भनी म्याद तोकी सात दिनभित्र फिर्ता पठाईदिनु पर्छ ।

२१६ नं. ॥ ॥ मुद्दाको साधक जाहेर गरेकोमा आफ्नै अड्डाको स्रेस्ता र आफ्नो अड्डाको इलाकाको अड्डा बुझी पुग्नेमा पन्ध्र दिनभित्र र अरु इलाकाको अड्डा बुझ्नु पर्नेमा ताकितासाथ म्याद तोकी जो बुझ्नु पर्ने बुझी अड्डामा दाखिल भएको पन्ध्र दिनभित्र किनारा गर्नु पर्छ ।

२१७ नं. ॥ ॥ साधक सदर गर्नु गराउनु पर्ने मुद्दामा सो साधक जाँच्ने निकासा दिनेले सो साधक सदर गरे बमोजिम थुनिएकालाई छाड्नु पर्ने वा सजाय गर्नु पर्ने भएकोमा सो बमोजिम गर्नु भनी जुन अड्डाको खोर झेलखानामा थुनुवा रहेकोछ

---

α छैठौं संशोधनद्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

⌇ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा झिकिएको ।

सो र साधक जाहेर गर्ने अड्डामा तीन दिनभित्रै जनाउ पठाई त्यसको मिसिल पन्ध्र दिनभित्र साधक जाहेर गर्ने अड्डामा पठाई दिनु पर्छ ।

२१८ नं. ॥ ॥ मुद्दामा अरु अड्डा बुझ्नु पर्दा वा अरु अड्डाबाट कागज वा मानिस खोजी झिकाउनु पर्दा वा साक्षी सरजमीन झगडियाको बन्द सवाल बकपत्र बयान गराउनु पर्दा सो अड्डालाई यो व्यहोरासँग यति दिनभित्र फलाना काम गरी पठाउनु भन्ने बाटाको म्याद बाहेक मुनासिब माफिकको म्याद दिई लेखी पठाउनु पर्छ ।

२१९ नं. ॥ ॥ सरकारी काममा आफ्ना अड्डाबाट गर्नु पर्ने मुनासिब माफिकको लेखोट पूर्जी आएमा तोकिएका म्यादभित्र लेखी आए बमोजिमको काम तुरुन्त तामेल गरी पठाउनु पर्छ । तामेल भएन वा गर्न सकिएन भने कारण खोली सो लेखी पठाउने अड्डालाई म्यादैभित्र जवाफ दिनु पर्छ ।

△२१९क. नं. ॥ ॥ अड्डाले मुद्दाहरुमा प्रमाणका निमित्त चाहिने मिसिल कागजात मागी पठाएको वा कुनै कुरा सोधी पठाएकोमा तरतागिता गर्दा पनि मिसिल कागजात वा जवाफ नपठाएकोले मुद्दाको कारबाही किनारा गर्न बाधा परेकोमा वा कुनै पक्षलाई मर्का परेकोमा त्यस्तो मिसिल कागजात वा जवाफ नपठाउने अड्डाका प्रमुख वा सम्बन्धित कर्मचारीलाई पटकै पिच्छे पचास रुपैयाँसम्म जरिबाना गर्न सक्नेछ । त्यस्तो जरिबाना निजको तलब खुवाउने कार्यालयले तलबबाट कट्टा गरी सम्बन्धित अड्डामा दाखिल गर्नु पर्छ । तर त्यसरी जरिबानाको आदेश भएपछि सम्बन्धित अड्डा प्रमुख वा कर्मचारीले त्यस्तो मिसिल कागजात वा जवाफ समयमा पठाउन नसकेको मुनासिब कारण उल्लेख गरी सो जरिबाना लाग्नु नपर्ने कुराको निवेदन दिएमा र सो कारण सम्बन्धित अड्डालाई सन्तोषजनक लागेमा सो अड्डाले उक्त जरिबानाको आदेश रद्द गर्न वा लागेको जरिबाना घटाउन सक्नेछ ।

✄२२० नं. ॥ ॥ नेपाल सरकार वादी भई हेर्नु पर्ने कुराको र सरकारी कर्मचारीले वा सरकारी कामको अख्तियार पाएको कुनै व्यक्तिले दुःख पीर दिएको र सरकारी कर्मचारीले अड्डा सम्बन्धी जाहेर गरेको कुराको निवेदनपत्रमा लिफा दस्तुर नभएपनि कानून बमोजिम कारबाही गर्नु पर्छ । सो बाहेक अरु कुरामा आफ्नो अड्डाको काम कारबाही सम्बन्धी कुनै कानून भए सो बमोजिमको र नभए ⌘पाँच रुपैयाँ लिफा दस्तुर लाग्छ ।

२२१ नं. ॥ ॥ ऐनमा टिकटवाला लिफा फाराम लेखी लिनु दिनु जारी गर्नु भन्ने लेखिएकोमा सो टिकटवाला लिफा फाराम नभए सो ऐनमा जति रुपैयाँ पैसाको टिकटवाला लिफा फाराममा लेखी लिनु दिनु जारी गर्नु भनी लेखिएकोछ त्यति नगदी रुपैयाँ पैसा नै दस्तुर लिई खाली सादा कागजमा लेखी लेख्न लगाई लिनु दिनु जारी गर्नु पर्छ ।

२२२ नं. ॥ ॥ आफ्ना अड्डामा परेका निवेदनपत्रमा मनासिब माफिकको कारणले बाहेक सात दिनभित्र तोक आदेश दिइसक्नु पर्छ ।

२२३ नं. ॥ ॥ अड्डाले मुद्दामा प्रमाण निमित्त झिकाएको फैसला भइसकी पुनरावेदनको हद समेत नाघेका मिसिल र आफ्नै अड्डाबाट फैसला गरेको मिसिल

---

△ सातौं संशोधनद्वारा थप ।

✄ सातौं संशोधनद्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

समेत अरु अड्डामा बुझाउनु पर्नेमा मिलापत्र भएको मुद्दा भए मिलापत्र भएका सात दिनभित्र र फैसला भएको मुद्दा भए पुनरावेदन उजूरको म्याद नाघेका सात दिनभित्र जुन अड्डामा बुझाउनु पर्ने हो उसै अड्डामा बुझाई दिनु पर्छ ।

२२४ नं. ॥ ॥ सरकारी कर्मचारीले यसै महलको ३० नम्बरमा लेखिएका मानिसको बाहेक अरुको आफू बहाल रहेका अड्डामा दर्ता कारबाही हुने वा पुनरावेदन पर्न आउने मुद्दा सम्बन्धी फिरादपत्र, प्रतिउत्तरपत्र, पुनरावेदनपत्र, निवेदनपत्र इत्यादि कागजपत्रहरु लेख्न लेखाउन हुँदैन ।

❒२२५ नं. ॥ ॥ कुनै सरकारी कर्मचारीले आफ्नो पदको नाताले वा आफ्नो अड्डाको कुनै काम गर्दा आफूले गर्न नहुने कुनै काम गरेमा वा गर्नु पर्ने कुनै काम नगरेमा वा त्यस्तो काम काज गर्दा अनावश्यक ढिलासुस्ती गरेमा वा बदनियत देखिएमा त्यस्ता कर्मचारीलाई अख्तियारवालाबाट तत्कालै विभागीय कारबाही र सजाय गर्नु पर्छ । अड्डा जाँच्ने कुनै पदाधिकारीले आफूले अड्डा जाँच गर्ने सिलसिलामा त्यस्तो भए गरेको देखेमा विभागीय कारबाहीका लागि तुरुन्त अख्तियारवालालाई लेखी पठाउनु पर्छ ।

🕮२२६ नं. ॥ ॥ यस महल बमोजिम गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधिको रोहवरमा वा त्यस्तो सदस्य वा प्रतिनिधिको सहीछाप गराई गर्नु गराउनु पर्ने कुनै काम कारबाही गर्ने गराउने सिलसिलामा त्यस्तो सदस्य वा प्रतिनिधिलाई उपस्थित गराईदिन सम्बन्धित गाउँपालिका वा नगरपालिकामा लिखित सूचना दिंदा पनि सो काम कारबाहीको लागि त्यस्तो सदस्य वा प्रतिनिधि उपस्थित नभएमा वा गाउँपालिका वा नगरपालिका भङ्ग भई वा अन्य कुनै कारणले कायम नरहेको अवस्थामा पनि सो काम कारबाही गर्न गराउन सकिनेछ र अरु कुराको रीत पुगेको भए त्यस्तो सदस्य वा प्रतिनिधिको उपस्थिति वा सहीछाप नभएको भन्ने आधारमा मात्र सो काम कारबाही बदर हुने छैन ।

---

❒ तेस्रो संशोधनद्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

# महल २

## दण्ड सजायको

▣१ नं. ॥ ॥ कानून बमोजिम अपराध ठहरिने कुनै काम गर्ने व्यक्ति सो काम गर्दा ′... ... ... आफूले गरेको कामको प्रकृति र परिणाम थाहा नपाउने गरी मगज बिग्रेको वा बौलाएको रहेछ भने निजलाई खत बात लाग्न वा कुनै प्रकारको सजाय हुन सक्तैन । ′... ... ... मगज बिग्रेको वा बौलाएका व्यक्तिलाई सिकाई कसैले कुनै अपराध गर्न लगाएको रहेछ भने सो सिकाउनेलाई निजले आफै अपराध गरे सरह कानून बमोजिम पूरा सजाय हुन्छ ।

२ नं. ॥ ॥ कसैले गरेका काममा उसको सेखपछि अरुका नाउँमा नालेस परी मर्नेको कसूर ठहरे पनि सजाय हुँदैन विगोको हकमा ऐन बमोजिम गर्नु पर्छ ।

३ नं. ॥ ॥ जरिबाना, कैद वा बिशौंद लागेको मानिस सो असूल नहुँदै मऱ्यो भने ऊ मरेपछि माफ हुन्छ । उसको अपुताली खाने वा जमानी हुनेलाई पक्राउ गर्न हुँदैन । विगो भराउने वा लिनु पर्ने कुरा रहेछ भने अपुताली खानेले तिर्नु पर्छ । जायजात गरी लिएपछि नपुगेको बाँकीमा अपुताली खानेलाई पक्रन हुँदैन ।

४ नं. ॥ ॥ सर्वस्व हुने ठहरी फैसला भै सर्वस्व रोक्का भएको मानिस मऱ्यो भने कसूरमा रिहाई नपाए त्यसको सर्वस्व फुकुवा हुन सक्तैन । ऐन बमोजिम गर्नु पर्छ ।

५ नं. ॥ ॥ ↜... ... ...

६ नं. ॥ ॥ यति खण्ड सजाय गर्नु भन्ने लेखिएकोमा ▯ ... ... जन्म कैदको बीस वर्ष र सर्वस्वको अठार महिना कैद कायम गरी त्यसको खण्ड सजाय गर्नु पर्छ ।

७ नं. ॥ ॥ ऐनमा सर्वस्व सहित जन्म कैद गर्नु भन्ने लेखिएकोमा जन्म कैद गरी ऐन बमोजिम सर्वस्व गर्नु पर्छ । सर्वस्व गर्नु भन्ने लेखिएकोमा ऐन बमोजिम सर्वस्व गर्नु पर्छ ।

✂८ नं. ॥ ॥ एकै जनाले धेरै पटक ▯... ... सर्वस्व सहित जन्मकैद वा जन्मकैद वा अरु सजाय हुने खत गरेको भएपनि कुनै खतमा ▯... ... सर्वस्व सहित जन्मकैद र जन्मकैद मध्ये ठूलो सजाय भएपछि सानो सजाय हुने खत वा सो सजायहरु मध्ये कुनै सजाय भएपछि अरु सानो सजाय हुने खत खापिदैन । सर्वस्व सहित जन्मकैद वा जन्मकैद हुने वा भएको कसैले म्याद गुजारी फरार भएको वा कैद थुनामा बसेको वा कैद थुनाबाट भागेको वा धरौटी जमानी तारिखमा छूटेको अवस्थामा ठूलो सजाय हुने खत गरे सोही ठूलो सजाय गर्नु पर्छ । फेरि जन्मकैदको सजाय हुने खत गरेकोमा जन्मकैद भोगी छुट्न पाउने भएपछि चार वर्ष थपी र घटी सजाय हुने खत गरेकोमा खत अनुसार बढीमा चार वर्षसम्म थपी कैद गर्नु पर्छ ।

---

▣ पहिलो संशोधनद्वारा संशोधित ।

′ बालबालिका सम्बन्धी ऐन, २०४८ द्वारा झिकिएको ।

↜ सातौं संशोधनद्वारा खारेज ।

▯ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा झिकिएको ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

९ नं. ॥ ॥ देवानी मुद्दामा सजाय गर्दा जहानमा मुख्य कारणीलाई ऐन बमोजिम सजाय भएपछि अरुलाई सजाय गर्न हुँदैन ।

१० नं. ॥ ॥ ऐनमा पटक वा खत खाप्नु भन्ने लेखिएको वाहेक एकै कागजका मुद्दामा दुई वा सो भन्दा बढी ऐन लगाई खत पटक खापी सजाय गर्नु परेमा कैद हुने कलममा जुन ऐनको ठूलो सजाय छ सोही ऐनले मात्र सजाय गर्नु पर्छ । अरु ऐनको खत खाप्न हुँदैन । जरिबानाको सजाय पाउनेमा सबै ऐनको खत खापी सजाय गर्नु पर्छ । जरिबानाको र कैदको सजाय हुनेमा दुवै कलमको ठूलो सजायको मात्र दुवै कुराको सजाय गर्नु पर्छ । एकै कागजको मुद्दा भएपनि नभएपनि सर्वस्व भएपछि सो हुनुभन्दा अघिको कसूरमा जरिबानाको खत खापिदैन ।

११ नं. ॥ ॥ ऐनमा कैद भनी लेखिएको कलममा कैदै हुन्छ ।

☯११क. नं. ॥ ॥ मुद्दा डिसमिस गराए वापत कैदको सजाय भएकोमा त्यस्तो कैदको एक दिनको ⌘पच्चीस रुपैयाँका दरले रुपैयाँ बुझाएमा कैद गर्नु पर्दैन । रुपैयाँ बुझाएमा बुझी लिई कैदको लगत कट्टा गरिदिनु पर्छ - - - - - - - - - - - - - १

यसै महलको ११ नं. मा जुनसुकै कुरा लेखिएको भए तापनि तीन वर्षभन्दा कम कैदको सजाय हुने कुनै कसूर गर्ने व्यक्तिलाई कैदको सजाय गरी पहिलो पटक कसूरदार ठहरी अड्डाले कैदमा राख्न मनासिब नठहराएमा एक दिनको ⌘पच्चीस रुपैयाँको दरले हुन आउने रकम तोकी सो तोकिएको रकम बुझाएमा कसूरदारलाई कैदमा नराख्ने गरी अड्डाले फैसला गर्न सक्नेछ । सो बमोजिम कसूरदारले रुपैयाँ बुझाएमा बुझी लिई कैदको लगत कट्टा गरी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - २

माथि दफा २ बमोजिम कैद वापतको रुपैयाँ बुझाउन पाउने गरी फैसला गर्दा अड्डाले कसूरदारसँग फेरी त्यस प्रकारको कुनै अपराध नगरी राम्रो आचरण पालन गर्नेछु भनी कागज गराउनेछ र सो मितिले तीन वर्षभित्र कैदको सजाय हुने कुनै अपराध गरेमा सो कसूरदारलाई पहिलेको फैसला बमोजिमको कैद समेत थपी सजाय गरिनेछ र अड्डाले पहिलेको फैसला बमोजिम कैद वापत बुझाएको रकम फिर्ता गर्ने आदेश दिन सक्नेछ - - - ३

⊥विहावरीको महलको १० नम्बर बमोजिम सजाय हुनेमा माथि २ दफा बमोजिमको व्यवस्था लागू हुने छैन - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

▩१२ नं. ॥ ॥ यो ऐनको विभिन्न महल वा प्रचलित कानूनमा लेखिएको कुनै काम कुरा कसूर हुनेमा सो कसूरका निमित्त सम्बन्धित महल वा प्रचलित कानूनमा सजायको कुनै खास व्यवस्था गरिएको रहेनछ भने त्यस्तो कसूरको प्रकृति र अवस्थाका विचारले पाँच हजार रुपैयाँसम्म जरिबाना हुनेछ ।

१३ नं. ॥ ॥ कुनै अड्डाबाट सरकारी कर्मचारीहरुको जिम्मा गरी कुनै अड्डाका नाउँमा चलान गरी पठाएको नगद जिन्सी गैह्रको जिम्मा लिई आउने कर्मचारीले आफ्नै मुनासिबले होस् वा आफू माथिका अधिकृतले अह्राउँदा होस् बीचमा सो झिकेछ भने आफ्नै मुनासिबले झिकेको भए झिक्नेलाई र अह्राई झिकेको भए

---

☯ नवौं संशोधनद्वारा थप ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

▩ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

अह्राउनेलाई दुई वर्षदेखि छ वर्षसम्म कैद गर्नु पर्छ । अराउ मानी मात्र झिकेको भए अह्राउनेलाई हुने सजायको डेढी घटाई कैद गर्नु पर्छ । विगो मासेको रहेछ भने मास्नेबाट विगो समेत बुझी लिनु पर्छ ।

१४ नं. ॥ ॥ कुनै सरकारी वा सार्वजनिक कामको अधिकार पाएका व्यक्तिले आफ्नो ओहदा सम्बन्धी काम गर्दा गराउँदा वा कुनै कानूनी कर्तव्य भएका व्यक्तिले त्यस्तो कर्तव्यको पालन गर्दा कानूनले लिन खान हुने पारिश्रमिक बाहेक अरु कुनै रकम कलम दै दस्तुर लिन खान हुँदैन लिए खाएमा घूस खाएको ठहर्छ ।

१५ नं. ॥ ॥ घूस खाएकोमा विगो जफत गरी लिई सरकारी वा सार्वजनिक कामको अधिकार पाएका कुनै व्यक्तिले घूस खाएको भए निजलाई कसूरको मात्रा अनुसार दुई वर्षदेखि छ वर्षसम्म कैद वा पाँच हजार रुपैयाँसम्म जरिबाना र सो बाहेक अरुले घूस खाएको भए निजलाई विगो बमोजिम जरिबाना हुन्छ । जागिर छँदा घूस खाएको जागिर टुटेपछि सजाय पाउने भएमा वा घूस खान मागेकोसम्म रहेछ खान भने पाएको रहेनछ भने पनि माथि लेखिए बमोजिम हुन्छ । घूस खुवाउने वा घूसको कुरा मिलाई दिनेलाई घूस खुवाई सकेको वा खुवाई नसकेको भएपनि सरकारी कर्मचारी भए निजले आफै घूस खाए सरहकै सजाय र सरकारी कर्मचारी बाहेक अरु भए त्यस्को आधा सजाय हुन्छ । घूस खानु खुवाउनु गरी कसैको नोक्सान पारेको रहेछ भने सो नोक्सानी विगो जस्का पेटमा परेको छ उसैबाट र निजबाट उपर हुन नसकेमा घूस खानेबाट असूल गरी लिन पाउँछ ।

१६ नं. ॥ ॥ सरकारी कर्मचारीले डर धाक देखाई कुटपीट, हातपात वा बाँधछाँद समेत इत्यादि जोर जुलुम गरी जबरजस्ती घूस लिएमा सो घूसको विगो जसबाट लिएको हो उसलाई फिर्ता गराई सो कर्मचारीलाई विगो बमोजिम जरिबाना गरी तीन वर्षदेखि नौ वर्षसम्म कैद हुन्छ । जबरजस्ती गरेको मात्र रहेछ लिन पाएको भने रहेनछ भने माथि लेखिएको सजायको आधा सजाय हुन्छ ।

१७ नं. ॥ ॥ यसै महलका १५ नम्बरका कुरामा कैद गर्नु पर्दा नौ वर्ष र १६ नम्बरका कुरामा कैद गर्नु पर्दा बाह्र वर्षभन्दा बढी कैद गर्नु हुँदैन ।

१८ नं. ॥ ॥ फौजदारी मुद्दामा कुनै व्यक्तिले झुट्टा प्रमाण बनाई रीस ईबीले वा मनासिब माफिकको कारण वा तथ्य नभई कुनै व्यक्ति उपर सो मुद्दा चलाएको ठहरेमा झुट्टा पोल उजूर गरे वापत निजलाई निजले पोलेको कुरा ठहरेको भए पोलाई माग्नेलाई हुने सजायको आधा सजाय हुन्छ । सो बमोजिम सजाय गर्दा पाँच वर्षभन्दा बढी कैद हुने भएमा पाँच वर्षसम्म मात्र कैद गर्नु पर्छ । पोल उजूर गर्दाको अवस्थामा रीस ईबी रहेनछ भन्ने वा पोल उजूर गर्नु पर्ने मनासिब माफिकको तथ्य भई गरेको हो भन्ने मुद्दा हेर्ने अड्डालाई विश्वास भएमा *सजाय गर्नु नपर्ने वा कम गर्नु पर्ने कारण खोली त्यस्तो पोल उजूर गर्ने व्यक्तिलाई सो लेखिएको सजाय मध्ये सबै वा केही सजाय नगर्न सक्नेछ ।

१९ नं. ॥ ॥ यसै महलको १८ नम्बर बमोजिम पोलाहालाई सजाय हुने भएकोमा सो मुद्दा हेर्ने अड्डाले पोलाहालाई सो सजायको आधा सोही लेखिए बमोजिमको सजाय गरी आधा जसका उपर त्यस्तो झुट्टा मुद्दा चलाएको हो सो

---

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

व्यक्तिलाई क्षतिपूर्तिको रुपमा भराई दिनेछ । पोलाहालाई कैदको सजाय हुनेमा यो नम्बर बमोजिम दिइने क्षतिपूर्तिको लागि सो कैदको सजायको नगद अङ्क कायम गर्दा [⌘]एक दिन कैदको सजायको पचास रुपैयाँ कायम गर्नु पर्छ । माथि लेखिए बमोजिम क्षतिपूर्ति दिनु पर्ने व्यक्तिले सो बमोजिम क्षतिपूर्ति नदिएमा सो क्षतिपूर्ति निजको जायजातबाट भराई दिनु पर्छ र जायजातबाट असूल उपर हुन नसकेमा सो वापत कैद गराई पाउँ भनी क्षतिपूर्ति पाउने व्यक्तिले दरखास्त दिएमा मुद्दा हेर्ने अड्डाले भरी भराउ हुन नसकेको क्षतिपूर्तिको अङ्कको विचार गरी तीन महिनासम्म कैदको सजाय गर्न सक्नेछ ।

२० नं. ॥ ॥ यसै महलको १९ नम्बर बमोजिम क्षतिपूर्ति दिनु पर्ने व्यक्तिको मृत्यु क्षतिपूर्तिको फैसला हुनु वा भरी भराउ हुनुभन्दा अगावै भएपनि निजका हकवाला मार्फत निजका अंश हकबाट पुगेसम्म क्षतिपूर्ति असूल गरी भराई दिनु पर्छ र क्षतिपूर्ति पाउने व्यक्तिको मृत्यु क्षतिपूर्तिको फैसला हुनु वा भरी भराउ हुनुभन्दा अगावै भएमा निजले पाउनु पर्ने क्षतिपूर्ति निजका हकवालाले पाउँछ ।

२१ नं. ॥ ॥ यस ऐनमा अन्यत्र लेखिएकोमा बाहेक देहायका कुरामा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - -

नपाउनेमा पाउनु पर्छ भनी उजूर दिएको ठहरेमा पक्रेको विगोको सयकडा दश जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

दिनु पर्नेमा फरेव गरी नदिएको ठहरेमा विगो भराई सो विगोको सयकडा दश जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

आफूले पाउनु पर्ने भन्दा बढ्ता पक्रेको ठहरेमा सो बढ्ता पक्रे जतिको र आफूले दिनु पर्ने भन्दा घटी भनेको ठहरेमा सो घटी भनेका जति विगोको सयकडा पाँच जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

[λ]क्षतिपूर्ति भराउनु पर्नेमा भराएको क्षतिपूर्तिको रकमको भरी पाउनेबाट दशौंद लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

२२ नं. ॥ ॥ अड्डाबाट विगो धरौट लिई मुद्दा हेर्नु पर्नेमा अड्डामा विगो दाखिल गराई वा रोक्का गर्नु पर्नेमा रोक्का गरी मुद्दा हेर्नु पर्छ । अड्डामा विगो दाखिल भएपछि र रोक्का गरेको वा धन जमानी लिएको मितिदेखिको ब्याज लाग्दैन ।

[⌘]२३ नं. ॥ ॥ सजाय तोकी फैसला गर्दा सजाय पाउने कसूरदार हाजिर रहेको भए सो फैसला गर्ने अड्डाले नै उसै बखत पक्री फैसलाले लागेको सजाय असूल गर्नु पर्छ । सो गर्दा जरिबाना लागेकोमा बुझाए बुझी वा सो बापत जेथा जमानी लिई छाडी दिनु पर्छ । कैद लागेकोमा पुनरावेदन गर्न अदालती बन्दोबस्तको महलको १९४ नम्बर बमोजिम धरौट वा जमानत दिएमा सो लिई छाड्नु पर्छ । नबुझाए वा नदिए जरिबाना बापत लाग्ने कैद र फैसलाले भएको कैद समेत असूल गर्न कारागारमा पठाई दिनु पर्छ । सजाय पाउने कसूरदार हाजिर नरहेको भए गिरफ्तार गर्न अड्डाबाटै सम्बन्धित प्रहरी कार्यालयलाई आदेश गरी यसै महलको २५ र २६ नम्बरहरुमा लेखिए बमोजिमको कारबाही समेत चलाउनु पर्छ । सो बमोजिम लेखी आएमा सम्बन्धित प्रहरी

---

⌘ दशौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

⌘ दशौं संशोधनद्वारा संशोधित ।

कार्यालयले सजाय पाउने कसूरदारलाई खोज तलास गरी पक्री अड्डामा दाखिल गर्नु पर्छ । फैसला बमोजिम लागेको सजायको लगत फैसला गर्ने अड्डाले आफैले कस्नु पर्नेमा आफै कस्नु र अन्य इलाकाको शुरु अड्डामा कस्न पठाउनु पर्नेमा सो अड्डामा फैसला भएको सात दिनभित्र पठाउनु पर्छ । लगत कस्दा कस्न पठाउँदा सजाय पाउने कसूरदारलाई फैसला बमोजिम लागेको सजाय र सो असूल गर्न गरेको कारबाही समेत खुलाउनु पर्छ । साधक जाहेर गरेकोमा साधक निकासा भई आएपछि सो बमोजिम लगत कस्नु कसाउनु पर्छ ।

🠉२३क. नं. ॥ ॥ फैसला बमोजिम सरकारी विगो, दशौंद बिशौंद समेत इत्यादि लिनु पर्ने कलममा वा सर्वश्व हुने कसूरमा कसूरदार हाजिर रहेको भए फैसला गर्ने अड्डाले नै उसै बखत पक्री फैसलाले लागेको विगो, दशौंद बिशौंद असूल गर्ने वा सर्वस्व गर्ने कारबाही चलाउनु पर्छ । सजाय पाउने कसूरदार हाजिर नरहेकोमा सजाय असूल गर्ने सम्बन्धमा यसै महलको २३ नम्बरमा लेखिए बमोजिम निजलाई पक्राउ गर्न र २६ नम्बर बमोजिम विगो, दशौंद, बिशौंद असूल गर्ने वा २७ नम्बर बमोजिम सर्वस्व गर्ने समेत कारबाही चलाउनु पर्छ - - - - - - - - - - - - - - - - - - - १

फैसला बमोजिम लाग्ने ठहरेको सजाय वा सरकारी विगो, दशौंद, बिशौंद असूल गर्ने सिलसिलामा अड्डाले कसूरदारको जायजात वा सर्वश्व गर्नु पर्दा प्रहरी कार्यालयको सहायता मागेमा तुरुन्त दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - २

✂२४ नं. ॥ ॥ सरकारी विगो जरिबाना दशौंद बिशौंद समेत इत्यादि लिनु पर्ने कलममा वा सर्वस्व हुने कसूरमा एक पटक सर्वस्व जायजात भइसकेपछि सो सर्वस्व भएका कसूरमा र जायजात भएका कलमको बाँकी जतिमा देहाय बमोजिम गर्नु पर्छ । सो बाहेक अरु कुराको जायजातबाट उपर नभएको बाँकी विगो जरिबानाको लगत तुरुन्तै र कैदको हकमा जायजात भएपछि पाँच वर्षदेखि बेपत्ते भए लगत काटी दिनु पर्छ - - - - -- - - - - - - - - - - - - - - - - - - - - - - -

ज्यान सम्बन्धी मुद्दा, कुनै प्रकारको चोरी मुद्दा वा राजकाज मुद्दाको कसूरदारलाई भएको सजायको बाँकी र सम्बन्धित कर्मचारीले आफ्नो जिम्माको सरकारी वा सरकारी संस्थान वा सरकारद्वारा नियन्त्रित संस्थानको तहविल, धनमाल मासी चोरी नोक्सान पारी खाए खुवाएको वा पेश्की ठेकको वा बाँकी नतिर्नेको महलको २ नम्बरको बाँकी समेत यति कलमको बाँकीमा जहिलेसुकै फेला परे पनि फैसला लगत बमोजिमको सजाय गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - १

गैह्र सरकारी वा देहाय दफा १ मा लेखिएको संस्थानको विगोमा अपुताली खानेबाट अपुताली खाएजति सम्पत्तिबाट असूल गर्नु पर्छ - - - - - - - - - - - - - - - २

बाँकीवाला मरी 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य समेत पाँचजना स्थानीय भलादमीको मरुवा मुचुल्का भई आए कैद जरिबाना बिशौंदको लगत काटी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

बाँकीवाला मानिस वा निजको घर ठेगान नलागेमा तीन वर्षसम्म वर्षको एक पटक र मानिस घर ठेगान लागे पनि भागी मरे बाँचेको वा यस ठाउँमा छ भन्ने ठेगान

---

🠉 दशौं संशोधनद्वारा थप ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

नलागेमा पाँच वर्षसम्म वर्षको एक पटक 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य समेत स्थानीय भलादमी पाँच जनाको बेपत्ते मुचुल्का भई आए जेथा हुनेको जायजात भइसकेको भए देहाय दफा १ मा लेखिएको लगत बाहेक अरु लगत काटी दिनु पर्छ - - - -  - - - - - - - - - - - - - - - - - - - - ४

⌘२५ नं. ॥ ॥ जरिबाना वा सरकारी विगो असूल गर्नलाई दुनियाँको विगो उपर नहुन्ज्याल पर्खी रहनु पर्दैन । सरकारी विगो लागेको मानिसले सो तिरे लिई र नतिरे ऐन बमोजिम जायजात गरी असूल गर्नु पर्छ । सो बमोजिम जायजात गरी लिंदा नपुगेको बाँकीमा हाजिर रहेको भए तुरुन्त र हाजिर नरहेको भए यसै महलको २३क. नम्बर बमोजिम गर्नु पर्छ । सरकारी विगो बाहेक कैद जरिबाना लागेकाको हकमा सो जरिबाना तिरे लिई नतिरे सो जरिबाना बापत समेत कैद गर्नु पर्छ । कैद भएपछि जायजात गर्नु हुँदैन । कैद जरिबाना लागेको मानिस भागी गयो भने यसै महलको २३ नम्बर बमोजिम पक्राउ गरी जरिबानामा र एक दिनको पचास रुपैयाँको दरले रुपैयाँ कसी कैदमा समेत जायजात गरी असूल गर्नु पर्छ । फैसला बमोजिम कैद हुने ठहरेको मानिस यसै महलको २४ नम्बरको म्यादभित्र फेला परे निजलाई फैसला बमोजिम कैद गरी कैद बापत आएको रुपैयाँ फिर्ता दिनु पर्छ ।

२६ नं. ॥ ॥ ऐन बमोजिम जरिबाना कैद वापत जायजात गर्दा कसूरदारको अंशबाट मात्र पुगेसम्मको असूल गरी लिनु पर्छ । दुनियाँको विगो वापत जायजात गर्दा त्यो धन खाने बाह्र वर्षदेखि माथिका ऐन बमोजिम मानु नछुट्टी सँग बसेका वा त्यो धन खाँदा सँग बसेका पछि भिन्न हुनेको अंश समेत र सरकारी विगोमा जायजात गर्दा सो धन खाँदा सँग बस्ने सबै अंशियारको अंश जायजात गर्नु पर्छ । सो बमोजिम जायजात गर्दा स्वास्नी, छोरी, बुहारीको दाइजो, विवाह नभएका छोराछोरीको विवाह खर्च, दुनियाँको विगोमा जायजातको दरखास्त नपर्दै र सरकारी विगोमा सो विगो लाग्ने भनी पक्राउ भएका मितिभन्दा अगावै साहूलाई लेखी दिएको अचलको भोग दृष्टि तमसुक बमोजिमको थैली, एक हल गोरु, रोजगार गर्ने एकसरा हतियार, खाने पकाउने एकसरो भाँडा, ओड्ने ओछ्याउने, लाएको कपडा र अन्न रहेछ भने सो जायजात हुनेलाई छ महिनासम्म खान पुग्ने अन्न पर सारी छाडी अरु जायजात गरी पुगेसम्म असूल गर्नु पर्छ । बढ्ता भए फिर्ता दिनु पर्छ । जायजात भएपछि पुगेन भने पनि अरु जहानलाई पक्रन हुँदैन । △तर फरार रहेको कसुरदारको अंश जायजात लिलाम बिक्री गर्दा यो नम्बर बमोजिम कुनै कुरा पर सार्नु पर्दैन ।

२७ नं. ॥ ॥ सर्वस्व गर्दा अंश नभएका अरु अंशियारको अंश पर सारी र कसूर जाहेर नहुँदै भोग दृष्टि बन्धक लेखिएका तमसुक बमोजिमको साहूको थैली, विवाह नभएका छोरा छोरीको ऐन बमोजिमको विवाह खर्च, स्वास्नी, छोरी, बुहारीको दाइजो र जुन मुद्दाबाट सर्वस्व हुने भएको हो त्यस मुद्दाबाट भरी पाउने फैसला बमोजिमको दुनियाँको विगो समेत पर सारी कसूरदारको मात्र सर्वस्व गरी लिनु पर्छ । धितो नलेखिएको अरु साहूको थैली पर सार्नु पर्दैन ।

२८ नं. ॥ ॥ रैकर जग्गा कमाउने मोहीको ऐन बमोजिम जायजात सर्वस्व गर्दा रैकर जग्गामा सो मोहीको हक जति सलामीमा बढाबढ गराउनु पर्छ । सो बढाबढ गराउँदा मधेशमा भए एक विगाहा, काठमाडौ उपत्यका र पहाडमा भए पाँच रोपनी र

---

⌘ दशौं संशोधनद्वारा संशोधित ।

△ सातौं संशोधनद्वारा थप ।

रोपनी नखुलेको पाखोमा मकैको एक पाथी बीउ जाने जग्गा उसैलाई थामी अरु जग्गा कानून बमोजिम बढाबढ गराई सो बढाबढ भएको जग्गाको तिरो बाँकी भए पहिले सो तिरोमा भर्ना गरी बाँकी रहेको रुपैयाँ र तिरो बाँकी नभए जम्मै रुपैयाँ जायजात सर्वस्वमा भर्ना गरी सो जग्गा पजनी भएका जनाउ तहसील गर्ने अड्डा र जिमिदार तालुकदारलाई दिने गर्नु पर्छ । सो बमोजिम बढाबढी गराउँदा कसैले कबुल नगरे उसैलाई थामी दिनु पर्छ । जग्गाको बाली तिरो नबुझाउँदा जायजात भएकोमा भने माथि लेखिए बमोजिमको जग्गा उसलाई छाडी रहनु पर्दैन बाली तिरो नबुझाएमा हुने कानून बमोजिम गर्नु पर्छ । एकै जग्गामा साविकको मोहीले पाउने उसलाई थामी अरु बढाबढ भएकोमा तिरो असूल गर्दा दामासाहीबाट असूल गर्ने गर्नु पर्छ ।

२९ नं. ॥ ॥ नेपाल सरकारको असूल गर्नु पर्नेमा नतिर्नेलाई त्यो मानिस सरकारी कर्मचारी रहेछ भने जुन अड्डाबाट पारिश्रमिक पाउने हो सो अड्डालाई फलानासँग यस व्यहोराको यति लिनु पर्छ उसको पारिश्रमिक यति रोक्का गरी असूल गर्नु भन्ने अड्डाको पूर्जी पठाउनु पर्छ । त्यसरी रोक्का गर्दा लिखत भएकोमा लिखतै बमोजिम र अरुमा तहबील मस्यौट र ठाडो बाँकीको कलममा बाहेक सो कर्मचारीको पारिश्रमिकको चार खण्डको तीन खण्ड मात्र बाँकी असूल नभएसम्म रोक्का गरी असूल गर्नु पर्छ ।

३० नं. ॥ ॥ जायजात वा सर्वस्वको सिलसिलामा सम्पत्ति तायदात वा लिलाम बिक्री गर्नु पर्दा समेत भएसम्म उस ठाउँका तालुकदार जिमिदार र निजहरु नभएमा निजहरुको दामकाम गर्ने व्यक्ति, 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि, कम्तीमा दुईजना भलादमी *... ... ... समेत साक्षी राखी देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - -

*... ... ... - - - - - - - - - - - -- - - - - - - - - - - - - - - - - १

जायजात सर्वस्वमा आएका घर जग्गा कानून बमोजिम गरी र सो बाहेक अरु धनमाल लिलाम हुने लिलाम गर्दा सुन, चाँदी, जवाहरात भए दर तौल गरी र अरु वस्तु भए सोझै लिलाम बिक्री गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - २

सुन, चाँदी, जवाहरात र किमती चीजहरु अड्डैमा ल्याई र सो बाहेक अरु चल धनमाल सरजमीन मै गै लिलाम बिक्री गरे पनि हुन्छ -- - - - - - - - - - - - ३

तमसुक बहिखाताको लहना तहसील हुने कागजपत्र आएको भए जायजात सर्वस्व गर्ने अड्डैमा लगत गरी ऐन बमोजिम असूल गर्नु पर्छ - - - - - - - - - - - - - ४

३१ नं. ॥ ॥ जरिबाना, कैद, सर्वस्व वा सरकारी विगो बापतमा जायजात हुँदा आएको फुसको घर कानूनको रीत पुऱ्याई लिलाम बिक्री गर्दा कसैले पनि सकार गरेन भने त्यस्तो घरको पञ्चकृती मोल गर्दा एकसय रुपैयाँसम्म जाने ठहरेकोमा सो मोल सरकारी लिनु पर्ने रुपैयाँको जम्मामा मिनाहा दिई घर उसैलाई थामी दिनु पर्छ । एकसय रुपैयाँदेखि बढी मोलिएको घर भने उसैलाई थामिन सक्तैन । श्रेस्तामा चढाई सरकारी काममा लगाई राख्ने वा बहाल बन्दोबस्त हुन सके सो बमोजिम गरी हिफाजतसाथ राख्नु पर्छ । दुनियाँको विगो बापत आएकोमा भने विगो भरी पाउने व्यक्तिले पञ्चकृती मोलमा सकार गरी लिनु पर्छ । सकार गरी नलिए सो घरको

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

* पहिलो संशोधनद्वारा झिकिएको ।

पञ्चकृती मोल भरी पाउने विगोमा मिनाहा दिलाई सो घर जसको हो उसैलाई थामी दिनु पर्छ ।

३२ नं. ॥ ॥ सरकारी बाँकी बापत जायजात वा सर्वस्व हुने मानिसको जायजात वा सर्वस्व गर्दा देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - - - - - - -

जायजात सर्वस्व भई अड्डामा आएको सात दिनभित्र फलानाको जायजात सर्वस्व भई आएकोमा कसैले दबाए छुपाएको कुरा थाहा छ भने आजका तीन महिनाभित्र जायजात सर्वस्व गर्ने अड्डामा जाहेर गर्न आउनु नआए ऐन बमोजिम सजाय समेत हुनेछ भनी लेखी जायजात सर्वस्व हुनेको घरमा सबैले देख्ने ठाउँमा र जायजात सर्वस्व गर्ने अड्डाको ढोकामा समेत म्याद टाँसी दिनु पर्छ - - - - - - - - - - - १

म्याद टाँस्दा सो जायजात सर्वस्व हुने मानिससँग भोग दृष्टि लेखाई लिएको वा नासो धरौट लिई राखेको चल अचल गैह्र र असामीले तिर्नु पर्ने नतिरी राखेको र जग्गा कमाउने मोही कुरियाले बाली नतिरी बाँकी राखेको समेत जो जो छ सो कुरा जाहेर गर्न आउनु भनी घर खेत, जग्गा, जमीन, दोपाया, चौपाया र असामीसम्मको फाँटवारी र अरु मालको गोश्वारा तपसिलमा लेखिएको व्यहोरा समेत जनाई म्याद टाँसी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

सो म्यादभित्र जाहेर नगरी म्याद नाघेपछि जाहेर भयो भने भोग दृष्टिवालाले जाहेर नगरेको भए भोग दृष्टि लिंदा जग्गा, जमीन, घरखेतमा ऐन बमोजिमको मोलमा सयकडा पाँच र चल वस्तु लिएमा सयकडा बीससम्म नपुग्ने गरी लिएको भए दश रुपैयाँमात्र जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - ३

लेखिएदेखि बढ्ता नाफा हुने गरी भोग दृष्टि लिएमा र चल अचल दबाई छुपाई म्यादभित्र जाहेर नगरेमा समेत सोही दबाएको विगो बमोजिम जरिबाना समेत गरी लिनु पर्छ । म्यादभित्र जाहेर गर्न आयो भने भोग दृष्टिमा लेखिएदेखि बढ्ता नाफा हुने गरी लिएको भएपनि बात लाग्दैन - - - - - - - - - - - - - - - - - - ४

३३ नं. ॥ ॥ सर्वस्व हुने वा सरकारी विगो लाग्ने ठहरी फैसला भएपछि पुनरावेदनको म्याद नाघी वा पुनरावेदन फैसला भई नसकी जायजात सर्वस्व लिलाम बिक्री गर्न हुँदैन । सर्वस्व हुने वा विगो लिने ठहरेपछि यसै महलको ३० नम्बर बमोजिम जायजात सर्वस्व गरी धनमाल हिनामिना हुन नपाउने बन्दोबस्त पुऱ्याई माथवर मानिसको जिम्मा लगाई रोक्का राख्नु पर्छ । सो बमोजिम रोक्का रहेकोमा पुनरावेदनको म्यादसम्ममा पुनरावेदन परेन भने पुनरावेदनको म्याद गुज्रेपछि र पुनरावेदन परेकोमा जाँच्ने माथिल्ला तहका अड्डाबाट पनि तल्लो तहका अड्डाले गरे बमोजिम विगो लाग्ने वा सर्वस्व हुने ठहऱ्यो भने सो रोक्का भएको धनमाल कानून बमोजिम लिलाम बिक्री गरी स्याहा दर्नु पर्छ । त्यसपछि पनि पुनरावेदन गरी उल्टिएकोमा र साधक निकासा हुँदा फिर्ता गर्नु पर्ने भयो भने लिलाम बिक्रीबाट आएको नगदी नै फिर्ता गर्ने गर्नु पर्छ । सरकारी विगो लाग्ने ठहरेकोमा लाग्ने ठहरेको विगोमा धरौट वा माथवर धन जमानी दियो भने जायजात रोक्का गर्नु पर्दैन । सरकारी कर्मचारीलाई लेखिए बमोजिम सरकारी विगो लाग्ने वा सर्वस्व हुने ठहरेमा तहवील मासेको वा ठाडो बाँकीमा वा सर्वस्व हुनेमा भए माथि लेखिए बमोजिम गर्नु पर्छ । सो बाहेक अरु किसिमको विगोमा जायजात रोक्का गर्नु पर्दैन । यसै महलको २९ नम्बरमा लेखिए बमोजिम पारिश्रमिकसम्म रोक्का गरी राख्नु पर्छ ।

३४ नं. ॥ ॥ जायजात वा सर्वस्वमा आएको वा रोक्कासम्म भएको धनमाल केही परिबन्दले मौकैमा लिलाम बिक्री ✂नगरेमा सडी गली नोक्सान भई जाने जिन्सी माल रहेछ भने त्यसै राख्न हुँदैन सो सडी गली जाने जति माल कानून बमोजिमको रीत पुर्‍याई लिलाम बिक्री गरी नगदै पारी आएको रुपैयाँ श्रेस्तामा आम्दानी बाँधी राखी पछि लिनु दिनु फिर्ता गर्नु पर्ने समेत जे ठहर्छ सो आएको नगदी नै लिनु दिनु फिर्ता गर्ने गर्नु पर्छ । ➢रोक्कासम्म भएका अरु कुनै मालसामान पनि लामो समयसम्म रोक्का राख्दा खिया लागी वा अरु कुनै परिबन्दबाट टुटफुट वा नोक्सान हुन सक्ने देखिएमा त्यस्तो मालसामानको पञ्चकृति मोल कायम गरी सो मोलमा मालधनीले नै सकार गर्न मञ्जुर गरेमा निजको कागज गराई निजलाई सो माल जिम्मा लगाई दिनु पर्छ । मालधनीले सकार नगरेमा माथि लेखिए बमोजिम सडी गली नोक्सान भई जाने माल सरह लिलाम बिक्री गर्न सकिनेछ ।

३५ नं. ॥ ॥ जायजात सर्वस्व गर्दा सरकारी पुस्तकालयमा राख्न माफिकको पुराना किसिमका पुस्तक निस्क्यो भने सो पुस्तक सरकारी पुस्तकालयमा राख्नु पर्छ पर्दैन नेपाल सरकारमा जाहेर गरी राख्न मनासिब छ भनी जवाफ आयो भने मोल भराउन दाखिल गर्न पर्ने भए लिलाम बोलाई लिलामबाट बोलेको पर्ने ठहरेको मोल जायजात सर्वस्वमा भर्ना गरी र मोल भर्ना गर्न नपर्ने भए त्यसै सो पुस्तक सरकारी पुस्तकालयमा दाखिल गरी भरपाई लिनु पर्छ ।

३६ नं. ॥ ॥ जायजात सर्वस्व गर्दा हतियार खजाना इत्यादि नेपाल सरकारबाट मनाही भएका मालहरु देखिए निस्केमा सो माल लिलाम बिक्री गर्न हुँदैन । पास गराई राख्न पर्नेमा पास गराई राखेको छ छैन बुझी निस्केको देखिएका मालको फाँटवारी लेखी ✰जिल्ला प्रशासन कार्यालयलाई लेखौट गरी पठाई सो अड्डा मार्फत निकासा भई आए बमोजिम गर्नु पर्छ ।

✂३७ नं. ॥ ॥ बाँकी विगो जरिबाना कैद समेत असूल गर्न अंश सर्वस्व जायजात रोक्का तायदात गर्न वा विगो भराउने चलन चलाउन बण्डा छुट्याउन पर्दा समेत अड्डाबाट सो काम तामेल गर्न खटी आएकालाई 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य, तालुकदार, स्थानीय भलादमी समेतले सम्बन्धित मानिस र घरद्वार जायजात सम्पत्ति खोजी देखाई चिनाई पक्राउ गराई दिनु पर्छ र सो सम्बन्धमा गर्नु पर्ने मुचुल्काहरुमा साक्षी बसी सही गरी आवश्यक सबै सहयोग गर्नु पर्छ । सो नगर्नेलाई एकसय रुपैयाँसम्म जरिबाना हुन्छ । नमरेकालाई मरेको, घरद्वार मानिस भएकोलाई नभएको वा वेपत्ते नभएकोलाई वेपत्ते भएको वा जायजात भएकोमा जायजात छैन भनी वा जानीजानी कुनै झुट्टा व्यहोरा लेखाई देखाई दिए वा झुट्टा मुचुल्का गरिदिए वा कुनै काम तामेल गर्न बाधा विरोध गरेमा एक हजार रुपैयाँसम्म जरिबाना वा पन्ध्र दिनसम्म कैद वा दुवै सजाय हुनेछ ।

३८ नं. ॥ ॥ जरिबाना वा सरकारी विगो बापत कैद ठेक्नु पर्दा ऐनमा लेखिएको कैदको हदमा नबढ्ने गरी देहाय बमोजिम गर्नु पर्छ --------

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

➢ केहि नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा थप ।

✰ केहि नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

[λ]कैद वा जरिबाना दुवै सजाय भएकोमा जरिबाना नतिरे बापतको कैद ठेक्नु पर्दा चार वर्ष भन्दा बढी अवधिको कैद ठेक्नु हुँदैन । तर नाबालकलाई जरिबाना नतिरे बापतको कैद ठेक्नु पर्दा उमेर पुगेको व्यक्तिलाई हुने कैदको आधामा नबढ्ने गरी कैद ठेक्नु पर्छ - - - - - - - - - - - - -- - - - - - - - - - - - - - - १

कैद वा जरिबाना मध्ये कुनै वा दुवै सजाय हुन सक्ने अपराधमा जरिबाना मात्रको सजाय भएकोमा सो जरिबाना नतिरे बापतको कैदको सजाय ठेक्नु पर्दा सो अपराधमा हुन सक्ने कैदको उपल्लो हदको आधाभन्दा बढी नहुने अवधिसम्मको मात्र कैद ठेक्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - २

जरिबानाको मात्र सजाय हुने अपराधमा जरिबानाको सजाय भएकोमा सो जरिबाना नतिरे बापतको कैदको सजाय ठेक्नु पर्दा दुई वर्षभन्दा बढी नहुने अवधिसम्मको मात्र कैद ठेक्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - ३

जायजातबाट उपर नभएको सरकारी विगोमा कैद ठेक्नु पर्दा एक हजार रुपैयाँसम्मको विगोमा एक वर्ष, पाँच हजार रुपैयाँसम्मकोमा दुई वर्ष, दश हजार रुपैयाँसम्मकोमा तीन वर्ष र दश हजार रुपैयाँ भन्दा बढीको प्रत्येक दश हजारमा एक वर्ष भन्दा बढी कैद ठेक्न हुँदैन । सो बमोजिम कैद ठेक्दा दश वर्ष भन्दा बढी हुन आयो भने पनि दश वर्षसम्म मात्र कैद ठेक्नु पर्छ - - - - - - - - - - - - ४

३९ नं. ॥ ॥ यसै महलको १० नम्बर बमोजिम जरिबानाको सजाय भएकोमा सो तिर्न नसकी कैद हुने भयो भने सबै जरिबानाको कलम देखाई जुन जरिबाना वापत बढी कैद हुन्छ सो जरिबानाको कैद गर्नु पर्छ । तिर्न ल्यायो भने ठेकिए जति कैदको मात्र रुपैयाँ तिरी जान पाउँदैन, त्यसलाई लागेको सबै जरिबानाको जम्मा अङ्कमा कैद बसेको जति कट्टा गरी अरु बुझी लिनु पर्छ ।

४० नं. ॥ ॥ कैद म्याद ठेक्नु पर्दा देहाय बमोजिम गरी कैद म्याद ठेक्ने गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

कैदको सजाय तोकिएकोमा कैद ठेक्नु पर्दा जति वर्ष, महिना र दिन तोकिएको छ सो बमोजिमको जम्मैमा कैद ठेक्ने गर्नु पर्छ - - - - - - - - - - - - - - - - - १

जरिबाना दशौंद बिशौंद बक्सौनी विगो समेत इत्यादि नतिरी त्यस बापतमा कैद ठेक्नु पर्दा हिसाबबाट वर्ष, महिना र दिन वा वर्ष र दिन वा महिना र दिनमा कैद ठेक्नु पर्ने हुन आएमा वर्ष महिना पुगेसम्म कैद ठेकी महिना नपुगेको चानचुन दिन जम्मै छाडिदिनु पर्छ । महिना नपुगेको दिनको मात्र कैद गर्नु पर्ने हुन आएमा भने हिसाबबाट जति दिन कैद गर्नु पर्ने हुन आउँछ उति जम्मैमा कैद ठेक्ने गर्नु पर्छ - - २

एकै जनालाई एक मुद्दादेखि बढी मुद्दामा जरिबाना दशौंद बिशौंद बक्सौनी इत्यादि गैह्न वापतमा एकै पटक वा ठेकिरहेको कैद माथि थपी कैद गर्नु पर्दा पनि माथि २ दफा बमोजिम महिना नपुगेको छाड्नु पर्ने चानचुन दिन मुद्दै पिच्छे छाडी कैद गर्ने गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

माथि २।३ दफामा लेखिए बमोजिम चानचुन दिन छाडी महिना वर्ष पुगेकोमा मात्र कैद ठेकी सकेपछि कैदको रुपैयाँ तिर्न पाउनेमा तिर्छु भने ठेकिएका कैद जतिमा

[λ] नवौं संशोधनद्वारा संशोधित ।

भुक्तान गरेको जति मिनाहा दिई बाँकी कैदको ऐन बमोजिमको रुपैयाँ लिनु पर्छ । छाडिदिएका चानचुन दिनको रुपैयाँ लिनु हुँदैन - - - - - - - - - - - - - - - ४

※४१ नं. ॥ ॥ एकै मानिसलाई एकै वा धेरै मुद्दाको धेरै कलमको कैद ठेक्नु परेमा जुन कलममा कैदको सबभन्दा ठूलो हद छ सो हद ननाघ्ने गरी एकै वा धेरै मुद्दामा एकै वा धेरै कलममा गरी कैद ठेक्नु पर्छ । त्यसरी कैद ठेकिएकोमा कैद भुक्तान हुन नपाउँदै अर्को कलममा कैद ठेक्नु पर्ने भयो र अघि ठेकिएको जम्मा कैदभन्दा पछि ठेक्नु पर्ने कलमको हद बढी छ भने अघि कैद ठेक्दा थुनामा परेको मितिदेखि पछि ठेकिएको कलमको हद ननाघ्ने गरी कैद ठेक्नु पर्छ । अघि ठेकिएको कैद भन्दा पछि ठेक्ने कलमको हद घटी रहेछ भने थप कैद ठेक्नु पर्दैन । फैसला, कैदी पूर्जी, कैद ठेक्ने किताबमासम्म खुलाई दिनु पर्छ र पछि ठेकिने कलमको हद घटी भएपनि अघि कैद गर्दा ठूलो कलमको हद नपुगेको रहेछ भने सो नपुग दिनसम्म पछिल्लो कलममा कैद गर्नु पर्छ । धेरै कलमको कैदको हद बराबर हुन आयो भने सो मध्ये एक कलमको कैद ठेक्नु पर्छ । अरु कलमका हकमा फैसला, कैदी पूर्जी, कैद ठेक्ने किताबमासम्म खुलाउनु पर्छ । तर फैसला भई सकेपछि कैद नबस्दै वा थुना कैद बसेको अवस्थामा वा थुना कैदबाट छुटेको वा भागेको अवस्था अर्को कसूर गरेकोमा सो कसूर वापत कानून बमोजिम थप कैद ठेक्नु पर्छ ।

☯४१क. नं. ॥ ॥ यस महलको अन्य नम्बरहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि जरिबाना वा कैदको सजाय लागेको व्यक्ति अन्तिम फैसला हुँदा अड्डामा उपस्थित भै जरिबाना बुझाउन वा कैदमा बस्न मञ्जुर भएमा वा त्यस्तो सजाय हुने गरी फैसला भएको व्यक्ति फैसला भएको मितिले साठी दिनभित्र फैसला गर्ने वा लगत रहेको अड्डामा हाजिर भै जरिबाना तिर्न वा कैदमा बस्न आफै उपस्थित भएमा निजलाई भएको जरिबाना र कैदको सजायमा बीस प्रतिशत मिन्हा दिई बाँकीको मात्र लगत कायम गरी सजाय कार्यान्वित गरिनेछ ।

☯४१ख. नं. ॥ ॥ 🕮ग्रामीण क्षेत्र, नगर क्षेत्र, जिल्ला वा अञ्चलको सिमाना हेरफेर भएमा त्यस्तो हेरफेर भएबाट जरिबाना, कैद, विगो वा फैसला बमोजिमको कुनै सरकारी रकम असूल गर्नु पर्ने व्यक्तिको वतन फरक पर्न गएमा अड्डाले पनि लगतमा सोही बमोजिम वतन सच्याई दुरुस्त बनाई राख्नु पर्छ । नेपाल सरकार वा सिमाना हेरफेर गर्ने निकायले पनि त्यसरी 🕮सम्बन्धित ग्रामीण क्षेत्र, नगर क्षेत्र, जिल्ला वा अञ्चलको सिमाना हेरफेर भएको सूचना नेपाल राजपत्रमा प्रकाशित गर्नु पर्नेछ ।

४२ नं. ॥ ॥ विगो भरिपाउनेमा सो भरिपाउनेको दरखास्त नपरी भरिभराउ गर्न हुँदैन । भरिपाउनालाई फैसलाको रीतपूर्वकको नक्कल लिई देहायको म्यादमा जायजातको दरखास्त दिन आएमा देहाय बमोजिम गरी भराई दिनु पर्छ । सो म्याद नाघेपछि दरखास्त लाग्न र म्यादभित्र दरखास्त दिएमा अड्डाबाट दिएको तारिख गुजारी बस्यो भने फैसलाले पाउने भएको विगो भरिभराउ हुन सक्तैन - - - - - - -

---

※ सातौं संशोधनद्वारा संशोधित ।
☯ नवौं संशोधनद्वारा थप ।
☯ नवौं संशोधनद्वारा थप ।
🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

※[λ]विगो भरिपाउने गरी आखिरी फैसला भएको मितिले तीन वर्षभित्र दरखास्त दिनु पर्छ । लेखिएको म्यादभित्र दरखास्त दिन आएमा विगो भरिपाउने काम खतम नभएसम्म अड्डाबाट दिएको तारिखमा रही जायजात समेत देखाई दिउँला तारिख गुजारे ऐन बमोजिम गर्नु भन्ने समेत बोली पारी दरखास्त लिई तारिखमा राखी म्याद पाए वा टाँसेको पैंतीस दिनभित्र भर्नु पर्ने विगो, बिशौंद लाग्नेमा सो समेत दाखिल गर्न ल्याउनु नल्याए ऐन बमोजिम जायजात हुन्छ भनी दरखास्त परेको सात दिनभित्र विगो भर्नु पर्नेको नाममा म्याद जारी गर्नु पर्छ र सो म्यादभित्र विगो बिशौंद दाखिल गर्न नल्याए ऐन बमोजिम जायजात गरी भराई दिनु पर्छ - - - - - १

माथि १ दफा बमोजिम जायजातबाट पूरा विगो पुगेन भने नपुग जतिमा लेनदेन व्यवहारको महलको १९ नम्बर, दामासाहीको महलको १० नम्बर, बाँकी नतिर्नेको महलको १० नम्बर, चोरीको महलको १० नम्बर र आगो लगाउनेको महलको ९ नम्बर बमोजिम कैद गराउन पाउनेमा कैद गराई पाउँ भनी कैदमा बसुन्ज्याल खानलाई कैदी थुनुवाले पाउने सरहको सिधा खर्च समेत दाखिल गरी अघि जायजातबाट भरी पाएका सात दिनभित्र दरखास्त दिनु पर्छ । त्यस्तो दरखास्त पर्न आयो भने हाकिमले त्यस कुराको पर्चा खडा गरी कैद गरिदिनु पर्छ । सो बमोजिम कैद नगराएको वा कैद नहुनेमा अघि जायजात हुँदा दबाए छपाएको भए मात्र दबाए छपाएको चल अचल धनमालको पत्ता लगाई अघि भरी पाएका मितिले दुई वर्षभित्र दरखास्त दिनु पर्छ । सो म्यादभित्र दबाए छपाएको चल अचल धनमालको फाँट खोली दरखास्त दिन आयो भने ऐनको रीत पुऱ्याई पत्ता लगाई ल्याएको जेथा धनमाल लिलाम बिक्री गरी धनीलाई भराई दिनु पर्छ । लेखिए बमोजिम भइसकेपछि पनि भरिपाउने जम्मै धन पुग्न सकेन भने नपुगमा सो जायजात हुनेलाई पक्रन, दावा गर्न र दोहोरो जायजात गराउन समेत पाउँदैन । बही, खाता, तमसुक, लिखत समेत जो छ फट्टा गराई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - २

जायजात गर्नु नपरी अड्डाबाट भराई दिएको वा जायजातबाट उपर भएको विगो भराई दिएकोमा ऐन बमोजिम उसै बखत दशौंद बिशौंद उपर गरी लिनु पर्छ - - - ३

जायजात गर्नु पर्ने मानिस अर्कै इलाकामा बसेको रहेछ र पूर्जीद्वारा अर्कै अड्डाबाट गर्नु पर्नेमा धनीले जायजात देखाउन गए उसलाई समेत राखी र नगए अड्डैबाट बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र गरिदिनु पर्छ - - - - - - - - - - - - - - - ४

जायजात गराई माग्ने दरखास्त दिई कारबाहीलाई अड्डाबाट दिएको तारिख गुजारी बस्नेलाई यसै महलको ४८ नम्बर बमोजिम गरी विगोको लगत समेत काटी दिनु पर्छ - - ५

※४३ नं. ॥ ॥ मुद्दा फैसला भै पुनरावेदन उजूरको म्याद नाघेपछि जायजातबाट भराउने विगो बाहेक फैसला बमोजिम चलन पाउने वस्तु चलन गर्न जाँदा नदिएमा देहायमा लेखिए बमोजिम हुन्छ - - - - - - - - - - - - - - - - - -

आखिरी टुङ्गो लागि फैसला भएपछि सो फैसला भएका मितिले दुई वर्षभित्र जुन अड्डाबाट चलन पाउने हो सो अड्डामा चलन पाउँ भन्ने दरखास्त दिनु पर्छ । सो दुई वर्षको म्याद नाघेपछि भने सो चलन चलाउने वस्तुको ऐन फैसला बमोजिम लागेको दस्तुरको आधा दस्तुर फेरि दिए मात्र सो पहिला दुई वर्षको म्याद नाघेको

---

※ सातौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

※ सातौं संशोधनद्वारा संशोधित ।

मितिले फेरि एक वर्षभित्र दरखास्त दिन पाउँछ । सो म्याद नाघेपछि भने दरखास्त लिन र अड्डाबाट चलन चलाई दिन समेत पर्दैन - - - - - - - - - - - - - - १

☯आखिरी टुङ्गो लागी फैसला भै हक बेहक छुटिइएकाको हक कायम भएको सम्पत्तिमा सो व्यक्तिले चलन चलाई पाउँ भनी फैसला भएको मितिले दुई वर्षभित्र दरखास्त दिएमा अड्डाले चलन चलाई दिनु पर्छ । चलन चलाई पाउँ भनी छुट्टै नालिस गर्नु पर्दैन । सो बमोजिम अड्डाले चलन चलाई दिंदा कानून बमोजिम लाग्ने कोर्ट फी र विगोको अढाई प्रतिशत दस्तुर र विगो नखुलेकोमा पञ्चकृति मोल बमोजिमको विगो कायम गरी सो विगोको अढाई प्रतिशत दस्तुर सूचना पाएको मितिले पैंतीस दिनभित्र दाखिल गर्न ल्याउनु भनी अड्डाले सो चलन चलाई पाउँ भन्ने व्यक्तिलाई सूचना दिनु पर्छ । सो दुई वर्षको म्याद वा पैंतीस दिनको म्याद नाघेकोमा सो दस्तुरको डेढी दस्तुर सहित सो म्याद नाघेको मितिले एक वर्षभित्र दरखास्त दिए चलन चलाई दिनु पर्छ । सो म्याद नाघेपछि अड्डाबाट चलन चलाई दिनु पर्दैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - १क.

देहाय दफा १ ☯र १क. बमोजिम दरखास्त परेपछि त्यसको रसिद दिई दरखास्तवालालाई तारिखमा राखी सात दिनभित्र अड्डाको पूर्जी गरी आफ्नो इलाकामा भए आफ्नै अड्डाबाट र अरु इलाकामा भए सो इलाकाको अड्डालाई लेखी सो अड्डाबाट समेत तीन महिनासम्ममा सो चलन पाउने वस्तु चलन चलाई दिनु पर्छ - - - - - २

चलन चलाउँदा 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि तालुकदार, ✲उपलब्ध भएसम्मका वादी, प्रतिवादी वा निजको प्रतिनिधि, स्थानीय तहको प्रतिनिधि तथा स्थानीय भलादमी समेत साक्षी राखी चलन चलाई दिई चलन पूर्जी समेत दिनु पर्छ । चलन दिनु पर्नेले वा अरु कसैले चलन चलाउन बाधा विरोध गरे आवश्यक परे 🕮गाउँपालिका वा नगरपालिका प्रहरी समेतको सहयोग लिई आवश्यक बल प्रयोग गरी चलन चलाई दिनु पर्छ र बाधा विरोध गर्नेलाई पक्री अड्डामा दाखिल गर्नु पर्छ । त्यस्तो बाधा विरोध गर्नेलाई एक हजार रुपैयाँसम्म जरिबाना वा पन्ध्र दिनसम्म कैद हुन्छ - - - - - - - - - - - - ३

चलन दिनु पर्ने घर, पसलभित्र धनमाल राखी ताल्चा मारी राखेकोमा चलन दिनु पर्ने मानिस हाजिर भए खोल्न लगाई चलन चलाई दिनु पर्छ । हाजिर नभए पन्ध्र दिनभित्र खाली गरिदिनु त्यसपछि कुनै दिन अड्डाबाट मानिस आई ताला लागी राखे ताला तोडी राखेको धनमाल तायदाती कब्जा लिलाम बिक्री गरी चलन चलाई दिनेछ भनी सोही दिन सो चलन चलाउनु पर्ने घर पसलको दैलामा म्याद टाँसी म्याद नाघेपछि सो बमोजिम गरी चलन चलाई दिनु पर्छ । धनमाल कब्जा लिलाम बिक्री गरेकोमा सो गरेको एक वर्षभित्र फिर्ता लिन आए सयकडा दश कटाई बाँकी फिर्ता गर्नु पर्छ सो म्यादभित्र फिर्ता लिन नआए दिनु पर्दैन, आम्दानी बाँध्नु पर्छ - - ४

λएक पटक चलन चलाई दिएकोमा चलन नछाडी खिचोला गरेमा खिचोला गरेको पटकै पिच्छे एक हजार रुपैयाँसम्म जरिबाना वा एक महिनासम्म कैद गरी अघि

---

☯ नवौं संशोधनद्वारा थप ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

✲ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

चलन चलाई दिएको सम्पत्तिमा फैसला बमोजिम फेरि चलन चलाई दिनु पर्छ । सो बमोजिम चलन पाउन फेरि नालिस गरिरहनु पर्दैन । दरखास्तबाटै चलन चलाई दिनु पर्छ र त्यस्तोमा चलन चलाई दिए वापत दस्तुर बुझाई रहनु पर्दैन - - - - - ५

*घर जग्गा सम्बन्धी आंशिक दाबी भएको मुद्दामा त्यस्तो घर जग्गाको दिशा र तर्फ खुलाइएको रहेनछ भने त्यस्तो दाबीका सम्बन्धमा पक्षलाई रोहबरमा राखी नरम गरम मिलाई अड्डाले छुट्याई दिन सक्नेछ - - - - - - - - - - - - - - ६

४४ नं. ॥ ॥ म्यादभित्र लिखत रजिष्ट्रेशन गरी नदिएकोले वा दाखिल खारिज नामसारी गरी नदिएकोले नालिस उजूर परी रजिष्ट्रेशन वा दाखिल खारिज नामसारी गरी दिनु पर्ने ठहरी फैसला भएकोमा फैसला गर्ने अड्डाले फैसला बमोजिम पास वा दाखिल खारिज नामसारी गरिदिने अड्डालाई पुनरावेदनको म्याद नाघेपछि पूर्जी गरिदिने भनी चलन चलाई दिनेको लगत कसे सरह लगत किताबमा लेखी राखी पुनरावेदन परेकोमा पुनरावेदन फैसला भई टुङ्गो लागी र पुनरावेदन नपरेकोमा पुनरावेदन दिने हदम्याद नाघी उजूर नलाग्ने भैसकेका मितिले छ महिनाभित्र फैसला बमोजिम गराई माग्ने मानिसले फैसला बमोजिम गराई माग्नलाई फैसला पूर्जी गरिदिने अड्डामा दरखास्त दिनु पर्छ । लेखिएका म्यादभित्र दरखास्त पर्न आएमा दरखास्त दिन आउनेलाई तारिखमा राखी फैसला पूर्जी गरिदिने अड्डाले फैसला उपर पुनरावेदन नलाग्ने भैसकेको छ छैन भनी हेरी बुझी पुनरावेदन उजूर नलाग्ने भैसकेको रहेछ भने दरखास्त परेका मितिले पन्ध्रदिनभित्र पुनरावेदन उजूर नलाग्ने भैसकेको हुनाले फैसला बमोजिम रजिष्ट्रेशन वा दाखिल खारिज नामसारी गरिदिनु भन्ने व्यहोराको पास वा दाखिल खारिज गरिदिने अड्डाका नाउँमा पूर्जी लेखी पठाई दरखास्तवालालाई पनि फैसला बमोजिम गरिदिनु भन्ने फलाना अड्डालाई फलाना मितिमा पूर्जी भैसकेकोछ सो अड्डामा आजका पैंतीस दिनभित्र हाजिर भै फैसला बमोजिम गराई माग्न जानु भन्ने पूर्जी गरिदिई सो पूर्जी बुझिलिएकाको भरपाई समेत लिई राख्ने गर्नु पर्छ । म्यादभित्र दरखास्त नपरे रजिष्ट्रेशन गर्ने पूर्जी हुन सक्तैन । दाखिल खारिज नामसारीको हकमा सो म्याद नाघेपछि दरखास्त परेको वा पूर्जी बमोजिम हाजिर भएकोमा प्रत्येक वर्षको निमित्त तिरोको चार खण्डको एक खण्ड जरिबाना गरी लेखिए बमोजिम दाखिल खारिज नामसारी गरिदिनु पर्छ । सो बमोजिम जरिबाना गर्दा जतिसुकै वर्ष भएपनि तिरो बमोजिम भन्दा बढी गर्न हुँदैन ।

४५ नं. ॥ ॥ धरौट राखेको थैली साहूलाई बुझाउन लगाई निखनाई दिने ठहरी फैसला भएकोमा पुनरावेदन नलाग्ने भैसकेपछि निखन्न नदिई चलन गरिराखेको घर जग्गाहरुको चलन छाडी धरौट रहेको थैली लिन पुनरावेदन नलाग्ने भएको मितिले तीन वर्षभित्र थैली धरौट रहेका अड्डामा हाजिर हुन जानु पर्छ । थैली बुझिलिएको छैन भनी निखन्न नदिई त्यसै चलन गरिरहन पाउँदैन । निखन्न पाउनेले चलन गर्न पाउँछ । धरौट रहेको थैली बुझी लिनलाई धरौट रहेको अड्डामा म्यादभित्र आएमा देहाय बमोजिम गरी धरौट रहेको थैली भराई दिनु पर्छ । म्यादभित्र थैली बुझी लिन नआए म्याद नाघेपछि भरिपाउन सक्तैन - - - - - - - - - - - - - - -

तीन वर्ष वा पुनरावेदन दिने म्यादभित्र धरौट रहेको थैली लिनालाई निखन्न दिन साहू हाजिर हुन आएमा अचल माल निखन्न दिनु पर्ने भए लेनदेन

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

व्यवहारको महलको ५ नम्बर बमोजिम गरी लिखत दाखिल गरे लिखतमा दरपीठ गराई र लिखत कुनै परिवन्दले दाखिल गर्न नसक्ने भएमा लिखत यस परिवन्दले दाखिल गरी दिन नसकेको हुनाले थैली बुझी लिई भरपाई गरिदिएँ लिखत पत्ता लागि आएका बखत निखनी लिनेलाई सुम्पी दिउँला भन्ने व्यहोराको भरपाई लेखी सहीछाप गराई लिई ऐन फैसलाले लाग्ने जति कट्टा गरी बाँकी रहेको थैली बुझाई दिई अड्डामा निखनी लिने हाजिर भए फट्टा भरपाई र लिखतसाथ सुम्पी दिएको कागजपत्रहरु सुम्पी दिई र हाजिर नरहे फट्टा भरपाई लिखत कागजपत्रहरु अड्डैमा राखी साहूले थैली बुझिलिई दरपीठ गरेको लिखत र त्यससाथ दाखिल गरेको कागजपत्रहरु लिन आउनु भनी निखनी लिनेका नाउँमा म्याद टाँसी लिन आएका बखत बुझाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - १

चल माल निखन्न दिनु पर्ने भई फैसला भएकोमा धरौट रहेको थैली बुझी लिनलाई म्यादभित्र थैली बुझी लिने साहू हाजिर हुनआएका बखत निखनी लिने समेत हाजिर भएको भए लिखतको पीठमा लेनदेन व्यवहारको महलको ५ नम्बर बमोजिम दरपीठ गराई वा भरपाई गराई सो दरपीठ भए गरिदिएको भरपाई र निखन्न दिनु पर्ने माल समेत सुम्पी दिई धरौट रहेको थैली साहूलाई ऐन फैसला बमोजिम लागेको लिनु पर्ने लिई बुझाई दिने र निखनी लिने हाजिर नरहे थैली बुझी लिन आउने साहूलाई निखनी लिने असामीका नाउँमा निखन्न पर्ने माल बुझी लिन आउनु भनी बाटाको म्याद बाहेक पैंतीस दिनको म्याद पूर्जी जाने भएको हुनाले तारिखका दिन निखन्न दिनु पर्ने माल सबै लिई हाजिर हुन आउनु भनी तारिख तोकि निखनी लिनेका नाउँमा पनि साहूले धरौट रहेको थैली बुझी लिनलाई हाजिर हुन आएकोछ बाटाका म्याद बाहेक पैंतीस दिनभित्र हाजिर भै निखन्नु पर्ने माल जाँची लिन आउनु म्यादभित्र नआए जरिबाना हुनेछ भन्ने समेत व्यहोरा लेखी म्याद पूर्जी टाँसी हाजिर भै बुझी लिन आए निखन्न दिनु पर्ने माल बुझाई माथि १ दफामा लेखिए बमोजिम लिखत फट्टा गराई वा भरपाई गराई दिई साहूलाई बुझाउनु पर्ने थैली माथि १ दफामा लेखिए बमोजिम गरी बुझाई दिनु पर्छ - - - - - - - - - - - - - - - २

माल बुझी लिने म्यादभित्र हाजिर हुन नआए म्याद गुज्रेका मितिले पन्ध्र दिनभित्र निखनी लिनेलाई पक्राउ गर्न पठाई पक्री म्यादभित्र लिन नआई अटेर गरे वापत तल ४ दफा बमोजिम जरिबाना गरी बुझाउन लगाई धरौट रहेको थैली साहूलाई माथि १ दफामा लेखिए बमोजिम गरी बुझाई दिनु पर्छ - - - - - - - - - - - ३

निखन्न दिनु पर्ने साहूले धरौट रहेको थैली बुझी लिनलाई हाजिर नहुँदै थैली बुझी लिने म्याद तीन वर्षभित्र अघिबाट निखन्न पाउने चाहिंले निखनाई पाउँ भनी दरखास्त दिन आएमा निखन्ने काम खतम नभएसम्म तारिखमा राखी निखन्न दिनु पर्ने साहूलाई निखनी लिनेको यस्तो दरखास्त परेकोले बाटाका म्याद बाहेक पैंतीस दिनभित्र लिखत कागजपत्र र माल निखन्न दिनु पर्नेमा निखन्न दिनु पर्ने माल समेत लिई धरौट रहेको थैली बुझी लिन आउनु भन्ने समेत व्यहोराको म्याद पूर्जी टाँसी हाजिर भए माथि लेखिए बमोजिम गरी र हाजिर नभए म्याद नाघेका पन्ध्र दिनभित्र पक्रन पठाई पक्री ल्याई म्यादभित्र लिन नआई अड्डाको उर्दी नटेरे वापत धरौट रहेको थैलीको सयकडा दशका दरले जरिबाना गरी माथि दफा दफामा लेखिए बमोजिम गरी धरौट रहेको थैली बुझाउन लगाई निखन्न दिनु पर्ने माल र कागजपत्र समेत निखनी लिनेलाई सुम्पिदिनु पर्छ - - - - - - - - - - - - - - ४

माल निखनाई दिनु पर्नेमा निखन्न दिन पर्ने साहू म्यादभित्र हाजिर हुन नआएकोले पक्राउ गर्न पठाउँदा पनि म्याद नाघेको पैंतीस दिनभित्र पक्राउ भै आएन हुन सकेन वा पक्राउ भएकाले नै आएका पन्ध्र दिनसम्म थुन्दा पनि निखन्न दिनु पर्ने माल दाखिल गर्न नसकेको मनासिब कारण पनि भन्न सकेन भने निखन्न दिनु पर्ने साहूको तायदात गरी माल निस्के माल दिलाई धरौट रहेको रुपैयाँ बुझाईदिनु पर्छ । माल निस्केन भने निखन्न दिनु पर्ने मालको विगोमा धरौट रहेको रुपैयाँ भर्ना दिई नपुग जतिमा जायजात गरी लिलाम बिक्री गरी आएको रुपैयाँ र धरौट रहेको थैली समेत निखनी पाउने असामीलाई भराई दिई नपुग विगोमा बेइमानी गर्ने साहूलाई लेनदेन व्यवहारको महलको १९ नम्बर बमोजिम कैद गर्ने रीत पुऱ्याई कैद गराई पाउँ भन्ने दरखास्त दिन्छ भने सो बमोजिम म्यादभित्र सो माल दाखिल नगर्नेलाई माथि ४ दफामा लेखिए बमोजिम जरिबाना गरी सो जरिबानामा ऐन बमोजिम गरी थुनिएका साहूलाई छाडिदिनु पर्छ - - - - - - - - - - - - - - - - - - - ५

४६ नं. ॥ ॥ अड्डैबाट अंश छुट्याई बण्डा गरिदिने गरी फैसला भएकोमा फैसला बमोजिम अंश छुट्याई बण्डा गरिदिंदा देहाय बमोजिम गरी बण्डा गरिदिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

जतिसुकै विगोको अंश बण्डा छुट्याई दिनु पर्ने भएपनि अंश पाउने वा दिनेको दरखास्त नपरी त्यसै अंश बण्डा छुट्याई दिन हुँदैन । बण्डा छुट्याईदिने गरी आखिरी टुङ्गो लागी फैसला भएको मितिले दुई वर्षभित्र जुन अड्डाबाट बण्डा छुट्याई दिने हो सो अड्डामा दरखास्त दिनु पर्छ । सो दुई वर्षको म्याद नाघेपछि भने सो बण्डा छुट्याई दिने फैसला बमोजिमको लागेको दशौंदको आधा फेरि दिए मात्र सो पहिला दुई वर्षको म्याद नाघेका मितिले फेरी एक वर्षभित्र दरखास्त दिन पाउँछ । लेखिएका म्यादभित्र दरखास्त परे फैसला बमोजिम बण्डा छुट्याई दिनु पर्छ । सो म्याद नाघेपछि भने दरखास्त लिन र अड्डाबाट बण्डा छुट्याईदिन समेत हुँदैन - १

दरखास्त दिंदा अंश दिने वा लिने मानिस वादी प्रतिवादीमा लेखिएको ठाउँमा नबसी अन्यत्र बसेको भए हाल फलाना ठाउँमा बसेकोछु, बण्डा छुट्याउने काम खतम नभएसम्म तारिखमा रहुँला तारिख गुजारे ऐन बमोजिम गर्नु भन्ने समेत व्यहोरा लेखी यसै महलको ४२ नम्बर बमोजिम अंश पाउने वा दिने फैसलाको नक्कल समेत लिई दरखास्त दिन आए म्यादभित्र दाखिल भएको र पुनरावेदनको हदम्याद गुज्री सकेको रहेछ भने दरखास्त दर्ता गरी फैसलाको नक्कलको शिरमा फलाना मितिमा दरखास्त परेको भनी लेखी अड्डाको र हाकिमको दस्तखत गरी दरखास्त दिनेलाई फिर्ता दिई तल ८ दफा बमोजिम अंश दिने लिनेलाई झिकाई फैसला लगत बमोजिम अंश छुट्याई दिलाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - २

एक जनादेखि बढीलाई अंशबण्डा छुट्याई दिने गरी फैसला भएकोमा ती सबैको दरखास्त नपरी कोही कोहीको मात्र म्यादभित्र दरखास्त पर्न आए दरखास्त दिने म्याद गुज्रिनसकेको जतिलाई फलानाको दरखास्त पर्न आएकोछ दरखास्त दिने म्याद बाटाका म्याद बाहेक पन्ध्र दिनभन्दा बढी म्याद बाँकी भए पन्ध्रै दिनभित्र र त्यसभन्दा घटी म्याद बाँकी रहेकालाई बाँकी म्यादभित्र दरखास्त दिन आए तिमी समेत सबै राखी एकै पटक छुट्याई बण्डा गरी भराई दिइनेछ नआए मलाई नराखी बण्डा छुट्याई असल कमसल पऱ्यो घटी बढी भयो भन्ने कुराको तिम्रो उजूर लाग्ने छैन भन्ने व्यहोराको म्याद पूर्जी टाँसी बण्डा नछुट्टिदै म्यादभित्र हाजिर भई दरखास्त दिन आए दरखास्त लिई म्यादभित्र दरखास्त दिनेहरु जति सबै एकै पटक नआए

नआउनेको भाग समेत छुट्याई पर सारी बण्डा छुट्याई दिनु पर्छ । म्यादभित्र दरखास्त दिन आउनेहरु जतिलाई मात्र फैसला बमोजिम बण्डा छुट्याई दिनु पर्छ । म्यादभित्र हाजिर नहुनेको मलाई नराखी बण्डा छुट्याई दियो असल कमसल पऱ्यो घटी बढी भयो भन्ने कुराको उजूर लाग्न सक्तैन - - - - - - - - - - - - - - ३

अंश लिने चाहिंको दरखास्त नपर्दै अघिबाट अंश दिनु पर्ने चाहिंले फैसला बमोजिम फाँटवारीमा लेखिएको दिनु पर्ने अंश सबै दिन्छु दिलाई फुर्सद गराई पाउँ भनी अंश लिनेले दरखास्त दिनु पर्ने म्यादभित्र दरखास्त दिन आए पुनरावेदन दिने हदम्याद गुज्रिसकेको रहेछ भने अंश लिने चाही फेला नपरे तल ८ दफाको देहाय दफा २ बमोजिम म्याद टाँसी झिकाई ऐन फैसला बमोजिम अंश दिलाई फुर्सद गराई दिनु पर्छ । दिनु पर्ने सबै दिन्छु भनी दरखास्तमा नलेखिए दरखास्त लाग्न सक्तैन । अंश पाउनेको दरखास्त परेको बखत ऐन बमोजिम हुनेछ भनी लेखी फिर्ता दिनु पर्छ - - ४

अंश लिने वा दिनेको दरखास्त परेमा अंश दिने लिने र फाँटवारी बमोजिमको धन माल जिम्मा लिने समेत फैसला बमोजिम गर्नालाई बण्डा छुट्याईदिन सकेसम्म रुजु राख्नु पर्ने देखिए हाजिर भए फेला परेका अंशियारलाई बण्डा छुट्याई दिने काम खतम नभएसम्म तारिखमा राखी बण्डा छुट्याई काम तामेल गर्नु पर्छ । बण्डा छुट्याई दिनु पर्ने सबै छुट्याई दिन नसक्दै अंश लिनेको दरखास्त परेकोमा अंश लिने दिने दुबै थरीले वा अंश लिनेले र अंश दिने चाहिंको दरखास्त परेकोमा अंश लिने चाहिं हाजिर नहुँदै अघिबाट वा अंश लिने हाजिर भइसकेपछि लिने दिने दुबै थरीले तारिख गुजारी ऐनको म्यादभित्र थमाई ल्याउन पनि सकेनन् भने थमाई ल्याउने म्याद नाघेपछि बाँकी बण्डा गर्नु पर्ने जति बण्डा छुट्याई दिइरहनु पर्दैन । डिसमिस गरी व्यहोरा जनाई लगत काटी दिनु पर्छ - - - - - - - - - - - - -- ५

अंश बण्डा छुट्याई लिने दिने दरखास्त पर्न आएमा दरखास्त दर्ता भएको तीन दिनभित्र बण्डा छुट्याई दिनलाई जो गर्नु पर्ने काम शुरु गरी अंश लिने वा दिने फेला नपरेमा तल ८ दफा बमोजिम गरी फेला नपरेका जतिलाई झिकाउनु पर्नेमा हाजिर भएका वा हाजिर हुने म्याद तारिख गुज्रेका मितिले र फेला परेमा दरखास्त परेका मितिले अर्जी लाग्ने म्याद बाहेक यसै महलको ४२ नम्बर बमोजिम तीन महिनासम्ममा भरसक चाँडो काम तामेल गरिसक्नु पर्छ - - - - - - - - - - - - ६

अंश छुट्याई लिने दिने विषयको दरखास्त दर्ता भएमा दर्ता भएका मितिले तीन दिनभित्र आफ्नै इलाकाभित्रको भए माथि १ दफा बमोजिम दरखास्त दिनेलाई साथै लगाई अंश दिने वा लिने फेला परेन वा अंश दिनु पर्नेका एकाघरका जानकार जहान वारिसवालाले देखाई छुट्याई दिन आएन भने अंश दिने जिम्मा लिई राख्नेहरुलाई झिकाउनालाई तल ८ दफा बमोजिमको म्याद पूर्जी टाँसी आउनलाई म्याद पूर्जी समेत लेखी छाप लगाई कर्मचारीलाई खटाई पठाई र अरु अड्डाका इलाकामा पठाउनु पर्नेमा दरखास्त दिनेलाई तारिख तोकी इलाका अड्डामा मुनासिब माफिकको म्याद तोकी लेखी पठाई तामेल गराउन पठाउने र सो अड्डाले पनि म्यादभित्र ऐन बमोजिम जो गर्नु पर्ने गरी तामेल गरी जनाउ पठाईदिने गर्नु पर्दछ -- - - - - - - - - - - - - - - - - - - - - - ७

फैसला बमोजिम बण्डा छुट्याई दिनालाई जाँदा पठाउँदा फैसला बमोजिम गरी अंश दिने वा फाँटवारी बमोजिमको धनमाल जिम्मा लिई राख्ने अंशियारले वा निज फेला नपरे त्यसका एकाघरको जानकार जहानले फाँटवारी बमोजिमको बण्डा गर्नु पर्ने

धनमाल देखाई दाखिल गरी ऐन फैसला बमोजिम छुट्याई दिनु पर्छ । अंश दिने जिम्मा लिई राख्ने फेला परेन त्यसका एकाघरका जानकार जहानहरुले पनि फाँटवारी बमोजिमको सबै देखाई दिएनन् भने अंश दिने लिनेलाई देहाय बमोजिमको म्याद पूर्जी टाँसी म्यादभित्र हाजिर भई देखाई छुट्याई दिन आएन वा पठाएन वा हाजिर भएकाले पनि बण्डा गर्नु पर्ने देखाई नदिई धिङन्याई गरी बस्यो भने यसै महलको ३० नम्बरका मानिस समेत साक्षी राखी बन्द गरिराखेको खुला गरी अड्डैबाट फाँटवारी बमोजिम श्री सम्पत्ति बण्डा गरिदिनु पर्छ - - - - - - - - - ८

अंश छुट्याईदिने वा फाँटमा लेखिएको जिम्मा लिई राख्ने अंशियारहरुलाई झिकाउनु परेमा फेला नपरेकालाई फैसला लगत बमोजिम तिमी फलानासँग अंश छुट्याई दिलाई पाउँ भनी फलाना ठाउँ बस्ने फलानाले फलाना मितिमा दरखास्त दिन आएका र बुझ्दा पनि पुनरावेदनको हदम्याद गुज्रिसकेको देखिएको हुनाले अंश लिई छुट्याई दिनालाई यस अड्डाबाट डोर खटाई पठाउँदा तिमी फेला नपरेको तिम्रो एकाघरसँग रहेको जानकार हकदारहरुले पनि आई फाँटवारीमा लेखिएका बण्डा गरिदिनु पर्ने धनमाल देखाई छुट्याई दिन नआएको हुनाले तिम्रो घर दैलामा म्याद टाँसी दिएकोछ बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र यस अड्डामा आफै हाजिर भई वा आफू हाजिर हुन आउन नसके वारिस पठाई आफ्ना जिम्मामा रहेको बण्डा गर्नु पर्ने फाँटवारी बण्डापत्रमा लेखिए बमोजिमको सबै श्री सम्पत्ति देखाई छुट्याई बण्डा दिन आउनु वा पठाउनु नआए नपठाए तिम्रो घरमा रहेको श्री सम्पत्ति ऐन बमोजिम अड्डैबाट जायजात गरी फाँटवारी बण्डापत्र बमोजिम देखिएसम्मको बण्डा छुट्याई दिई देखिएको जायजातबाट पुगे तिम्रो सम्पत्ति तिम्रा हकदार वा माथवरका जिम्मा लगाई दिने र नपुगे नपुग जति तिम्रो अंशबाट कट्टा गरी भर्ना दिए पनि पुगेन सो नपुग दाखिल पनि भएन भने साबूद दाखिल नगरेमा सजाय गरी नपुगेजति अंश पाउनेले तिमीसँग भराई लिन पाउनेछ । बिशौंद लाग्नेमा तिम्रो अंशबाट पुगेसम्म तिम्रो अंश लिलाम गरी उपर गरिने र जायजातबाट उपर हुन सकेन भने ऐन बमोजिम गरी असूल गरिनेछ पछि तिम्रो उजूर लाग्ने छैन काम तामेल भई नसक्दै म्याद नाघेपछि हाजिर हुन आएपनि तिमी समेत राखी बण्डा छुट्याई दिने काम हुनेछ भन्ने समेत जो चाहिने व्यहोराको अंश दिने जिम्मा लिई राख्नेहरुको नाउँमा म्याद पूर्जी टाँसी दिनु पर्छ - - - - - - - - - - - - - १

अंश छुट्याई दिने चाहिंको दरखास्त नपर्दै अघि सो छुट्याई दिने चाहिंको दरखास्त पर्न आएमा अंश छुट्याई लिने फेला नपरी झिकाउनु पर्ने हुन आए फैसला बण्डापत्र बमोजिम दिनु पर्ने अंश सबै दिन्छु दिलाउन लगाई फूर्सत गराई पाउँ भन्ने फलाना ठाउँ बस्ने फलानाको दरखास्त पर्न आएको र तिमी फेला नपरेको हुनाले म्याद टाँसी दिएकोछ अंश बुझिलिनालाई बाटाका म्याद बाहेक पन्ध्र दिनभन्दा बढ्ता म्याद बाँकी भएमा पन्ध्र दिनभित्र र त्यसभन्दा घटी म्याद बाँकी भएकोमा बाँकी म्यादभित्र हाजिर भई लिन आउनु वा इच्छापत्र लेखी वारिस गरी पठाउनु म्यादभित्र हाजिर नभए नपठाए फैसला बण्डापत्र बमोजिमको धनमाल छुट्याई माथवरको जिम्मा लगाई दिइनेछ पछि तिम्रो उजूर लाग्ने छैन भन्ने समेत जो चाहिने व्यहोराको म्याद टाँसी दिनु पर्छ- - - - - २

अंश दिनु पर्ने मानिस म्याद तारिखमा हाजिर नभै म्याद नाघिसकेपछि फैसला बमोजिम गर्नु पर्ने काम तामेल भै नसक्दै कारणी झगडिया वा त्यसका एकाघरका

जानकार जहान वारिसवाला हाजिर हुन आए पठाए निजहरुलाई समेत राखी ऐन फैसला बमोजिम जो गर्नु पर्ने कारबाही गर्नु पर्छ - - - - - -- - - - - - - - ९

टाँसिएका म्यादभित्र फैसला बमोजिम दिनालाई आफू पनि हाजिर हुन आएन वारिस पनि पठाएन भने म्याद गुज्रेका तीन दिनभित्र फैसला बमोजिम गरिदिनालाई कारबाही गर्नु गराउनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - १०

अंश बण्डा छुट्याई दिनालाई जाँदा फेला परेका वा टाँसिएका म्यादमा हाजिर हुन आएका अंश दिने कारणी झगडियाले वा ती हाजिर हुन नआए फेला नपरे पनि त्यसको हकदार वारिसवालाले देखाई दिंदा वा निजहरु नआएकोले अड्डाबाट खोली हेर्दा दिनु पर्ने तायदात बण्डापत्रमा लेखिए बमोजिमको सबै साबूद देखिए फैसला बण्डापत्र बमोजिमको बण्डा छुट्याई छुट्याईदिए जतिको ऐन फैसला बमोजिम दशौंद बिशौंद जो लिनु पर्ने लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - ११

फैसला बमोजिम गरिदिनालाई अंश दिनेसँग धनमाल लिई अंश छुट्याई दिनालाई धनमाल झिकी बन्द गरिराखेको खुलाई चलन चलाई दिनु पर्नेमा सो गरिदिनेले वा त्यसका एकाघरका जानकार जहानले हाजिर भैकन पनि बण्डा गरिदिनु पर्ने धनमाल देखाई छुट्याई वा झिकी खुला गरी खाली गर्नु पर्ने खाली गरी नदिएकोले वा हाजिर हुन नआएको भै अड्डाबाटै गर्नु पर्ने हुन आएमा निजहरु भए निजहरु समेत राखी र निजहरु हाजिर नरहे यसै महलको ३० नम्बर बमोजिमको मानिस साक्षी राखी खोली तायदाती गरी ऐन फैसला बमोजिम जो गर्नु पर्ने गर्नु पर्छ - - - १२

अंश दिने जिम्मा लिई राख्नेले हाजिर भै बण्डा छुट्याई दिंदा होस् म्यादमा हाजिर भै बण्डा गर्नु पर्ने धनमाल देखाई छुट्याउन नआउँदा धिङन्याई भई बस्दा अड्डाबाट बण्डा छुट्याई दिंदा होस् फाँटवारी बण्डापत्रमा लेखिएका सबै नदेखाई केही मात्र देखायो वा कुनै धनमाल पनि देखाएन देखिएन वा देखाए देखिएको पनि फाँटवारी बण्डापत्र बमोजिमको नभै फरक वा घटबढ परेको देखियो भने सो नपुग जति दाखिल नगरे फाँटवारी बण्डापत्रमा देखिए बमोजिम मिलेसम्मको चल अचलबाट अंश पाउनेलाई चाहिएजति फाँटवारी बण्डापत्रमा लेखिए बमोजिमको विगो कायम गराई अंश दिने जिम्मा लिई राख्नेको अंशबाट भर्ना दिनु पर्छ । सो दिंदा पनि नपुगे नपुग भएको जति विगोको सट्टामा फाँटवारीमा नलेखिएको बढी देखिएको दाखिल नगर्नेचाहिं अंशियारको हक भोगको अरु चल अचल देखिए त्यसबाट समेत नपुगेजति भर्ना गर्नालाई चाहिनेजति फाँटवारी बण्डापत्रमा लेखिएजति चल मालको सोही फाँटमा लेखिए बमोजिमको विगो कायम गरी र फाँटवारी बण्डापत्रमा नलेखिएको अरु चल अचल जतिको पञ्चकृति मोल गरी भर्ना दिनु पर्छ । सो दिंदा पनि पुग्न नआए आफ्ना जिम्मा रहेको दाखिल गर्नु पर्ने सबै दाखिल नगरे पूरा दाखिल नगरे वापत तल १६ दफा बमोजिम जरिबाना गर्नु पर्छ- -१३

अंश बण्डा छुट्याउनालाई अंश दिने हाजिर नरहे फेला नपरेको कारणले अड्डैबाट अंश छुट्याई भराई दिंदा बाँकी रहेको अंश दिने जिम्मा लिई राख्नेका भागको र अंश पाउनेको दरखास्त नपर्दै अंश दिई फूर्सत गराई पाउँ भनी अंश दिने चाहिंको दरखास्त परी छुट्याई दिएको अंश भरी पाउने चाहिंका भागको समेत पाउनेले बुझिलिन नआउँदा रहेको धनमाल अंश पाउनेहरुले वा त्यसका एकाघरका उमेर पुगेका जानकार जहानले पनि बुझिलिएन भने सडी गली जाने माल र दशौंद बिशौंद लाग्नेमा त्यसलाई खामेसम्मको चल अचल ऐन बमोजिमको रीत पुऱ्याई लिलाम गरी दशौंद बिशौंद कट्टा गरी लिई बाँकी रहेको नगद र अरु बाँकी रहेको

चल अचल तायदात गरी लिन आएका बखत बुझाई दिने गरी धनमाल र एक प्रति तायदाती लिन आउनेका हकदार वा माथवर मानिसको जिम्मा लगाई लिन नआएकोले फलानाका जिम्मा लगाई दिएकोछु तायदाती बमोजिम बुझिलिनु पछि उजूर गर्न पाउने छैनौ भनी बुझी लिनु पर्नेको घरमा म्याद पूर्जी टाँसी दिनु पर्छ- - १४

अड्डाबाट ऐन बमोजिम गरी बण्डा छुट्याई दिएको बुझी लिनु पर्छ । चित्त बुझेन भनी छुट्याई दिएको बुझी नलिई धिङन्याई गरिरहनु हुँदैन । चित्त नबुझे यति कुरामा चित्त बुझेन उजूर गरी इन्साफ माग्नेछु भनी चित्त नबुझेको जति कुरा भरपाईमा लेखी अड्डाबाट छुट्याई दिएको जति बुझी लिई चित्त नबुझेको जति कुरामा ऐनका म्यादभित्र उजूर गरी इन्साफ गराई माग्नु पर्छ । बुझी नलिनेलाई बुझी नलिए जति विगोको चल मालको सयकडा पाँच अचलको सयकडा एक जरिबाना गरी बुझाई दिनु पर्छ । जरिबाना गर्दा पनि बुझी नलिए बुझि नलिएको जति लिन आएका बखत बुझाई दिने गरी माथि १४ दफा बमोजिम जिम्मा लगाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १५

अंश बण्डा गर्नु पर्ने चल अचल आफ्ना जिम्मा लिई राख्नेले आफूले लेखिदिएको फाँटवारी बमोजिमको दिनु पर्ने चल अचल दैवी परी प्रमाण पुऱ्याएको अवस्थामा बाहेक सबै देखाई छुट्याई नदिए नदेखाएको र देखाएसम्मको चल अचलबाट पनि अंश पाउनेलाई नपुगी बाँकी रहन आए हाजिर फेला परेकालाई दाखिल गर्न ल्याउ भनी थुन्नु पर्छ । पन्ध्र दिनसम्म थुन्दा पनि दाखिल नगरे बेइमानी गरेको ठहर्छ । हाजिर रहेको वा हाजिर नरहेकालाई समेत आफूले लेखिदिएको फाँटवारी बमोजिमको सबै माल दाखिल नगरे वापत नपुग जति विगोको सयकडा दश जरिबाना गरी सो जरिबाना वापत कैद गरिदिनु पर्छ - - - - - - - - - - - - - १६

अंश बण्डा छुट्याई दिंदा अंश पाउनेलाई नपुग हुन आएको चल अचल लुकाई दवाई राखेको जति बण्डा छुट्याई पाएका मितिले सो बण्डा पाउने वा निज मरेमा निजका हकदारले दुई वर्षभित्र खोजी पत्ता लगाई उजूर गऱ्यो भने बुझी लुकाई दवाई राखेको ठहऱ्यो र भर्ना गर्न बाँकी नै रहेछ भने फाँटवारीमा लेखिएको दाखिल नगरी लुकाई दवाई राखे वापत दवाउनेलाई दवाएका विगोको सयकडा पाँच र दवाई लुकाउन ल्याएको भनी जानी जानी लुकाई राख्नेलाई सयकडा पाँचका दरले जरिबाना गरी दवाई राखेको ठहरे जति पत्ता लगाई ल्याउनेलाई दशौंद लिई भराई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -१७

*वादीले अंश पाउने ठहरी अन्तिम फैसला भएको मुद्दामा अन्य प्रतिवादी अंशियारहरुले पनि आफ्नो अंश छुट्याई लिन दरखास्त दिएमा कानून बमोजिम लाग्ने कोर्ट फी लिई फैसलाबाट ठहरे बमोजिमको सम्पत्तिबाट अंश छुट्याई दिलाई दिनु पर्छ - - - १८

४७ नं. ॥ ॥ फैसला बमोजिम गराई माग्नेले वा गरिदिनेले फैसला लगत बमोजिम गराई माग्न वा गरी दिनका निमित्त कारबाही गर्न गराउनालाई वारिस राखे ऐनले वारिस दिन हुने मानिसलाई वारिस दिन पाउँछ । त्यस्तो वारिस दिंदा धरौट लाग्दैन । भराई दिलाई छुट्याई दिनु पर्ने आफू हाजिर भई लिन नआई इच्छापत्र दिई फलानालाई पठाइदिएकोछु त्यस हस्ते दिनु भनी ऐन बमोजिम सहीछाप गरी लेखी पठाइदिनु पर्छ । सो इच्छापत्र लिई आउनेबाट दशौंद बिशौंद समेत जो लिनु पर्ने लिई

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

इच्छापत्र खिची भरपाई गराई दिनु पर्ने जति जिम्मा लगाई दिनु पर्छ । चलन चलाई दिनु पर्नेमा इच्छापत्र नभएपनि वारिसद्वारा चलन चलाई दिन लिन हुन्छ । लेखिए बमोजिम इच्छापत्र लिई आएकालाई दिएकोमा पछि उजूर लाग्न सक्तैन । वारिस पठाउँदा मेरो सट्टामा ऐनले वारिस दिन हुने फलानालाई अख्तियार गरी पठाएकोछु वारिसले कारबाही गरेकोमा मेरो मञ्जुर छ फैसला बमोजिम गराई दिनु पर्ने बखत म आफै हाजिर भै लिन आउँला वा इच्छापत्र गरी लिन पठाउँला वा भराई देखाई छुट्याई दिनु पर्ने पनि वारिसद्वारा देखाई छुट्याई बुझाई दिउँला सो फैसला गराई माग्दा दिंदा दशौंद बिशौंद सजाय समेत जो लागेको मै बुझाउनेछु इच्छपत्रवालालाई दिएकोमा उजूर गर्ने छैन भन्ने व्यहोराको वारिस दिने △चाहिंको अदालती बन्दोबस्तको महलको ६५ नम्बरको देहाय दफा ३ को रीत पुऱ्याई अख्तियारनामा र सो वारिस हुनेको फलानाको वारिस म भएँ तारिखमा रही जो गर्नु पर्ने काम कारबाही गरुँला भन्ने व्यहोराको वारिसनामा दाखिल गरेकै दिन △अदालती बन्दोबस्तको महलको ६५ नम्बरको देहायको दफा ३ को रीत पुऱ्याई सकारनामा लेखाई लिई झगडियाको गराउनु पर्ने कागज वारिसको गराई ऐन फैसला बमोजिम जो गर्नु पर्ने कारबाही गरी तामेल गर्नु गराउनु पर्छ ।

λ४८ नं. ॥ ॥ फैसला बमोजिम अड्डाबाट गर्नु पर्ने काम गर्न गराउनलाई दरखास्त दिई तारिखमा बसेको मानिसले तारिख गुजारे पनि कारबाही डिसमिस गर्न हुँदैन । फैसला बमोजिम गराई माग्नेले अवस्थानुसार अदालती बन्दोबस्तको ५९, ६२ वा १७५ नम्बर बमोजिम सकार गर्न वा थमाउन पाउँछन् । सो बमोजिम थमाउने वा सकार गर्ने म्याद नाघे पछि पनि सो म्याद नाघेको मितिले छ महिनाभित्र रीतपूर्वकको दरखास्त दिई कारबाही चलाई माग्न आएमा कानून बमोजिमको दस्तुर र त्यसको सयकडा दश जरिबाना असूल गरी कारबाही गर्नु पर्छ । सो म्यादभित्र पनि दरखास्त दिन नआएमा त्यस्तो व्यक्तिको शुरु दरखास्त तामेलीमा राखिनेछ ।

४९ नं. ॥ ॥ अड्डाबाट भाखा गराई दिएको, कागजपत्र दिलाई दिएका वा असामी बण्डा गरिदिएकोमा दशौंद बिशौंद लाग्दैन । यसै महलको ४८ नम्बरको अवस्थामा बाहेक विगो नभराई दशौंद बिशौंदमा पक्राउ हुन सक्तैन । भराई दिइसकेपछि भराइदिएजतिकोसम्म भराई पाउनेसँग दशौंद र जरिबाना नलागेकोमा जरिबाना नलागे जतिको भराई दिने चाहिंबाट बिशौंद लिई भराई दिनु पर्छ ।

५० नं. ॥ ॥ कसैले नेपाल सरकारको चल अचल सम्पत्ति चोरी ढाँटी दबाई छपाई खाए खुवाएको जाहेर गरी साबित गराई दिएमा त्यस्तो साबित गराई दिने जाहेरवालालाई अन्यथा व्यवस्था भएकोमा बाहेक जग्गा वा तालुकदारी नपाउने भए सालबसाली लगतमै असूल हुने बाहेक अरु असूल भएको विगोको सयकडा पच्चीस र लेखिए बाहेक अरुमा सयकडा दशका हिसाबले कमिशन दिनु पर्छ । जग्गा वा तालुकी पाउनेमा भए कमिशन दिनु पर्दैन ।

λ५१ नं. ॥ ॥ फैसलाले फिर्ता पाउने भएको दण्ड, धरौटी, रोक्का रहेको सर्वस्व जायजात, कुनै सम्पत्ति वा सो लिलाम बिक्री भैरहेको नगद फिर्ता लिन फैसला

△ सातौं संशोधनद्वारा थप ।

λ नवौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

अन्तिम भएको थाहा भएको एक वर्षभित्र त्यस्तो फिर्ता पाउन सक्ने व्यक्ति आएन भने फिर्ता पाउँदैन । धरौटी रहेको रकम भए त्यस्तो रकम सरकारी आम्दानी बाँध्नु पर्छ ।

५२ नं. ॥ ॥ फैसला बमोजिमको भरी पाउने विगो दिलाई भराई पाउँ भन्ने दरखास्त परेमा घरसारमा दिएको छु भन्ने जिकिर पुग्न सक्तैन । अड्डाबाट ऐन फैसला बमोजिम दिलाई भराई दिनु पर्छ ।

λ५३. नं. ॥ ॥ सरकारी विगो जरिबाना समेत कुनै सरकारी रकम बापत कैद ठेक्नु पर्दा एक दिनको पच्चीस रुपैयाँको दरले कैद ठेक्नु पर्छ ।

☯५३क नं. ॥ ॥ यसै महलको ५३ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि कानूनले अवस्था हेरी घटी वा बढी सजाय गर्ने तजविजी अधिकार दिएकोमा फैसलाबाट जरिबानाको सजाय हुने भएमा सो जरिबाना नतिरेमा सो बापत कति कैद बस्नु पर्ने हो भन्ने कुरा पनि सोही फैसलामा तोक्नु पर्छ । तर यस्तो कैद तोक्दा यसै महलको ५३ नम्बर बमोजिम रुपैयाँलाई कैदमा परिणत गर्दा हुने अवधि वा यसै महलको ३८ नम्बर बमोजिम हुन सक्ने कैद भन्दा बढी हुने गरी तोक्न हुँदैन ।

*५३ख. नं. ॥ ॥ फैसला बमोजिम कैदको लगत कसिएको व्यक्तिलाई पक्राउ गरी दाखिल गर्न ल्याउँदा लाग्ने सवारी खर्च तथा प्रचलित कानून बमोजिमको सिधा खर्च समेत निजलाई दिनु पर्नेछ ।

५४ नं. ॥ ॥ ऐनले जायजातबाट उपर नभएको बाँकी विगोमा कैद गराउन पाउनेमा कैद गराई सकेपछि बाँकी नपुग रुपैयाँ जम्मै नतिरी धनीको मञ्जुरी बेगर कैद भुक्तान नहुँदै बीचमा छुट्न सक्तैन । बाँकी नपुग जम्मै बुझाउँछु भने भुक्तान गरेकाजति कैदको रुपैयाँ ऐन बमोजिम मिनाहा दिई बाँकी रुपैयाँ धनीलाई ✂ ... ... भराई दिनु पर्छ । कैद गराई सकेपछि कैद गराए तापनि अब भराई माग्दिन छाडिदिनु भनी धनीले भन्यो भने धनीको मञ्जुरीको कागज गराई लिई कैद भएकालाई छाडिदिनु पर्छ । पछि पक्रन र कैद गराउन पाउँदैन । बाँकी सिधा खर्च फिर्ता हुन सक्तैन ।

⚐५५ नं. ॥ ॥ ... ... ...

⚐५६ नं. ॥ ॥ ... ... ...

⚐५७ नं. ॥ ॥ ... ... ...

⚐५८ नं. ॥ ॥ ... ... ...

⚐५९ नं. ॥ ॥ ... ... ...

■६० नं. ॥ ॥ यस महल बमोजिम गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधिको रोहवरमा वा त्यस्तो सदस्य वा प्रतिनिधिको सहीछाप गराई गर्नु गराउनु पर्ने कुनै काम कारबाही गर्ने गराउने सिलसिलामा त्यस्तो सदस्य वा प्रतिनिधिलाई उपस्थित गराईदिन सम्बन्धित गाउँपालिका वा नगरपालिकामा लिखित सूचना दिंदा पनि सो काम कारबाहीको लागि त्यस्तो सदस्य वा प्रतिनिधि उपस्थित नभएमा वा

---

☯ नवौं संशोधनद्वारा थप ।

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

✂ नवौं संशोधनद्वारा झिकिएको ।

⚐ दण्ड सजाय सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५५ द्वारा खारेज ।

■ अदालती कारबाही सम्बन्धी केही नेपाली ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

गाउँपालिका वा नगरपालिका भङ्ग भई वा अन्य कुनै कारणले कायम नरहेको अवस्थामा पनि सो काम कारबाही गर्न गराउन सकिनेछ र अरु कुराको रीत पुगेको भए त्यस्तो सदस्य वा प्रतिनिधिको उपस्थिति वा सहीछाप नभएको भन्ने आधारमा मात्र सो काम कारबाही वदर हुने छैन ।

△६१ नं. ॥ ॥ फैसला कार्यान्वयनको सिलसिलामा तहसिलदार कर्मचारीले गरेको काम कारबाहीमा चित्त नबुझ्ने सरोकारवाला व्यक्तिले सोही अड्डाका हाकिम छेउ पन्ध्र दिनभित्र उजूर गर्न सक्नेछ । निजले गरेको निर्णयमा चित्त नबुझे अदालती बन्दोबस्तको महलको १७ नम्बर बमोजिम पुनरावेदन सुन्ने अड्डामा निवेदन दिन सक्नेछ । त्यस्तो उजूर परेमा उजूर सुन्नेले उजूर परेको मितिले दुई महिनाभित्र कारबाही किनारा गरिदिनु पर्नेछ ।

△ सातौं संशोधनद्वारा थप ।

# भाग ३

## महल १

### कागज जाँचको

१ नं. ॥ ॥ दुनियाँहरुसँगको र अड्डा अड्डाको गैह्र कागजपत्रमा बन्द गाँसिएकोमा सो कागजको पछाडि प्रत्येक बन्दको जोर्नी जोर्नीमा र पाना राखेकोमा प्रत्येक पानाको शिर पुछारमा अड्डाको भए जुन अड्डाको हो त्यसै अड्डाको हाकिमको समेत वा छाप नभएका अड्डाको भए हाकिमको मात्र छाप लगाउनु वा दस्तखत गर्नु पर्छ । फैसला साधक प्रतिवेदन तोक जाँच्नु निकासा दिनु पर्दा सो कागजको बन्दको जोर्नी जोर्नी वा प्रत्येक पानाको शिर पुछारमा जाँच्ने निकासा दिने अड्डाले पनि अड्डाको छाप र हाकिमको छाप लगाउनु पर्छ वा दस्तखत गर्नु गराउनु पर्छ । दुनियाँदारको अड्डामा परे भएको र घरायसको कागजपत्रको बन्दको जोर्नी वा पानामा भने सो कागजमा सहीछाप गर्ने मुख्य कारणीको र अड्डामा गरे भएकोमा सोही अड्डाको र हाकिमको समेत छाप लगाउनु वा दस्तखत गर्नु पर्छ । स्याहा बहीखाता किताबहरुमा भने एक पानाभन्दा बढ्ता पानामा एकै कलमको हिसाब वा व्यहोरा लेखिन गएमा जुन जुन पानामा सो लेखिन गएको छ उसै उसै पानामा उसै कलमका आखिरको पंक्तिको पुछारमा अरु अङ्क अक्षर लेख्न नहुने गरी सो कलममा सहीछाप गर्नेकै र अड्डाको भए पानै पिच्छे सोही अड्डाका हाकिम र तहरीरको समेत छाप लगाउन वा दस्तखत गर्नु गराउनु पर्छ । घरसारको कागजमा लेखिए बमोजिम रीत नपुगेको भए सो कागज गर्ने गराउने मुख्य कारणीलाई जनही बीस रुपैयाँसम्म जरिबाना गरी सो कागजबाट नालिस सुनी इन्साफ गरिदिनु पर्छ ।

२ नं. ॥ ॥ मिनाहा मोजरा वा लिने दिने कुराको निकासा लिंदादिंदा दर देखिनेमा दर, जम्मा देखिनेमा जम्मा र दर जम्मा दुवै देखिनेमा दुवै खोली अङ्कलाई अक्षरले समेत बोलाई लेख्नु लेखाउनु पर्छ । जम्मामा अङ्क अक्षर नलेखिए लिए दिएको निकासा सदर हुँदैन । अर्को निकासा गराई लिनु दिनु पर्छ ।

३ नं. ॥ ॥ अड्डाबाट लेखाई लिने दिने गैह्र कागजमा नाउँ, थर र जिल्ला, इलाका, प्रगन्ना, मौजा, गाउँ, शहर टोल स्पष्ट खुलेको वतन समेत लेखाई लिनु दिनु पर्छ । अड्डाबाट तमसुक, पट्टा, कबुलियत र धन जमानीपत्र गराउनु पर्दा भने तीन पुस्ते पनि खुलाउनु पर्छ ।

४ नं. ॥ ॥ दुनियाँदारको र अड्डा अड्डाको गैह्र कागजपत्रमा भरिसक्य नबिराई लेख्नु लेखाउनु पर्छ । बिरिन गै सच्याउन परेमा अङ्क अक्षर खुर्कन हुँदैन । ▶प्रमाणीकरण हुने कागज बाहेक अरुमा बिरिएजति पढिने गरी मसिनो डोरोले केरी थप्न परेमा निस्सा राखी त्यसको माथि जे लेख्नु पर्ने लेखी सो केरमेटमा र थपेमा समेत अरु अङ्क अक्षर थप्न नहुने गरी दायाँ बायाँमा सो कागजमा सही गर्ने मुख्य कारणीको र अड्डामा गरे भएकोमा सोही अड्डाका हाकिमको समेत र अड्डाको कागज भए हाकिमको मात्र र स्याहा बहीखाता किताबमा भए जुन कलममा जसको सहीछाप पर्ने हो उसैको गर्नु गराउनु पर्छ । थप्ने ठाउँ भएन वा थप्दा भ्रान्ति हुने भयो वा धेरै ठाउँमा केर्नु मेट्नु थप्नु पर्ने भयो भने बन्द फेरी लेख्नु पर्छ । लेखिए बमोजिम रीत

---

▶ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

नपुगेको केरे मेटे थपिएको र अङ्क अक्षर खुर्केको जति सदर हुँदैन । ▶प्रमाणीकरण हुने कागज लेख्दा भने केर्नु मेट्नु थप्नु खुर्कनु समेत हुँदैन ।

५ नं. ॥ ॥ लेनदेन कारोबार लगायत घरायसमा भएको र अड्डाखानामा भए गरेको समेत कागजहरुमा सहीछाप गर्नु पर्ने कारणीको र साक्षी समेत गैह्रको सहीछाप गर्दा गराउँदा लेख्न जान्नेले आफ्ना हस्ताक्षरले सही आफ्नो नाउँ थर वतन दर्जा भए दर्जा समेत प्रष्ट बुझ्ने पढ्न सक्ने गरी पूरा लेखी लेखाई र अक्षर नजान्नेको र लेख्न जान्नेको पनि यसै महलको ८ नम्बरले ल्याप्चे सहीछाप गर्नु गराउनु पर्ने कागजमा ल्याप्चे सहीछाप गर्दा गराउँदा यसै महलको ६ र ७ नम्बर बमोजिम गर्नु गराउनु पर्छ । अड्डाखानामा भए गरेको कागजमा भए हस्ताक्षरको वा ल्याप्चे सही नगरी आफ्नो पूरा नाम किटेको छाप मात्र लगाए पनि हुन्छ । रैतीसित तिरो बुझ्न नेपाल सरकारबाट मुकरर भएको व्यक्तिले तिरो बुझी दिने रसिदमा आफ्नो नामको छाप मात्र लगाए पनि हुन्छ । माथि लेखिए बमोजिम रीत नपुगेको कागजबाट देहायमा लेखिए बाहेक नालिस लाग्न सक्तैन - - - - - - - - - - - - - - - - -

माथि लेखिए बमोजिम सहीछाप गर्दा गराउँदा नाउँ, थर, वतन र दर्जा भए दर्जा लेख्नु पर्नेमा दर्जा, थर, वतन मध्ये कुनै वा सबै कुरा छुटाएको भए सो छुटाई सहीछाप गर्नेलाई बीस रुपैयाँसम्म जरिबाना गरी सो कागजबाट नालिस सुनी इन्साफ गरिदिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -१

सहीछापै नपरेको भएपनि सहीछाप गर्नु पर्ने मुख्य कारणीले आफ्ना हस्ताक्षरले लेखेको लिखत भए जुनसुकै मितिको भएपनि सो कागजबाट नालिस सुनी इन्साफ गरिदिनु पर्छ-२

६ नं. ॥ ॥ ल्याप्चे सहीछाप गर्दा गराउँदा दाहिने हातको बूढी औंला नभए वा शंख चक्रको रेखा प्रष्ट नदेखिए बायाँ हातको बूढी औंलाको, दुवै हातको बूढी औंला नभए वा रेखा प्रष्ट नदेखिए दायाँ बायाँका अरु जुन औंलाको रेखा प्रष्ट देखिएको छ त्यस औंलाको र दुवै हातका बूढी औंलाको सहीछाप गर्नु गराउनु पर्नेमा एक हातका बूढी औंला नभए वा रेखा प्रष्ट नदेखिए रेखा प्रष्ट देखिएका बूढी औंलाको र बूढी औंला नभएका चाहिं हातको रेखा प्रष्ट देखिएका अरु औंलाको, दुवै हातका बूढी औंला नभए वा रेखा प्रष्ट नदेखिए रेखा प्रष्ट देखिएका दुवै हातका अरु एक एक औंलाको, एक हातमा कुनै औंला नभए वा रेखा प्रष्ट नदेखिने भए एकै हातको भएपनि दुई औंलाको सहीछाप गराई यस कारणले यस हातको यो औंलाको सहीछाप भएको हो भनी व्यहोरा जनाई राख्ने गर्नु पर्छ ।

७ नं. ॥ ॥ दुवै हातका कुनै औंला नभए वा शंख चक्रको रेखा प्रष्ट नदेखिएमा त्यसका एकाघरका जहानमा मुख्यको र त्यस्ता नभए अपुताली खाने हकदारको र त्यस्ता पनि नभए हेरविचार गरी आइरहेका संरक्षकको मेरो रोहवरमा यसले भने मञ्जुर गरे बमोजिम लेखिएको ठीक छ यसो भै कुनै औंला नभए वा रेखा प्रष्ट नदेखिंदा सहीछाप नपरेको हो भन्ने शिरमा कैफियत लेखी सहीछाप गर्ने गराउने गर्नु पर्छ । एकाघरका जहान वा अपुताली खाने हकदार वा संरक्षक रोहवरमा नभएका बखत अड्डाबाट कागज गराउनु परेमा कागज भएका बखत रोहवरमा भएका भलाद्मीको र अड्डाका हाकिमको समेत लेखिए बमोजिम कैफियत लेखी सहीछाप गर्ने

▶ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

गराउने गर्नु पर्छ । लेखिए बमोजिमको रीत पुगी कागज भएको रहेछ भने कारणीको सहीछाप नपरेको भएपनि सहीछाप परेको सरह सम्झी ऐन बमोजिम हुनेछ ।

८ नं. ॥ ॥ देहाय बमोजिमको कागज गर्दा गराउँदा यसै महलको ५ र ६ नम्बर बमोजिम दुवै हातका बूढी औंलाको ल्याप्चे र लेख्न जान्नेको हस्ताक्षरको समेत सहीछाप समेत गर्ने गराउने गर्नु पर्छ । लेख्न जान्नेले रीतपूर्वक हस्ताक्षरको सहीछाप मात्र गरी ल्याप्चे सहीछाप नगरेको वा गरेकोमा प्रष्ट नदेखिने गरी गरेको वा लेख्न जान्नेले हस्ताक्षरको सहीछाप नगरी ल्याप्चे सहीछाप मात्र गरेकोमा मानिस कागज समेत विचार गरी बीस रुपैयाँसम्म जरिबाना गरी सो कागजबाट नालिस सुनी इन्साफ गरी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

हक दावी छोडी लिए दिएको दान बकसपत्र, बण्डापत्र, सट्टापट्टा, धर्मपुत्र, राजीनामा इत्यादि कागजपत्र - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

हक नछोडी भोग, दृष्टिबन्धक लेखी दिएको र कर्जा लेनदेन गरेको कागजपत्र - - - १

कर्जा दिएको बुझी तमसुक कागजको पीठमा दरपीठ नगरी छुट्टै गरिदिएको भरपाई - १

नासो धरौट लिए दिएको कागज र सो फिर्ता बुझी लिएको भरपाई - - - - - - - १

भाखापत्र, जमानीपत्र, कबुलियत - - - - - - - - - - - - - - - - - - - - - - १

अख्तियारनामा वा इच्छापत्र - - - - - - - - - - - - - - - - - - - - - - - १

[τ]८क.नं. ॥ ॥ कानून बमोजिम संगठित संस्था वा नेपाल [⌂]......... स्थित विदेशी राजदूतावास तर्फबाट अधिकार प्राप्त व्यक्तिले लिखत गर्दा तीनपुस्ते र ल्याप्चे सहीछाप गर्नु आवश्यक हुने छैन ।

९ नं. ॥ ॥ यसै महलको ८ नम्बरमा लेखिएका कागजहरुमा पुछारमा मिति टुङ्गिएको ठाउँमा पनि सोही नम्बरमा लेखिए बमोजिम कारणीको सहीछाप गर्नु गराउनु पर्छ । सो नगराएको भए बीस रुपैयाँसम्म जरिबाना गरी सो कागजबाट नालिस सुनी इन्साफ हुन सक्तछ ।

१० नं. ॥ ॥ सरकारी कर्मचारीले सरकारी काममा कानूनले दस्तखत गर्नु पर्ने कागजमा दस्तखत गर्दा यो दर्जाको यो मानिसको दस्तखत रहेछ भनी अक्षर जान्ने जोसुकैले पनि प्रष्ट बुझ्ने गरी देवनागरी अक्षरबाट सो कागजको शिर वा पुछार कुनै एक ठाउँमा पूरा नामको दस्तखत गरी सो बाहेक अरु ठाउँमा छोटकरी नामको दस्तखत गरेपनि हुन्छ ।

११ नं. ॥ ॥ अड्डामा र घरायसमा हुने सहीछाप गर्नु पर्ने जुनसुकै कागज लेख्दा र सहीछाप गर्दा गराउँदा नउड्ने पक्का मसीबाट गर्नु गराउनु पर्छ ।

१२ नं. ॥ ॥ अन्यथा व्यवस्था भएकोमा बाहेक देहायमा लेखिएका कागजपत्रमा देहायमा लेखिए बमोजिम रीत पुऱ्याउनु पर्छ - - - - - - - - - - - - -

अड्डाको सोधनीको बाहेक अरु गैह्र लेखोट पुर्जीमा कामकाज फाँट बाँडिएका अड्डाको भए सो फाँटमा ठेकिएका मुख्य कारिन्दा र हाकिम, असिष्टेण्ट वा

---

[τ] पाँचौं संशोधनद्वारा थप ।

[⌂] गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

तहरीरमा एकजनाको र ठेकिएका मुख्य कारिन्दा नभएका बखतमा भए हाकिम, असिष्टेण्ट वा तहरीरको मात्र किनारामा छाप र अड्डाको छाप लाउनुपर्छ । फाँट नबाँडी गोश्वारा काम चली आएको अड्डाकोमा हाकिम, असिष्टेण्ट वा तहरीरको पुछरे छाप र अड्डाको छाप लगाउनु पर्छ - - - - - - - - - - - - - - - - - - १

सोधनीसम्मको लेखोट पूर्जीमा भने हाकिम असिष्टेण्ट वा तहरीरमा एकजनाको पुछरे छाप र अड्डाको छाप लगाउनु पर्छ - - - - - - - - - - - - - - - - - -२

नगदी जिन्सीका रसिद भरपाईमा तहवीलदार भएका अड्डामा भए तहवीलदारको र हाकिम र असिष्टेण्ट वा तहरीरको समेत र तहवीलदार नभएका अड्डामा भए हाकिम र असिष्टेण्ट वा तहरीरको मात्र पुछरे छाप लगाई अड्डाको छाप लगाउनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -३

अड्डा अड्डाबाट वा झगडिया रकमीले बुझाउन ल्याएको कागजको रसिद भरपाईमा बुझ्ने कारिन्दाको पुछरे सही र असिष्टेण्ट वा तहरीरको सहीछाप र अड्डाको छाप लगाउनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - -४

अड्डा अड्डामा रहेको कागजपत्रको नक्कल दिनु परेमा सक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने लेखी रुजु गर्ने कारिन्दाको निशाना र हाकिम, असिष्टेण्ट वा तहरीरको सहीछाप र अड्डाको छाप लगाउनु पर्छ - - - - - - - - - - - - - - -५

गैह्र कागजपत्रहरुको अड्डामा नक्कल राख्नु पर्दा सो नक्कलमा सक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने लेखी हाकिम, असिष्टेण्ट वा तहरीरको र सो कागज नक्कल सार्ने कारिन्दाले सहीछाप गरी राख्नु पर्छ - - - - - - - - - - - - - - - - - - ६

असिष्टेण्ट तहरीरको सहीछाप गर्नु पर्नेमा असिष्टेण्ट वा तहरीरै नभएका अड्डामा भए हाकिमदेखि मुनिका मुख्य कारिन्दाको सहीछाप गर्नु पर्छ - - - - - - - - - - ७

१३ नं. ॥ ॥ एउटाका नाउँमा आदेश पूर्जी गरी दिंदा सो आदेश पूर्जीबाट अरुलाई समेत आदेश पूर्जी गरिदिनु पर्ने भए अरु जस जसलाई जुन व्यहोराको गरिदिनु पर्ने हो सो समेत गरिदिनु पर्छ । सो बमोजिम नगरेकाले सरकारी नोक्सानी वा काम हर्जा भएको भए सो नगर्ने व्यक्तिले सो कुराको जवाफदेही गर्नु पर्छ ।

१४ नं. ॥ ॥ कानूनले साक्षी राखी गर्नु पर्ने कागजपत्र र अड्डैबाट गराई लिएको अचल सम्बन्धी लिखत बाहेक अड्डाको र अड्डामा गरे भएका गैह्र कागजातमा र घरायसमा चिट्ठी, पूर्जी, रसिद, भरपाई, हुण्डी, पट्टा, बही, खाता, महाजनी कारोवारको दोहरी लेख्दा लेखाउँदा र तमसुकमा दरपीठ गर्दा साक्षी नराखी गर्न गराउन लेख्न लेखाउन पनि हुन्छ । लेखिए बाहेक अरु कागजपत्रहरु र कानूनले साक्षी राखी गर्नु पर्ने कागजहरु गर्दा गराउँदा र अड्डैबाट गराई लिने अचल सम्पत्ति सम्बन्धी लिखत गराई लिंदा सो कागजमा साक्षीको नाउँ लेखी लेखाई साक्षीको समेत सहीछाप गर्नु गराउनु पर्छ । सो बमोजिम साक्षी राख्नु पर्ने कागजमा साक्षी नराखेकोमा वा राखेको साक्षीको सहीछाप नगराएको भएपनि यसै महलका ५ नम्बरले नालिस उजूर लाग्न सक्ने कागज रहेछ भने साक्षी नराखे बापत वा राखेका साक्षीको सहीछाप नगराए बापतको सो कागज गर्ने गराउने मुख्य कारणीलाई जनही बीस रुपैयाँसम्म जरिबाना गरी सो कागजबाट नालिस सुनी इन्साफ गरिदिनु पर्छ ।

१५ नं. ॥ ॥ सरकारिया गैह्व कागजपत्रहरु हाल साविक हुँदा तायदाती खडा गरी हालवालालाई बुझाउनु पर्छ । सो बमोजिम नबुझाई हाकिम कारिन्दा लगायत कसैले पनि घरमा लगी राख्न हुँदैन ।

१६ नं. ॥ ॥ घरायसमा जुनसुकै कागज गर्दा गराउँदा पनि सो कागजमा व्यहोरा लेखिसकेपछि मिति लेख्नु भन्दा अगाडि कागज जुन ठाउँमा भएको हो सो ठाउँ र सो ठाउँको जिल्ला प्रगन्ना मौजा गाउँ, शहर, टोल समेत लेख्नु पर्छ । नलेखेको कागज गराउनेलाई बीस रुपैयाँसम्म जरिबाना गरी सो कागज प्रमाणमा ल्याउनु पर्छ ।

१७ नं. ॥ ॥ अदालती बन्दोबस्तको महलको २११ नम्बर बमोजिम नक्कल पाउने बाहेक अरु अड्डामा रहेको सरकारी कागजहरुको नक्कल माग्न आएमा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - -

सरोकार परेका कागजको जोसुकैले पनि नक्कल लिन पाउँछ - - - - - - - - - - १

यति दस्तुर लिई यस हिसाबसँग नक्कल दिनु भनी किटी कानून भैरहेकोमा सोही बमोजिम गरी र लेखिए बाहेक अरु नक्कल पाउन सक्ने कागजातको नक्कल माग्न आएमा यो कागजको नक्कल यस कारणले मलाई सरोकार परेकोछ आफ्नै तर्फबाट सारी लान वा अड्डैबाट सारी पाउँ भनी कागज भएका अड्डामा आई दरखास्त दिनु पर्छ । त्यस्तो दरखास्त परेका मितिले तीन दिनभित्र तल ३ दफा बमोजिम गरी नक्कल सार्नु दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

नक्कल सार्न दिंदा नक्कल सार्नलाई दिएका कागजहरुमा थपघट केरमेट समेत केही कैफियत गर्न नपाउने गरी अड्डाभित्र राखी नक्कल सार्न दिई नक्कल सारी सकेपछि रुजु गरी कानून बमोजिमको रीत पुऱ्याई यसले आफ्नै तर्फबाट वा अड्डाबाट सराई लगेको भन्ने समेत लेख्नु पर्ने कैफियत र नक्कल दिएको मिति समेत जनाई तल ४ दफा बमोजिम लाग्ने दस्तुर लिई सात दिनसम्ममा नक्कल दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

नक्कल दिंदा प्रत्येक कागज वा कागजको अंशको एक प्रति नक्कलको एक रुपैयाँको दरले दस्तुर लिई नक्कल सार्न दिनु पर्छ । अड्डाबाट सारिदिएमा सो दस्तुरको दोब्बर दस्तुर लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - ४

नक्कल दिने कागजमा सक्कल वा नक्कल बमोजिम नक्कल दुरुस्त छ भन्ने लेखी अड्डाको र हाकिम असिष्टेण्ट वा तहरीरको छाप लगाई दिनु पर्छ - - - - - - - ५

यो नम्बर बमोजिम नक्कल दिंदा कुनै सरकारी अड्डामा रहेको कुनै सरकारी कामको सम्बन्धको प्रकाशित नभएको कुनै गोप्य लिखतका हकमा सम्बन्धित विभागीय प्रमुखले इजाजत दिएमा बाहेक त्यस्तो लिखतको नक्कल दिन कर लाग्दैन- ६

△विभागीय प्रमुख वा अड्डा प्रमुखले सरकारी अड्डामा रहेको सरकारी कामकाज सम्बन्धी अप्रकाशित गोप्य लिखतको नक्कल दिन वा अड्डामा पेश गर्न कर लाग्ने छैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ७

---

△ सातौं संशोधनद्वारा थप ।

# महल २

## जमानी गर्नेको

१ नं. ॥ ॥ जमानी लिंदा जायजातबाट उठ्ने ठहरेका माथवर मानिसलाई जमानी लिनु पर्छ । सो जमानी लेखी लिंदा दिंदा फलानाको फलाना कलमको यो यति अङ्कमा म जमानी भएँ भनी विषय अङ्क समेत स्पष्ट खोली लेखाई लिनु पर्छ । एक कलममा एकजना भन्दा बढी मानिस जमानी लिंदा दिंदा दामासाहीले बुझाउने गरी जमानी लिएकोमा दामासाहीले हुने अङ्क र घटी बढीमा लिए भएको भए जमानी लिएको अङ्क पृथक खोली लेखाई लिनु पर्छ । त्यस्तो नखोली गोश्वारा जमानी बसेकोमा भने घटी बढी भएपनि बाँकी उपर नभएसम्म सबैको जायजातबाट भर्ना गर्नु पर्छ । जमानी भएको रकम असूल भैसकेपछि वा जमानी दिनेलाई नलाग्ने भैसकेपछि सो जमानीपत्र स्वत: बदर हुनेछ । कागजपत्र नगरी मुखले मात्र जमानी लिएको सदर हुँदैन ।

२ नं. ॥ ॥ अड्डाबाट जमानी लिनु पर्दा कानून बमोजिम र आवश्यक जाँचबुझ गरी नेपाल सरकारलाई नोक्सान नहुने गरी लिनु पर्छ । जानी जानी वा लापरवाही गरी कानूनको रीत नपुऱ्याई वा आवश्यक जाँचबुझ नगरी जमानी लिएबाट नेपाल सरकारलाई नोक्सानी भएमा सो जमानी लिने कर्मचारीबाट सो नोक्सानीको विगो असूल उपर गरी लिइनेछ । कानून बमोजिमको रीत पुऱ्याई जमानी लिए राखेकोमा पछि दैवी परी वा अरु कुनै कारणले जमानी हुने व्यक्ति बेमाथवर हुन गए वा जमानी लिएको जेथा सदर कायम नहुने भयो वा बेकायमी वा बेसाबूद भयो भने असामी र जमानीबाट उपर हुन नसके जति सो जमानी लिने कर्मचारीबाट असूल गरिने छैन ।

३ नं. ॥ ॥ कानून बमोजिम जमानी दिन पाउने अवस्थामा जमानी दिंदा जमानी दिन हुने फलानालाई जमानी दिन पाउँ भन्ने व्यहोराको दरखास्त लेखी जमानी र सो दरखास्त जमानी लिने अड्डामा प्रस्तुत गर्नु पर्छ र सो अड्डाले पनि सो जमानी हुन आएको व्यक्ति माथवर हो होइन कानून बमोजिम निजलाई जमानी लिन हुने हो होइन भन्ने कुराको यकिन गरी लिन हुने भए लिई र लिन नहुने भए यस कारणले यो जमानी लाग्न सक्तैन कानून बमोजिम दिन हुने अर्को माथवर जमानी ल्याएमा लिइनेछ भन्ने व्यहोरा दरखास्तको पीठमा लेखी हाकिमको सहीछाप लगाई फिर्ता गरिदिनु पर्छ ।

४ नं. ॥ ॥ जेथा जमानी लेखाई लिएकोमा सो जेथा जमानी लेखाई दिने अड्डाले फलानाले यो यति बापत जमानी लेखाई दिएको यो यति जेथा भन्ने सबै कुरा खोली सो जेथा कसैलाई बेचविखन गर्न वा अरु कुनै प्रकारले अरुलाई दिन नपाउने गरी रोक्का राखी दिनको लागि रजिष्ट्रेशन गर्ने, दाखिल खारिज गर्ने, मालपोत तिरो कर असूल गर्ने र त्यस वापत लिलाम बिक्री गर्ने समेत अड्डाहरुलाई रोक्का पूर्जी लेखी पठाउनु पर्छ । सो बमोजिम रोक्का पूर्जी आएमा सो जेथा जमानी जुन कुरा बापत लिएको हो सो कुरा पूरा वा असूल भैसकेकोले रोक्का रहेको जेथा फुकुवा गरिदिनु भन्ने फुकुवा पूर्जी भै नआएसम्म सो लेखिएको जेथा कसैलाई रजिष्ट्रेशन दाखिल खारिज नामसारी हुन नसक्ने गरी रोक्का राखी दिनु पर्छ । तिरो मालपोत वा कर बाँकी राखेकोबाट कानून बमोजिम सो जेथा लिलाम हुने भएमा लिलाम बिक्री नहुँदै जेथा जमानी लिने अड्डालाई जनाउ पठाई दिनु पर्छ । सो बमोजिम जनाउ आउनासाथ जेथा जमानी लिने अड्डाले पनि अर्को जेथा जमानी लेखाई लिनु पर्छ । सो बमोजिम अर्को जेथा जमानी नदिएमा लिलाम बिक्रीबाट आएको मध्ये तिरो मालपोत वा कर बापतको बाँकी असूल गरी बढी भए सो बढी भए जति जेथा जमानी वापत रोक्का राख्नु पर्छ

नपुगे नपुग जतिमा कानून बमोजिम गर्नु पर्छ । जेथा जमानी लेखी दिएकोमा सो लेखी दिने मानिस मरेपनि बाँकी ठहरेजति सो जेथाबाट उपर गरी लिनु पर्छ ।

५ नं. ॥ ॥ हाजिर जमानी लिई छोडेको मानिस भाग्यो भने निजलाई लाग्ने सजाय, विगो, दशौंद बिशौंद इत्यादि कानून बमोजिम जमानी हुनेबाट असूल उपर गरी लिनु पर्छ । सो भागेको असामी पक्रियो भने जमानीबाट असूल उपर भएजति सो जमानीलाई फिर्ता दिई असामीलाई कानून बमोजिम गर्नु पर्छ ।

६ नं. ॥ ॥ धन जमानी भएको अवस्थामा असामीले तिर्न सकेन भने धन जमानी हुनेको जायजेथा रोक्का गरी पहिले असामीको जायजात गरी नपुगेकोमा जमानीको जायजातबाट भर्ना गराउनु पर्छ । दुबैको जायजातबाट पुगेन भने जमानीको पेटमा सो बाँकी रहेनछ भने बाँकी लिनु पर्ने जतिमा असामीलाई नै कानून बमोजिम गरी जमानी छाडी दिनु पर्छ । जमानीको पेटमा सो बाँकी परेको रहेछ भने जति पेट बाँकी रहेको ठहर्छ उतिमा सो जमानी हुनेलाई असामी सरह कानून बमोजिम गरी असामी छाडिदिनु पर्छ ।

७ नं. ॥ ॥ धन जमानी भएकोमा जमानी दिने मानिस मरेपनि निजबाट उपर गर्नु पर्ने बाँकी ठहरे धन जमानीले तिर्नु पर्छ । धन जमानी हुने मरेपछि भने निजले असामीबाट केही लेखाई लिई भोग गरेको रहेछ वा असूल गरिसकेको रहेछ भने त्यतिमा मात्र सो जमानी हुनेको अपुताली खानेबाट असूल उपर हुन सक्तछ । सो बाहेक अरु अवस्थामा धन जमानी हुने मरिसकेपछि निजको अपुताली खानेबाट असूल उपर हुन सक्तैन । असामी वा असामीको अपुताली खानेबाट असूल उपर गरी लिनु पर्छ । हाजिर जमानी भएकोमा असामी मरेपछि सो जमानी हुने व्यक्तिलाई र हाजिर जमानी हुने मानिस मरेपछि सो जमानी हुनेका हकदारलाई पक्राउ गर्न हुँदैन ।

८ नं. ॥ ॥ सोह्र वर्ष नपुगेका मानिसलाई कसैले जमानी लिन हुँदैन ।

९ नं. ॥ ॥ जमानीको कागज लेखाउँदा जमानी दिने र जमानी हुने दुई थर नराखी कागज गराएको सदर हुँदैन ।

१० नं. ॥ ॥ जेथा जमानी लेखाई लिंदा सो जमानी भएको बाँकी उपर हुने अञ्जाम गरी लिनु पर्छ । जेथा जमानीबाट उपर भएन भनी जमानी हुनेको अरु जेथा पक्राउ गर्न हुँदैन ।

११ नं. ॥ ॥ सर्वस्व हुने मानिसको जमानी भएको भए भाग्नेको सर्वस्व गरी जमानीलाई छाडिदिनु पर्छ । जमानीमा छुटेको मानिस जहिलेसुकै पक्रिए पनि जो हुने सजाय उसैलाई नै गर्नु पर्छ । जमानी हुनेले लेखिए बमोजिम रुपैयाँ तिरेको भए मुद्दा छिनिएको तीन वर्षभित्र कैद हुने मानिसको जमानी भएकोमा जमानीमा छुटेको मानिस भागी फेला नपरी जमानीबाट रुपैयाँ असूल भएकोमा भाग्ने मानिस तीन वर्षभित्र फेला परी कैद परे जमानीबाट असूल भएको रुपैयाँ जमानीलाई फिर्ता दिनु पर्छ । म्याद नाघेपछि फेला परे कैद भएकोमा भने फिर्ता हुन सक्तैन ।

१२ नं. ॥ ॥ यसमा जमानी हुनेलाई सजाय वा सरकारी विगोमा कैद गर्नु पर्दा छ वर्षभन्दा बढी कैद गर्नु हुँदैन ।

# महल ३

## कल्याण धनको

१ नं. ॥ ॥ जमीनमा दबेको वा गडेको कुनै धनमाल फेला परेमा जाँचबुझ गर्दा सर्वस्व हुने गरी अड्डाबाट सजायको आदेश भएको व्यक्ति वा सर्वस्व हुने अपराधको अभियुक्तले दबाए वा गाडेको ठहरे जम्मै र जरिबाना कैदको सजाय पाएको वा सरकारी बिगो तिर्नु पर्ने ठहरेको व्यक्तिले दबाएको वा गाडेको ठहरे सो कार्यान्वित गर्न चाहिने जतिसम्म नेपाल सरकारको हुनेछ । साहूको दामासाही गराउने वा गराएको असामीले दबाए वा गाडेको ठहरे फैसलामा लेखिए जतिसम्म साहूको हुन्छ । माथि लेखिए बाहेक अरु कसैले दबाए वा गाडेको ठहरे धनी पत्ता लागे धनीको र निजको मृत्यु भैसकेको भए निजको अपुताली खानेको हुन्छ । धनी पत्ता नलागेकोमा भने सो धनमाल जसको घर जग्गामा फेला परेकोछ उसैको हुन्छ ।

२ नं. ॥ ॥ घर वा जग्गा सुक्रीबिक्री गरिसकेपछि वा अरु कुनै व्यहोराले कानून बमोजिम आफ्नो हक छोडी अर्काको हक हुने गरी दिई लिई सकेपछि सो घर वा जग्गामा दबे वा गडेको कुनै धनमाल फेला पऱ्यो भने सो धनमाल सो घर जग्गा खरीद गरी वा अरु व्यहोराले आफ्नो हक गराई लिने व्यक्तिको हुन्छ ।

३ नं. ॥ ॥ कल्याण धन फेला परेकोमा यसै महलको १ र २ नम्बर बमोजिम सो धनमाल नेपाल सरकारको वा धनीको हुने भै सो धनमाल फेला पार्ने व्यक्तिले नपाउने भएमा निजलाई सो धनमालको सयकडा दश र नेपाल सरकारलाई सयकडा दश धनीले दिनु पर्छ । जसले पाउने हो उसैले फेला पारेकोमा भने सयकडा बीस नेपाल सरकारको हुन्छ ।

४ नं. ॥ ॥ नेपाल सरकार वादी हुनेमा बाहेक यसै महलका कुरामा छ महिनाभित्रमा नालिस नदिए लाग्न सक्तैन ।

## महल ४

### ज्याला मजुरीको

१ नं. ॥ ॥ कसैले कसैलाई निजको मञ्जुरी बेगर कुनै काम लगाउन वा गराउन हुँदैन ।

२ नं. ॥ ॥ काम गर्नेले ज्याला मजुरी नलिने गरी आफूखुशीले काम गर्न मञ्जुर गरेकोमा बाहेक काम गर्नेलाई काम लगाउने वा गराउनेले दुबैको मञ्जुरीबाट कुनै खास ज्याला मजुरी तोकिएकोमा सो तोकिए बमोजिमको र सो बमोजिम नतोकिएकोमा सो काम वापत सो ठाउँमा चलेको दर अनुसारको सुफत ज्याला मजुरी दिनु पर्छ ।

३ नं. ॥ ॥ आफूले कबुल गरी उठाएको काम पूरा नगरी काम गराउनेको मञ्जुरी वा मनासिब माफिकको कारण बिना बीचैमा छोड्नु हुँदैन ।

४ नं. ॥ ॥ कसैले यस महलमा लेखिएको विरुद्ध कुनै काम गरेमा देहाय बमोजिम हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

कसैले कसैलाई निजको मञ्जुरी बिना काम लगाए वा गराएमा लगाएका कामको ज्याला मजुरी भराई दिई एकसय रुपैयाँसम्म जरिबाना हुनेछ - - - - - - - - - - - १

आफूले लगाए वा गराएको कामको यसै महलका २ नम्बर बमोजिमको ज्याला मजुरी नदिनेबाट सो बमोजिमको ज्याला मजुरी भराई दिई निजलाई दण्ड सजायको २१ नम्बर बमोजिम सजाय समेत गर्नु पर्छ - - - - - - - - - - - - - - - - २

आफूले कबुल गरी उठाएका काम सो काम लगाउने वा गराउनेको मञ्जुरी वा मनासिब कारण बिना बीचैमा छोडेमा क्षतिपूर्ति लिने दिने कुराको सम्बन्धमा लिखत भएकोमा सोही बमोजिम र त्यस्तो लिखत नभएमा देहाय बमोजिम हुन्छ - - - - - ३

आफूले बोकी आएको भारी बीचैमा छोडी भाग्ने भरीयालाई पचास रुपैयाँसम्म जरिबाना गरी निजले भारी छोडी भागेबाट माल नोक्सान पर्न गएको रहेछ भने नोक्सानी विगो समेत निजबाट भराई दिनु पर्छ - - - - - - - - - - - - - - १

भारी बोकी जिम्मा लिई गएकोमा सो भारी जहाँसम्म पुऱ्याउनलाई जिम्मा लिएको हो सो ठाउँसम्म पुऱ्याई जिम्मा नदिई त्यसै भारी बोक्दिन भनी बीचैमा भारी छाडी जानेलाई बीस रुपैयाँसम्म जरिबाना गरी पेश्की लिएको भुक्तान भै नसकेको मजुरी निजबाट फिर्ता गराई दिनु पर्छ - - - - - - - - - - - - - - - २

यसै दफाको माथि दफा १ र २ मा लेखिए बाहेक अरुमा विगो भराई कसूर अनुसार बीस रुपैयाँसम्म जरिबाना हुन सक्तछ - - - - - - - - - - - - - - - ३

५ नं. ॥ ॥ यस महलका कुरामा सो काम कुरा भए गरेका मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ५

## गरीब कङ्गालको

१ नं. ॥ ॥ <... ... ...

२ नं. ॥ ॥ <... ... ...

α३ नं. ॥ ॥ बाबु मरेको वा बेपत्ता भएको वा विदेश गएको अवस्थामा ❐आमाले अर्को विवाह गरेमा निजको नाबालकको हकमा देहाय बमोजिम हुन्छ - - -

जायजेथा वा उमेर पुगेको एकाघरको हकवाला नभएको नाबालक भए आमाले आफूसाथ लगी पाल्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

जायजेथा र उमेर पुगेको एकाघरको हकवाला भएपनि आठ वर्षभन्दा मुनिको नाबालक भए आठ वर्षको उमेर नपुगेसम्म आमाले आफूसाथ लगी र नाबालकको एकाघरको हकवाला नभए नाबालककै घरमा बसी पाल्न पाउँछ - - - - - - - - २

आठ वर्ष नाघेको तर सोह्र वर्ष मुनिको नाबालकको उमेर पुगेको एकाघरको हकवाला भएपनि हकवालाले नपालेमा वा पाल्न मञ्जुर नगरेमा आमाले पाल्न पाउँछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

आमाले पाल्दा नाबालकको एकाघरको हकवाला नै नभएको वा भएपनि उमेर पुगेको नभएको वा उमेर पुगेको भएपनि पाल्न नचाहेकोमा सो नाबालकको जायजेथा समेत आमाले जिम्मा लिन पाउँछ - - - - - - - - - - - - - - - - ४

४ नं. ॥ ॥ आपस्त वा संरक्षकले हेरविचार नगरेका वा त्यस्ता कोही नभएका नाबालकको जायजात रहेनछ वा भएपनि त्यसको आयस्ताबाट निजको पालन पोषण हुन नसक्ने रहेछ भने सो ठाउँको 🕮गाउँपालिका वा नगरपालिकाले त्यस्तो नाबालकलाई नाबालक पाल्ने ठाउँको छुट्टै व्यवस्था भएकोमा सोही ठाउँमा र सो नभए त्यस इलाकाको ◈प्रमुख जिल्ला अधिकारी समक्ष पठाई दिनु पर्छ । ◈प्रमुख जिल्ला अधिकारी कहाँ सो बमोजिम आएका नाबालकलाई उसको आयस्ताले नपुगे जति राजगुठीको आम्दानीबाट खर्च गरी सोह्र वर्षको उमेर नपुगेसम्म स्याहार सम्भार गरी गर्न लगाई त्यसको दरवन्दी नभएकोमा दरवन्दी समेत गराई पाली राख्नु पर्छ ।

५ नं. ॥ ॥ जायजात र आफ्नो कोही नभएका रोजगार गरी खान नसक्ने असमर्थ व्यक्तिलाई सो ठाउँको 🕮गाउँपालिका वा नगरपालिकाको सिफारिसमा ◈प्रमुख जिल्ला अधिकारीले सदावर्तबाट हण्डी र वर्षको दुई जोर कपडा दिलाई नेपाल सरकारबाट तोकिएको ठाउँमा पाली राख्न लगाउनु पर्छ ।

६ नं. ॥ ॥ यसै महलको <... ... ... ३, ४ वा ५ नम्बरमा लेखिए बमोजिमको नाबालक वा व्यक्ति आफ्ना गाउँ शहर टोलमा भएमा सो ठाउँका जिमिदार

---

< बालबालिका सम्बन्धी ऐन, २०४८ द्वारा खारेज ।

α छैठौं संशोधनद्वारा संशोधित ।

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

◈ छैठौं संशोधनद्वारा रुपान्तर ।

◈ छैठौं संशोधनद्वारा रुपान्तर ।

< बालबालिका सम्बन्धी ऐन, २०४८ द्वारा हटाइएको ।

तालकुदार वा 🕮<u>गाउँपालिका वा नगरपालिका</u> सदस्यले सो कुराको जनाउ सो ठाउँको 🕮<u>गाउँपालिका वा नगरपालिकालाई</u> दिनु पर्छ र सो 🕮<u>गाउँपालिका वा नगरपालिकाले</u> पनि सो नम्बरहरुमा लेखिए बमोजिम गर्नु पर्छ ।

७ नं. ॥ ॥ महारोग भएका मानिसहरुलाई ◈<u>प्रमुख जिल्ला अधिकारीले</u> नेपाल सरकारबाट तोकिएको ठाउँमा पठाई दिनु पर्छ ।

➘तर औषधि उपचार नहुने ठाउँमा महारोग भएका मानिसहरुलाई पठाउने गरी तोक्न हुँदैन ।

८ नं. ॥ ॥ नेपाल सरकारको तर्फबाट दिइने सदावर्त सिधा दिंदा देहायका क्रमले प्राथमिकता दिई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - -

(क) महारोगी ।

(ख) दुबै आँखा नदेख्ने अन्धा ।

(ग) लुला, लङ्गडा वा कूँजा ।

(घ) बाबुआमा कोही नभएका रोजगार गरी खान नसक्ने नाबालक टुहुरा ।

(ङ) स्याहार सम्भार गर्ने कोही नभएका अशक्त बुढाबूढीहरु ।

(च) बिरामी र असमर्थ ।

(छ) असल रमता दशनाम फकीर ।

(ज) कमाई खेतीपाती केही नभएका स्वास्नीमानिस ।

९ नं. ॥ ॥ यस महल बमोजिम पालिएका नाबालकलाई सो पाल्नेले यथासम्भव उचित शिक्षा दिलाउने व्यवस्था गर्नु पर्छ ।

१० नं. ॥ ॥ आफ्नो जायजात माथवर जिम्मावालाले बुझाई दिएकोमा हिनामिना भएको वा अरु कारणले चित्त नबुझेको कुरामा नालिस दिनु पर्दा आफूले फाँटवारी बुझी लिएको मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

➘ चौथो संशोधनद्वारा थप ।

# महल ६

## चौपाया हराउने र पाउनेको

१ नं. ॥ ॥ कुनै चौपाया फेला पऱ्यो र फलानाको हो भनी थाहा पाइयो भने आफूले पाएको मितिले बाटाका म्याद बाहेक सात दिनभित्र जसको हो उसैलाई बुझाई दिनु पर्छ । फलानाको हो भनी थाहा हुन सकेन भने आफूले पाएको पैंतीस दिनभित्र नजिकको प्रहरी कार्यालय वा स्थानीय पञ्चायतमा जाहेरी लेखाई राख्नु पर्छ ।

२ नं. ॥ ॥ साझाको चौपाया अरु साझेदारलाई थाहा नदिई कुनै साझेदारले लगेछ र अरु साझेदार उजूर गर्न आए भने जसले अरुको हिस्साको दाम तिर्छ सो माल उसैलाई दिलाई दिनु पर्छ । थाहा नदिई लगेकामा दैवी पऱ्यो भने जसले लगेको हो उसबाट अरुको हिस्साको मोल भराई दिनु पर्छ ।

३ नं. ॥ ॥ कसैले कुनै चौपाया पाएकोमा यसै महलको १ नम्बर बमोजिम गर्नु पर्ने काम नगरी सो चौपाया आफ्नो निजी व्यवहारमा ल्याएमा निजबाट सो चौपायाका धनीलाई सो चौपाया व्यवहार गरेको प्रत्येक दिनका निमित्त त्यस ठाउँमा चलेको मजुरी भराई दिनु पर्छ । सो बमोजिम मजुरी भराउँदा सो चौपायाको मोलको बराबर भन्दा बढी भराउन हुँदैन । सो चौपाया मरे वा भागेमा सो चौपायाको मोल विगो समेत भराई दिनु पर्छ ।

४ नं. ॥ ॥ कसैको हात्ती भागी जङ्गलमा हराएमा सो हराएको मितिले पैंतालीस दिनभित्र नजिकको सरकारी हात्तीसारमा जाहेर गर्न आएमा खोजी पक्रिए खोजी दिए वापत फी हात्तीको एक सय रुपैयाँको दरले सो हात्तीको धनीबाट बुझिलिई हात्ती सो धनीलाई बुझाई दिनु पर्छ । पैंतालीस दिन नाघेपछि खोजी गरी दिनु पर्दैन ।

५ नं. ॥ ॥ कसैले पाइराखेको चौपाया सो हराएको छ महिनाभित्र प्रमाण पुऱ्याई कसैले दावी गर्न आएमा त्यस चौपायाको पञ्चकृति मोल गरी त्यसको दशौंद पनाउनी र खुवाएको खर्च समेत पाउनेलाई दिलाई चौपाया धनीलाई फिर्ता दिलाई दिनु पर्छ । छ महिनाभित्र दैवी परे पाउनेले बुझाउनु पर्दैन । छ महिनाभित्र दावी गर्न नआए जसले पाएको हो उसैको हुन्छ । यसै महलको १ नम्बर बमोजिम गर्नु पर्ने काम नगरेकोमा भने छ महिनाको म्याद नाघे पनि सो चौपाया पाउनेको हुँदैन । धनीलाई बुझाई दिनु पर्छ ।

६ नं. ॥ ॥ आफ्नो हक नपुग्ने मेरो हो भनी लगी राखेको चौपाया र त्यसबाट बढेको फिर्ता दिनु पर्छ । नोक्सान वा दैवी पऱ्यो भने मोल भराई दिनु पर्छ ।

७ नं. ॥ ॥ यो महलको अन्यत्र हदम्याद लेखिएको कुरामा बाहेक अरु कुरामा भए गरेको मितिले छ महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ७

## गुठीको

१ नं. ॥ ॥ नेपाल सरहदभित्र अस्पताल, पाठशाला वा सार्वजनिक हित हुने अरु कुनै काम कुरा राख्न वा बनाउन नेपाल सरकारसित जग्गा मागेमा अर्काको हकको वा सन्धी सर्पन नपर्ने सरकारी जग्गा भए दिन हुन्छ ।

२ नं. ॥ ॥ रीत पुऱ्याई राखेको धर्मशाला धर्म कीर्ति कसैले बिगार्न र केही कसूर गरे पनि हर्न हुँदैन । हकवाला कोही नभए सरकारी गुठीमा दर्ता गरी दिनु पर्छ ।

३ नं. ॥ ॥ कुनै व्यहोरासँग गुठी राखेकोमा देहाय बमोजिम हुन्छ - -

गुठियार समेत राखी आफ्नो हक छोडी राखेको गुठी सो गुठी राख्ने वा उनका सन्तान हकदारले गुठीको दानपत्र शिलापत्र समेतका लिखत बमोजिमको काम चलाई शेष जगेडा रहने बाहेकको खान पाउने शेष बाँकीसम्म धितो बन्धक राख्नु हुन्छ । लेखिए बाहेक बेचबिखन दान दातव्य गरी वा जम्मै भोग धितो राखी वा लिखत बमोजिमको काम समेत नगरी धर्म लोप गर्न हुँदैन । सन्तान हकदारले लिखत बमोजिमको काम चलाएन वा खान पाउने शेष भोगधितोदेखि बाहेक बेचबिखन दान दातव्य र अरु जम्मै गुठी बेचबिखन दान दातव्य वा भोगधितो समेत गरी धर्म लोप गऱ्यो भने त्यसले सो गुठीको पालो पाउँदैन । शेष बाँकी बण्डा गरी खान पनि पाउँदैन उदेखि पछिको सो गुठीको हकदारले चलाउन पाउँछ । नजानी लिने साहूको थैली कपाली हुन्छ । जानी जानी लिने साहूको थैली भूस हुन्छ - - - - १

गुठियार नराखी घर गुठी राख्दा त्यसै सालका दर भाउले सयकडा दशभन्दा बढ्ता खान पाउने गरी राखेको गुठीमा गुठी राख्ने वा उसको सन्तानले गुठीको दानपत्र शिलापत्र समेतको लिखत बमोजिमको काम चलाई आफूले खान पाउने शेष बाँकीसम्म धितो बन्धक राख्न हुन्छ । खान पाउने शेष बाँकी पनि बेचबिखन दान दातव्य र लेखिए बाहेक अरु गुठीको घर जग्गा धितो बन्धक र बेचबिखन दान दातव्य समेत केही गरी दिन र गुठीको दानपत्र शिलापत्र समेतको लिखत बमोजिमको काम नचलाई धर्मलोप गर्न हुँदैन । धर्मलोप गर्नेले त्यस गुठीको पालो पाउँदैन । उदेखि पछिका हकदारले चलाउन पाउँछ । खान पाउने भएको शेष बाँकी भने धर्मलोप गर्नेले पनि ऐन बमोजिम बण्डा गरी खान पाउँछ । साहूको हकमा माथि १ दफामा लेखिए बमोजिम हुन्छ - - - - - - - - - - - - - - - २

माथि १।२ दफामा लेखिए बमोजिम राखेको गुठीमा गुठी राख्ने वा उनका सन्तान हकदारले आफूले खान पाउनेसम्मको शेष बन्धक राखेमा र लिनेले लिएमा समेत गुठीको जग्गामा दैवी परी बाली नआउँदा सो गुठीको चलाउनु पर्ने काम चलाउन र भत्के बिग्रेको बनाउनलाई समेत जगेडा राख्ने गरी त्यसैबाट गर्ने र जगेडा नराखी शेष बाँकी खानेमा समेत घरघरानाबाट खर्च गरी समेत चलाउनु पर्ने काम चलाउने र बनाउनु पर्ने बनाउने समेत गुठीको दानपत्र शिलापत्र पन्जिल समेतका लिखत बमोजिम चलाउनु बनाउनु पर्छ । चलाउनु बनाउनु पर्ने काममा गुठीको जग्गामा दैवी परी बाली नआउने भएमा र जगेडा राख्ने नभएको गुठीमा शेष बन्धक राख्नेले घर घरानाबाट खर्च गरी जो चलाउनु बनाउनु पर्ने चलाउनु बनाउनु र बन्धक लिने साहूले पनि गर्न लाउनु पर्छ । उसले चलाएन बनाएन भने मुर्दा गुठी बाहेक अरु गुठीमा बन्धक लिने साहूले आफैले खर्च गरी आफूले गर्न

चलाउन हुने जतिमा आफैले र आफूले चलाउन गर्न नहुनेमा दाता वा अरु हकदार मार्फतबाट समेत गरी चलाउनु बनाउनु पर्छ । लेखिए बमोजिम बन्धक राख्ने दाता वा साहूले समेत चलाएन चलाउन लाएन बनाएन बनाउन लाएन भने सो कसूरबाट पनि धर्मलोप गरेको ठहर्छ । अडकाउ भएको काम माथि १।२ दफामा लेखिए बमोजिमको हकदारले बन्धक लिने साहू बसे उसलाई र उ नबसे अरु चार जना भलाद्मी राखी चलाउनु बनाउनु गरी सो चलाए बनाएको खर्चमा साहूको वा भलादमीको सहीछाप गराई लिनु पर्छ यति रीत पुऱ्याई गरेको सो खर्च सोही बन्धकी राखेको शेष आयस्ताबाट उपर गरी लिन पाउँछ । सो खर्च उपर भर्ना नहुन्जेल बन्धक लिने साहूले शेष आयस्ता खान पाउँदैन । खर्च उपर गरी लिइसके पछि मात्र लिखत बमोजिम त्यो साहूले शेष आयस्ता खान पाउँछ । बन्धक राखेको जति पालो पाउने र काम चलाउने हकदारले निखनी लिन पाउँछ - - - - - - - - ३

४ नं. ॥ ॥ गुठी राख्दा दान गरी दिई राखेको गुठी रहेछ भने पाउने हकदार ठहर्छ । सो पाउने वा त्यसका सन्तानले धर्मलोप गरेछ भने सो गुठी राख्ने वा उसका सन्तानले धर्मलोप गर्नेलाई खारिज गरी त्यसका हकवालामा आफूले रोजेकालाई पजनी गरी दिन पाउँछ । आफैले खान भने पाउँदैन । गुठियारले दान बकस बेचविखन केही गरिकन पनि अरुलाई दिन हुँदैन ।

५ नं. ॥ ॥ एकभन्दा बढी हकवाला भएमा ती सबैले लिखत भए लिखत बमोजिम लिखत रहेनछ भने प्रत्येकले दुई वर्षको पालो गरी गुठी चलाई खान पाउँछन् । हकवाला बाबु जीउँदै भएको अवस्थामा भने छोरा नातिले दैया गर्न पाउँदैनन् । लिखत नभएकोमा आफ्नो हक पुगेपछि सोह्र वर्षभित्र नालिस नदिए दुई वर्षको पालो पाउने कुरामा पछि नालिस लाग्न सक्तैन ।

६ नं. ॥ ॥ गुठीको चल सम्पत्ति गुठीको कामका लागि चलन व्यवहार गर्दा मनासिब माफिकको खिए घटेकोमा गुठियारलाई बात लाग्दैन । सो बाहेक गुठियारले नासे मासेकोमा धर्म लोप गरेको ठहर्छ । त्यस्तो गुठियारलाई पजनी गर्न हुन्छ ।

७ नं. ॥ ॥ नेपाल सरकारसित यसै महलको १ नम्बर बमोजिम जग्गा प्राप्त गरी धर्म कीर्ति बनाई राखेको सो गुठी राख्ने वा निजको सन्तान वा हकवालाले जिर्णोद्धार गर्न नसकी अरु कसैले जिर्णोद्धार गरेमा नेपाल सरकारबाट प्राप्त गरेको जग्गा सो जिर्णोद्धार गर्ने व्यक्तिले नेपाल सरकारबाट तोकिएको सो गुठीको काम चलाई खान पाउँछ ।

८ नं. ॥ ॥ लिखतपत्र केही नभै सोह्र वर्षसम्म अर्काको गुठी भोग गरेको रहेछ भने निज जीवित छउन्जेल निजैले भोग गर्न पाउँछ । निजको शेषपछि सो गुठीमा हक पुग्नेले पाउँछ ।

९ नं. ॥ ॥ ऋण वा नेपाल सरकारको बाँकी लागेपछि गुठी राखेकोमा सो ऋण वा बाँकी नबुझाई सदर हुँदैन । त्यस्तालाई सजाय भने हुँदैन ।

१० नं. ॥ ॥ सरकारी मठ पाएका महन्तहरुसँग कसैले जग्गा जमीन, घर, खेत लिंदा सो मठ पाउने महन्तले मठ नपाउँदै अघि आर्जेको जग्गा जमीन, घर खेत र मठ पाएपछि पनि मठ पाउनेले आफ्नै जीउले आर्जेको जति जग्गा जमीन, घर, खेत आर्जनेको जीउ छउन्जेल निजलेसम्म ऐन बमोजिम बेचबिखन गर्न र लिखत गरी दिन लिन हुन्छ । आर्जन गर्ने महन्तका शेष पछिलाई मठ पाउनुभन्दा अघिको बाँकी रहेको जति र मठ पाएपछि आर्जेको जग्गा, जमीन, घर, खेत समेत हकदारले पाउँदैन

मठैको हुन्छ । सो बमोजिम मठमा आएको जग्गा जमीन घर खेत पछि कुनै महन्तले ऐन बमोजिम एका मोहीबाट अर्को मोही पजनी गर्न बाहेक अरु केही व्यहोरासँग महन्तले दिन र अरुले लिन समेत हुँदैन, लिए दिएको बदर हुन्छ ।

११ नं. ॥ ॥ भेषधारीहरुले गुठी नराखी आफ्ना नाउँमा दरिएको वा आफ्नू हक पुग्ने जग्गाको पोत तिरो तिरी बाँकी रहेको आफूले खान पाउने आयस्ताबाट देव देवताको पूजा आजा धर्म सदावर्त इत्यादि काम चलाउने गरी राखेको वा काम चलाई आएका जग्गा ती मरिसकेपछि तिनका चेलाले लागेको पोत तिरो तिरी बाँकी रहेको आयस्ताबाट साविक बमोजिमको काम चलाई शेष बाँकी रहनेमा सो शेषसम्म खान हुन्छ । त्यस्तो जग्गा बन्धक राख्न वा हक छोडी बिक्री दान बकस इत्यादि गरी दिन लिन समेत हुँदैन । मालपोत तिरो बाँकी राखे कानून बमोजिम पजनी हुन्छ ।

१२ नं. ॥ ॥ कुनै मठ स्थानको महन्तको पद रिक्त भएमा शिष्य उपशिष्यले सो महन्त्याई चलाउने भएकोमा सो मठ स्थानको काम राम्रोसँग चलाउन सक्ने नेपाली नागरिक शिष्य उपशिष्यले सो महन्त्याई पाउनेछ ।

१३ नं. ॥ ॥ गुठीमा दाखिल गर्नु पर्ने रकम दबाई छपाई खाएमा सो खानेबाट विगो भराई निजलाई विगो बमोजिम जरिबाना हुन्छ ।

१४ नं. ॥ ॥ आफ्नो हक नपुग्ने कुरामा पाउँ भनी उजूर गरी बाली समेत खाएको भए काम चलाई खाएको भए शेष फिर्ता दिलाई त्यसै जग्गाको एक वर्षको धनी बोटीको सयकडा पाँच रुपैयाँ जरिबाना हुन्छ ।

१५ नं. ॥ ॥ त्यसै पक्रेको मात्र रहेछ भने पक्रेका जम्माको धनी बोटीका र अरु मालको दशौंद जरिबाना हुन्छ ।

१६ नं. ॥ ॥ यो महलमा अन्यत्र हद लेखिएको कुरामा र धर्म लोप गरेको वा राख्न नहुने गुठी राखेको बाहेक अरु कुरामा भए गरेका मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ८

## जग्गा आवाद गर्नेको

१ नं. ॥ ॥ आफ्नो खर्च वा आँतका बलले जसले कुलो बनाउँछ उसलाई पहिले पानी नभई अरुले पाउँदैन । अघिदेखि भाग बाँडी आएका ठाउँमा भाग बमोजिम पानी नदिई खेत बाँझो गराउन समेत हुँदैन । मुहानका खेतमा पानी पुगेपछि उस मन्तिरकाले लैजान पाउँछ । मुहानका खेतवालाको केही अडकाउ भयो भने उसै मन्तिरकाले पानी लगी रोप्न हुन्छ । पछिबाट मुहानकाले पानी लगी रोप्न हुन्छ । नयाँ कुलो बनाउँदा पुरानो कुलोले पाट्ने खेतमा पानी कम हुँदैन भने माथि नयाँ कुलो बनाउन हुन्छ ।

२ नं. ॥ ॥ कुलो भत्क्यो वा खेतमा खोलो पैह्रो लाग्यो भने भरसक मोहीहरुले आफै वा दामासाहीले मानिस पठाई बनाई तैयार गर्नु गराउनु पर्छ । मोहीका बल मद्दतले नपुग्ने भयो भने जिमिदार तालुकदारले सबै व्यहोरा खोली खर्चको निकासाको निमित्त नेपाल सरकारको सम्बन्धित कार्यालयमा जाहेर गरी निकासा भए सो बमोजिम बनाउनु पर्छ ।

३ नं. ॥ ॥ जग्गा आवाद गर्नालाई बाँझो वा आवादी जुनसुकै जग्गाबाट जोसुकैले पनि बाँध पैन कुलो बनाई पानी ल्याउनु हुन्छ रोक्न हुँदैन । तिरो पोत नलागेको बाँझो जग्गा बाहेक अरु जग्गाको हकमा जग्गाको धनीलाई बाँध पैन कुलोमा परेको जग्गा जतिको मोल वा जग्गा सट्टा दिनु पर्छ । बाँझो जग्गा आवाद गर्नालाई रैतीतर्फबाट खर्च लगाई बनाउँदा बाँध पैन कुलोमा परेको आवादी जग्गाको तिरो पोतभन्दा दोब्बर बढ्ता हाल आवादी हुने पर्ति जग्गाबाट आउने रहेछ भने सो बाँध पैन कुलोमा परेको जति आवादी जग्गाको तिरो पोत मिनाहा दिनु पर्छ ।

४ नं. ॥ ॥ परापूर्वदेखि हिंडी आएको बाटो वा वस्तु भाउ निकास्ने निकास आफ्नो जग्गामा पर्ने भएपनि त्यस्तो जग्गा र वस्तु भाउ खरकाउने चौर, पानी घाट, पोखरीको ढिंक, गौचर, मूलबाटो, सडक, पाटी, पौवा, चिहान र त्यस्तै अरु कुनै सार्वजनिक स्थान र नेपाल सरकारबाट कमोट नगर्नु बझ्याउनु भन्ने भएको सरकारी जग्गा कसैले बिराउन वा बिराउन लाउन हुँदैन ।

५ नं. ॥ ॥ कानून बमोजिम देहायमा लेखिएको कुनै जग्गा आवाद गर्न अनुमति प्राप्त गरेकोमा देहायमा लेखिएको भन्दा घटी माफी लिने गरी आवाद गर्न कबुल गरेकोमा सो कबुल बमोजिम र त्यस्तो कबुल नभएकोमा देहाय बमोजिम हुन्छ -

अघिको आवादी पछि खस्ती पर्ती रहेको जग्गा आवाद गरेकोमा आवाद गरेकै सालदेखिको तिरो लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

कालाबजार, मुद्दती पर्ती, खयर वन, बयर वन, पट बाँझो, बगर समेत आवाद गरेकोमा चार साल माफी दिई पाँचौ सालदेखि पोत लिनु पर्छ - - - - - - - - - - २

आवादी तिरो भरोको पाखोमा कुलो ल्याई खेत बिराएमा चार सालसम्म पाखोकै तिरो लिई पाँचौ सालदेखि खेत सरहको तिरो लिई पाखोको तिरो मिनाहा दिनु पर्छ- - ३

६ नं. ॥ ॥ जग्गा हाल आवादी गर्ने कुराका हकमा जग्गा आवाद गरी सकी दर्ता गराई पाउँ भनी दरखास्त गरेमा त्यस्तो दरखास्त उपर कारबाही गरिने छैन । जग्गा जाँची आवाद गर्न पाउँ भन्ने दरखास्त दिएकोमा जग्गा पहिले नै आवाद

गरिसकेकोमा बाहेक कानून बमोजिमको रीत पुऱ्याई दर्ता गरिदिनु पर्छ । जाँच्दा जग्गा पहिले नै आवाद गरिसकेको देखियो भने देहाय बमोजिम गर्नु पर्छ - - - - - - -

कसैको हक नलाग्ने कानूनले आवाद गर्न हुने जग्गा रहेछ भने सो आवाद गर्नेले आवाद गरेको सालदेखिको सो जग्गामा लाग्ने तिरो र सो तिरोको विगो बमोजिम जरिबाना निजबाट असूल उपर गरी सो जग्गा लिलाम बिक्री गरी आएको रकम नेपाल सरकारमा दाखिल गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - १

कसैको हक नलाग्ने कानूनले आवाद गर्न नहुने जग्गा आवाद गरेको रहेछ भने सो आवाद गर्नेले आवाद गरेको सालैदेखिको सो जग्गामा लाग्ने तिरोको विगो बमोजिम जरिबाना निजबाट असूल उपर गरी सो जग्गा बझ्याई दिनु पर्छ- - - - - - - - - २

अरुको हकको जग्गा आवाद गरेको रहेछ भने हक बेहकको मुद्दा हेर्ने अड्डाबाट निर्णय गराई आएमा पछि ठहरे बमोजिम हुनेछ भनी दरखास्तवालालाई सुनाई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

७ नं. ॥ ॥ हाल आवाद गर्न पाउँ भनी दरखास्त परेकोमा आवाद गर्न पाउँ भनेको जग्गा कानून बमोजिम आवाद गर्न हुने रहेछ भने सो जग्गाको साँधका जग्गाका धनीहरु वा निजका प्रतिनिधि, सो जग्गाको जिमिदार तालुकदार वा निजका प्रतिनिधि र अरु कम्तीमा चारजना स्थानीय भलाद्मी समेत राखी सरजमीन बुझी हाल आवादी गर्न हुने ठहरे कानून बमोजिमको रीत पुऱ्याई नम्बरी दर्ता गरी दिनु पर्छ । सो बमोजिमको मानिस नराखी गरे भएको सरजमीन र त्यसबाट भएको हाल आवादी दर्ता सदर हुन सक्तैन ।

८ नं. ॥ ॥ जग्गा नाप्दा सैंतीस फुट लामो सैंतीस फुट चौडा जग्गाको एक मुरी, चार मुरीको एक रोपनी र साढे तेह्र फुट लामो साढे तेह्र फुट चौडा जग्गाको एक धुर, बीस धुरको एक कठ्ठा र बीस कठ्ठाको एक बिगाहा कायम गर्नु पर्छ ।

९ नं. ॥ ॥ मुद्दा परी वा अरु केही व्यहोराले जग्गा नापी गर्नु पऱ्यो भने चार किल्ला समेत खोली नापी गर्नु पर्छ ।

१० नं. ॥ ॥ जग्गाको कूत ठेक्नु पर्दा उसै ठाउँमा साँध संधियार र भलादमी राखी अवल, दोयम, सीम, चाहारमा यस किसिमको जग्गा भनी मुचुल्का लिई किसिम छुट्याई आँठा सरह कूत ठेक्नु पर्छ ।

११ नं. ॥ ॥ यसै महलको चार नम्बरमा लेखिए बमोजिमको जग्गा र आफू बसेको घरबारीसँग जोडिएको पर्ती जग्गा बाहेक अरु पर्ती जग्गा सोह्रानी तिरो भित्रको वा मेरो सन्धिसर्पनको भनी आफूले पनि आवाद नगरी अरुलाई आवाद गर्न पनि नदिई रोक्का गरी राख्न रखाउन समेत हुँदैन ।

१२ नं. ॥ ॥ नेपाल सरकारबाट कमोट नगर्नु भनी बझ्याएका जग्गा जानी जानी आवाद गरेमा जग्गा आवाद गरेका सालदेखिको सो जग्गामा लाग्ने तिरो जग्गा आवाद गर्नेबाट असूल गरी जग्गा फेरि बझ्याई दिनु पर्छ । त्यस्तोमा जग्गा आवाद गर्ने गराउनेलाई सो तिरोको विगोको पाँच गुना जरिबाना समेत हुन्छ । नजानी आवाद गरेकोमा भने आवाद गरेको सालदेखिको तिरोसम्म असूल गरी जग्गा बझ्याई दिनु पर्छ ।

१३ नं. ॥ ॥ विगो भराउन नपर्ने स्थिति रीतिमा घटी बढी पर्ने कुरा मात्र भएको यो महल बमोजिमको मुद्दामा सजाय गर्नु पर्दा यसै महलका अरु नम्बरमा

सजाय तोकिएको कुरामा सोही बमोजिम र नतोकिएकोमा पचास रुपैयाँसम्म जरिबाना हुनेछ ।

△१४ नं. ॥ ॥ आवाद गर्न नहुने जग्गा आवाद वा दर्ता गरे गराएकोमा बाहेक अरु कुरामा थाहा पाएको मितिले छ महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

△ सातौं संशोधनद्वारा थप ।

# महल ९

## जग्गा पजनीको

१ नं. ॥ ॥ राजगुठी जग्गा र सरकारी लिखत नभएको किपट जग्गा रैकर सरह हुन्छ । सो बाहेक अरु गैह्र जग्गा रैकर ठहर्छ ।

२ नं. ॥ ॥ ऐनले घरसारमा लेनदेन व्यवहार गर्न पाउनेमा सो बमोजिम गर्दा आफ्ना हक हुन आई दाखिल खारिज गर्नु पर्ने भएको र दर्तावाला मरी हकवालाको नाउँमा सार्नेमा समेत पैंतीस दिनभित्र रैतीले तालुकदारकहाँ गै दाखिल खारिज गराई आफ्ना नाउँमा दर्ता गराउनु पर्छ । सो बमोजिम दाखिल खारिज गराउन आएमा तालुकदारले पनि दाखिल खारिज गरी त्यसको निस्सा रैतीलाई दिनु पर्छ । सो बमोजिम तालुकदारले दाखिल खारिज गरी नदिएमा कलम पिच्छे पाँच रुपैयाँ जरिबाना गरी माल अड्डाले दाखिल खारिज गर्नु गराई दिनु पर्छ ।

◆२क नं. ॥ ॥ आफ्ना हक हुन आई दाखिल खारिज गर्नु पर्ने भएको र दर्तावाला मरी हकवालाको नाममा सार्नेमा समेत पैंतीस दिनभित्र दाखिल दर्ता नगराई म्याद गुजारी बसेकोमा पछि दाखिल दर्ता गराउन दरखास्त दिएमा जतिसुकै अवधि व्यतित भएपनि दश रुपैयाँ दस्तुर लिई नामसारी दाखिल खारिज गरिदिनु पर्छ । यो ऐन लागू हुनुभन्दा पहिले जग्गाको नामसारी दाखिल खारिज गर्ने म्याद गुज्रेका कलमहरुमा समेत सो बमोजिम दस्तुर लिई नाउँसारी दाखिल खारिज गरिदिनु पर्छ ।

३ नं. ॥ ॥ कुनै व्यहोराले जग्गा छोड्न छोडाउन परेमा मधेशको जग्गा फाल्गुण मसान्तदेखि जेष्ठ मसान्तसम्ममा र अन्यत्रको जग्गा पौषदेखि चैत्र मसान्तसम्ममा छोड्न छोडाउन हुन्छ त्यसपछिलाई कुयाम ठहर्छ ।

४ नं. ॥ ॥ कुनै रैतीले आफ्ना नामको दर्ता जग्गा कमाई खान सक्दिन भनी यसै महलको ३ नम्बरको यामपछि छोड्छु भन्न आएमा सो छाड्ने सालको तिरो बुझाउँछ भने जिमिदार तालुकदारले निजलाई माल अड्डामा लगी सो अड्डा साक्षी राखी तिरो बुझी राजीनामा गराई लिनु पर्छ । त्यसरी राजीनामा गर्नेले सो गाउँ मौजाको केही जग्गा बाँकी राखी केही जग्गा मात्र छाड्न पाउँदैन ।

५ नं. ॥ ॥ जग्गा पजनी गर्नु पर्ने भएमा त्यस जग्गामा पक्की घर बनाई बसेको भए घर उठाउन हुँदैन । सो घरको र घर बनाउँदा मिचिए जति जग्गाको दामासाहीले तिर्नु पर्ने तिरो तिरी खान पाउँछ । तिरो अड्क्यो भने सो घर लिलाम गरी चाहिने भर्ना लिई बढ्ता त्यही घरका धनीलाई दिनु पर्छ । घरका धनी नभए नेपाल सरकारमा दाखिल गर्नु पर्छ ।

६ नं. ॥ ॥ अव उप्रान्त जग्गामा लाएको रकम खारिज गरिएकोछ । त्यस्तो जग्गामा पोत तिरो लागेको रहेनछ वा आँठाभन्दा कम लागेको रहेछ भने आँठा सरह पोत ठेकी असूल गर्नु पर्छ ।

---

◆ तेस्रो संशोधनद्वारा थप ।

७ नं. ॥ ॥ किपट जग्गाको पगरी पाएको मानिस मऱ्यो भाग्यो भने त्यो पगरी हकवालालाई र हकवालाले मञ्जुर नगरेमा वा नभएमा काम गर्न सक्ने हेरी अरुलाई बाँधी दिनु पर्छ । पगरी पाउनेको भिन्न भएका भाइले बेग्लै पगरी लिन चाहेमा पाउँछ । त्यसै जग्गामा कुरिया बाँडी आफ्ना भागमा लागेको दस्तुर तिरे बेग्लै पगरी दिनु पर्छ । किपटिया पगरी फुटेपछि पनि थरी भने फुटुवा गराउन हुँदैन । उसको सोह्र आनाभित्रको जग्गा फुटुवा पगरीलाई पालो पालो गरी बुझाउनु पर्ने दस्तुर बुझाई खान हुन्छ नयाँ थरी गराई दिन्छौं भनी थैली लिएको रहेछ भने सो तिर्न नसके कपाली सरह हुन्छ । सो पगरी बाँधी दिंदाको दस्तुर असूल गरी लिनु पर्छ ।

८ नं. ॥ ॥ जग्गामा खोलो पैह्रो लागी जाँचले वा सरकारी आदेशले तिरो घटाई बन्दोबस्त गरेकोमा सो जग्गा साबूद नभै अरुले तिरो बढे पनि पाउँदैन । जग्गा साबूद भएपछि पनि साबूद तिरो बुझाएको रहेनछ भने र नयाँले सकार गर्न आयो भने साबूद तिरो बुझाउने गरी नयाँलाई दिनु पर्छ । सो जग्गा साबूद भएको दुई वर्ष छोडी पाँच वर्षसम्मको तिरो र सो तिरो बमोजिमको जरिबाना पुरानियाँलाई लाग्छ ।

९ नं. ॥ ॥ बिना कसूर जिम्मावाली तालुकदारी खोस्न हुँदैन । जिम्मावाली तालुकदारी केही परिवन्दले खाली भएको पाउँ भन्ने निवेदन पर्न आएमा र नयाँ बन्दोवस्त गर्नु परेमा दामकाम नबिग्रने धेरैजना रैतीले रोजेकालाई तिनै रोज्ने रैती जमानी लिई अड्डैबाट ऐनको रीत पुऱ्याई बहाली समेत जो गरिदिनु पर्ने गरी दिनु पर्छ । दर्तावाला तालुकदार जिम्मावाल मरी भागी खाली भएकोमा उसका हकवालालाई दिंदा र बाँकीमा पजनी भएकोमा बाँकी तिरी सकार गर्नेलाई बहाली दिंदा समेत रैती रोजाउनु पर्दैन । दामकाम नबिग्रने गरी दिनु पर्छ । त्यसरी दिंदा तिरो बाँकीमा कैद परेकोलाई भने दिन हुँदैन ।

१० नं. ॥ ॥ धेरै ठाउँको जिम्मावाला तालुकदार भइरहेका मानिसले सो जाने केही कसूर गरेकाबाट एक ठाउँको जिम्मावाली तालुकदारी झिकिने भयो भने त्यसका नाउँमा दरिएको अरु ठाउँको समेत जम्मै जिम्मावाली तालुकदारी झिकी ऐन बमोजिम गर्नु पर्छ । जग्गा तिरो दबाएको कसूरमा सजाय मात्र हुने तालुकदारी जिम्मावाली नजाने व्यवस्था भएको ठाउँलाई बाहेक अरुको हकमा एक अड्डाबाट कसूरदार ठहरी फैसला भएपछि त्यसमा रिहाई नभएसम्म त्यस्ता तालुकदार जिम्मावाललाई दामकाम गरिरहन दिन हुँदैन ।

११ नं. ॥ ॥ जग्गाको दामकाम गर्ने जिम्मावाल तालुकदार मोही नाइके इत्यादिहरुले आफूले गरेको दामकाम गर्न सक्दिन भनी दशैंका टीकादेखि श्री पञ्चमीसम्ममा राजीनामा गरी छाड्छु भने छाड्न पाउँछ । अड्डाबाट पनि राजीनामा गराई उसका ठाउँमा काम हर्जा हुन नपाउने गरी कानूनको रीत पुऱ्याई अर्को बन्दोबस्त गर्नु पर्छ । एकै मानिसले धेरै ठाउँको जिम्मावाली तालुकी मोही नाइके इत्यादि लिएकोमा कुनै थामी कुनै राजीनामा गरी छाड्न भने पाउँदैन । राजीनामा गरी छोड्नेसँग नेपाल सरकारको लिनु पर्ने बाँकी भए कानून बमोजिम असूल गरी लिनु पर्छ ।

१२ नं. ॥ ॥ जाँचबाट एकाका नाउँमा दरिएका घरवारीमा पछि तिनका भाइ छोरा भिन्न भई उसै जग्गामा अरु घर बनाई बसे भने अर्को जाँच नभई धुरी पिच्छे सेर्मा लिन हुँदैन एक सेर्मा मात्र लिनु पर्छ । साउने फागु भने जति धुरी छ उति घरले तिर्न पर्छ ।

१३ नं. ॥ ॥ खोस्न नहुने खोसी दिनेलाई र एकाले पाउने अर्कालाई दिनेलाई घरवारी वा तालुकदारी भए बीस रुपैयाँ, खेत भए एक सालका तिरो बमोजिम र हटक मात्र गर्नेलाई अढाई रुपैयाँ जरिबाना हुन्छ । हटक गर्दा बाँझो रहन गयो वा दामकाम बिग्रन गयो भने विगो भराउनु पर्नेमा विगो भराई सो विगोको सयकडा दश जरिबाना गर्नु पर्छ ।

१४ नं. ॥ ॥ आफूले नपाउने जग्गा वा तालुकी पाउनु पर्छ भन्नेलाई तालुकी पक्रेकोमा दश रुपैयाँ र जग्गा पक्रेकोमा पक्रेका जग्गाको मोल विगोको सयकडा अढाई रुपैयाँ जरिबाना हुन्छ ।

१५ नं. ॥ ॥ जसलाई दिनु पर्ने हो उसलाई नदिई जबरजस्ती गर्नेलाई घरवारी भए दश रुपैयाँ र जग्गा भए मोल विगोको सयकडा पाँच जरिबाना हुन्छ ।

१६ नं. ॥ ॥ जिम्मावारी तालुकदारी बेचबिखन धितो बन्धक समेत गरी लिनु दिनु गरेको सदर हुँदैन । उसै गाउँका रैतीले रोजेकालाई दिनु पर्छ ।

✂१७ नं. ॥ ॥ तालुकदारले खापी खाएका बाहेक एकको हकको जग्गा अर्कोले दर्ता गराएकोमा थाहा पाएको मितिले छ महिनाभित्र र अरु कुरामा भए गरेको मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

# महल १०

## जग्गा मिच्नेको

१ नं. ॥ ॥ एकाको हकको जग्गा अर्काले चापी मिची घुसाई खान र सरकारी जग्गा तिरो नगरी कुनै तवरले दवाई आफूले खान र अर्कालाई खुवाउन समेत हुँदैन ।

२ नं. ॥ ॥ एकै जग्गामा माझमा खोलो पसी वारिपारी जग्गा भयो फेरी खोलाले छोड्यो भने त्यो खोलो हिंडेको बगर जसको जग्गा हो उसैको हुन्छ । खोलोले साँधको जग्गामा जतातिर बगर पार्‍यो उतैतिरकाले आवाद गरी तिरोभरो गरी खान पाउँछ । वारीको बगर पारी तिरकाले पारीको बगर वारी तिरकाले आवाद गर्न पाउँदैन । बगर परे तिरकाले आवाद नगरे अरुले आवाद गरी तिरोभरो गरी खान हुन्छ ।

✂३ नं. ॥ ॥ देहायको अवस्थामा जग्गा दपोट ठहर्छ -- - - - - - -

रैकर वा अरु सरकारी वा सार्वजनिक जग्गालाई राजगुठी वा अरु जग्गा वा साविकदेखिको मिन्है घडेरी भनी दबाई वा ती जग्गाबाट रैकर वा अरु सरकारी वा सार्वजनिक जग्गालाई चापी घुसाई खाएको - - - - - - - - - - - - - - - - - - -१

साविकदेखिको मिन्है घडेरी बाहेक कुनै सरकारी वा सार्वजनिक जग्गा दर्ता नगराई खाएको - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -२

एउटा जग्गाको दर्ताको नाताले बेदर्ताको साँधको वा बेगल रहेको जग्गा खाएको - - ३

△३क नं. ॥ ॥ देहायको अवस्थामा तिरो दपोट ठहर्छ - - - - - - - -

साविक दर्ताको भीठ पाखो खरबारी वा मिन्है घडेरीलाई खेत दर्ता नगराई कुलो लगाई खेत आवाद गरी खाएको - - - - - - - - - - - - - - - - - - - - - - -१

जग्गा बेसाबूद भई साविक तिरो घटाई बन्दोबस्त भएकोमा जग्गा साबूद भएपछि पनि जग्गा पजनीको महलको ८ नम्बर बमोजिम साबूद तिरो नगरी खाएको- - - - २

खोलो पैह्रो बेकायम भई लगत काटिएकोमा जग्गा कायम भएपछि पनि दर्ता तिरो नगरी खाएको - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

४ नं. ॥ ॥ सरकारी जग्गा कुनै व्यहोराले तिरो नतिरी दबाई खाने खुवाउनेलाई तिरो नतिरी दबाई खाए पनि सो वापत यसो गर्नु भन्ने थितिको सरकारी लिखत भइरहेको ठाउँमा सोही बमोजिम हुन्छ । सो नभएको ठाउँमा देहायमा लेखिए बमोजिम हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

तालुकदार आफैले जानी जानी दबाई घुसाई खाए खुवाएको ऐन बमोजिमको तिरोको विगो लिई त्यसै विगो बमोजिम जरिबाना समेत गरी तालुकदारीबाट बर्खास्त गरिदिनु पर्छ । विगो तालुकदारले नखाएको रैतीले खाएको भए खाने रैतीबाट विगो बुझी लिनु पर्छ । रैतीबाट विगो सबै उपर नभए उपर नभएको जति पनि त्यसै जानी दबाई खुवाउने तालुकदारबाटै र रैतीले दबाई खाएको तालुकदारले थाहा

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

△ सातौं संशोधनद्वारा थप ।

नपाएको भए ऐन बमोजिम लाग्ने तिरो र सो तिरोको विगो बमोजिम जरिबाना समेत सोही दबाई खानेबाट बुझी लिनु पर्छ - - - - - - - - - - - - - - - - १

रैतीले धुरी खडा गरी तिरो नतिरी दबाई खाएको तालुकदारलाई थाहा नभए तापनि रेखदेख नगरे वापत तालुकदारलाई धुरी पिच्छे एक रुपैयाँ जरिबाना हुन्छ - - - - -- २

आफ्नो हक नपुग्ने सरकारी जग्गा दुनियाँको किपट जग्गाले चापी घुसाई खानेलाई उसको सो किपट जग्गाबाट सरकारी जग्गा जति घुसाई चापी खाएको ठहरेकोछ उति उसको सोही किपट जग्गाबाट सरकारी चापेका जग्गाको साँध आँठा मिल्ने गरी एक चक्ला पारी कट्टा गरी सो कट्टा भई आएको किपट जग्गा र चापी घुसाई खाएको सरकारी जग्गा समेत झिकी ऐन बमोजिम तिरो ठेकी सरकारी रैकर लगतमा चढाई यसै महलको ६ नम्बरमा लेखिएको रीतसँग खान पाउनेका नाउँमा दर्ता गरिदिनु पर्छ । जग्गा कट्टा गर्दा चापी खाएको जग्गा जति किपटबाट नपुग्ने हुन आएमा नपुग जति जग्गाको ऐन बमोजिम लाग्ने तिरो लिनु पर्छ । जरिबाना लाग्दैन मोहीले चापेको धनीले थाहा नपाएकोमा र गुठी जग्गाबाट सरकारी जग्गा चापी खाएकोमा समेत जग्गा कट्टा हुँदैन । तिरो लिई मोहीले चापेकोमा एक सालका धनी बोटी बमोजिम जरिबाना गरी र गुठी जग्गाले चापेकोमा चाप्नेबाट सो जग्गाको तिरो र तिरोको विगो बमोजिम जरिबाना गरी साँध सच्याई दिनु पर्छ- - - ३

५ नं. ॥ ॥ सरकारी जग्गा दबाई वा चापी खानेलाई खानेको जीउ छदै नालिस परी चापी वा दबाई खाएको ठहरेमा सो चापी वा दबाई खाएको जग्गाको तिरोको विगो लिनु पर्दा दश वर्षभन्दा बढी सालको खाएको भएपनि दश वर्षको मात्र र घटी भए जति साल दबाई खाएको ठहरेकोछ उति सालको लिनु पर्छ । चापी वा दबाई खाने मरी उसका छोरा नाति हकदारले मुद्दा सकार गरेमा वा दबाई चापी खाने मरी उसका छोरा नाति हकदार वा जग्गा कमाई खाई रहनेका नाउँमा नालिस परी मुद्दा फैसला भएमा समेत दुई वर्षदेखि बढी दबाई चापी खाएको भएपनि दुई वर्षको मात्र विगो लिनु पर्छ ।

६ नं. ॥ ॥ सरकारी जग्गा चापी मिची दबाई खाएको ठहरी किपटबाट कट्टा भई र दबाई चापेको ठहरी झिकिने र तालुकदारी समेत दिनेमा दबाए तापनि जग्गा तालुकदारी नजाने सरकारी लिखत भइरहेको ठाउँमा सो बमोजिम हुन्छ । सो नभएको ठाउँमा देहायमा लेखिए बमोजिम गरी तिरो ठेकी दर्ता गरी दिनु पर्छ - - - -

किपटबाट मिची खाएको ठहरेकोमा सो किपटबाट कट्टा भएको र तिरो भरो नगरी दबाई खाएकोबाट दर्ता हुन आएको जग्गामा अरुले कमाई खाएको जग्गा जति सोही कमाई खानेकै नाममा दर्ता गरी तालुकदारीसम्म जाहेरवालालाई दिनु पर्छ । सो बाहेक मिची दबाई जग्गा खाइरहने आफैले कमाई खाएको जति जग्गाको जम्मा मध्ये किपटबाट कट्टी भै आएजति जम्मै र मिचेको सरकारी जग्गामा आधी समेत सो मिची खानेका नाममा र सो मिची खाएको सरकारी जग्गा मध्येको आधी र अरु तिरो भरो नगरी दबाई खाएकोबाट दर्ता हुन आएकोमा समेत आधा जाहेरवालाका नाउँमा र आधा सो तिरो भरो नगरी खाइरहनेका नाउँमा र तालुकदारले दबाई खाने खुवाउने कसूर गरेकोमा त्यसको तालुकदारी समेत जारेहवालाकै नाउँमा दर्ता गरी दिनु पर्छ । ⏭... ... - - - - - - - - - - - - - - - - - - - - - - - - १

---

⏭ सातौं संशोधनद्वारा झिकिएको ।

माथि १ दफामा लेखिए बमोजिम जाहेरवालालाई र जग्गा खाइरहनेलाई समेत गरी जग्गा छुट्याई दिंदा सो जग्गा खाइरहनेले घरवारी गरी खाई आएको रहेछ भने उसले पाउने जग्गा जति त्यसैको घर पायक मिल्ने गरी एकै चक्ला पर्ने गरी र घरवारी गरी बसेको नभएपनि दुवैलाई एक चक्ला पर्ने गरी चक्ला मिलाई छुट्याई दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

७ नं. ॥ ॥ ✻... ... ...

८ नं. ॥ ॥ पोल उजूर गरी सावित गराई दिने जाहेरवालालाई ऐनले तालुकी पाउनेमा तालुकदारी दिंदा रैती रोजाई धेरै रैतीले रोजे कानून बमोजिम कबुलियत गराई दामकाम नबिग्रने गरी तालुकदारी दिनु पर्छ । रैती रोजाउँदा कसैले पनि रोजेन वा रोज्ने भन्दा नरोज्ने धेरै भयो भने तालुकदारी पाउँदैन । दण्ड सजायको महलको ५० नम्बर बमोजिम हुन्छ ।

९ नं. ॥ ॥ कानून बमोजिम रोक्का भएको जग्गा फुकुवा नभै आफ्नो हक पुग्ने भएपनि अर्कालाई केही व्यहोराले दिन र लिनेले पनि जानी जानी लिन हुँदैन । दिए लिएको भए बदर हुन्छ ।

१० नं. ॥ ॥ सरकारी जग्गा वा तिरो दबाई खायो खुवायो भन्ने समेत नालेस परेमा र दुनियाँ दुनियाँको जग्गामा तेरो मेरो भन्ने नालेस उजूर परी झगडा परेमा समेत सो मामला नछिनी सो झगडा परेको जग्गाको बाली कसैलाई खान दिन भराउन समेत हुँदैन । मुद्दा नछिनुन्ज्याल साल सालको बाली देहायमा लेखिए बमोजिमको हिसाबसँग रोक्का गरी इन्साफ गर्नु पर्छ । मुद्दा छिनिएपछि हक पुग्नेलाई फुकुवा र अड्डामा धरौटी रहेको दिनु पर्ने समेत ऐन बमोजिम जो गर्नु पर्ने ठहर्छ सो बमोजिम गरी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - -

माथि लेखिए बमोजिम नालेस उजूर पर्न आएपछि प्रतिवादी पर्ने अवस्थासम्ममा सो जग्गाको बाली पाकी तयार नहुने भएमा प्रतिवादी परेपछि र प्रतिवादी पर्ने अवस्थादेखि अगावै बाली पाकी तयार हुने अवस्था भएमा प्रतिवादी नपर्दैमा भएपनि तुरुन्त सो ठाउँका 📖गाउँपालिका वा नगरपालिका, जिमिदार, तालुकदार जो छन् उनका नाउँमा वादी प्रतिवादी दुवै थर भए दुबै थरलाई र दुबै थर नभएमा पनि उनका एकाघरका सोह्र वर्ष नाघेका जहान हकदारहरु समेत र उनीहरु पनि कोही नभए नआएमा साँध संधियार भलाद्मी समेत राखी काटी भाँची चुटी माडी जोख तौल माना पाथि समेत जो गर्नु पर्छ गरी दुबै थर झगडियाले पत्याएकोमा उसैको र त्यस्तो नभएमा आफूले पत्याएको माथवर मानिसको जिम्मा लगाई ऐन बमोजिम रीतपूर्वकको सहीछाप परेको तीन प्रति कागज खडा गरी एक प्रति अड्डामा पठाई दिनु एक प्रति रोक्का राख्नेसँग एक प्रति जिम्मा लिनेसँग राख्नु चैत्र पन्ध्र गतेसम्ममा पनि फुकुवाको जनाउ आएन भने बसे दुबै थर झगडिया समेत राखी र नबसेमा अरु भलादमी राखी गाउँ बजारमा चलेको दर भाउले बिक्री गरी नगदी पारी सो जग्गामा लागेको तिरो बुझाउनु पर्ने समेत भए सो ठाउँमा बुझाई बाँकी अड्डामा दाखिल गर्न ल्याउनु भनी रोक्का गर्ने पूर्जी पठाउनु पर्छ । सो पूर्जी बुझिलिनेले पनि लेखिए बमोजिम रोक्का गरी अड्डामा बुझाई भरपाई लिनु पर्छ - १

---

✻ सातौं संशोधनद्वारा खारेज ।

📖 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

माथि १ दफामा लेखिए बमोजिम गरी रोक्का गर्दा रैकर जग्गा वा तिरो दबाई घुसाई खायो खुवायो भन्ने नालिस पर्न आएकोमा तिरो ठेकिएको भए सो तिरो बमोजिम र तिरो ठेकिएकोमा पनि केही कारणले मिनाहा मोजरा हुने भएकोमा र तिरो नठेकिएकोमा समेत उठ्ती उब्जनीको आधा र पाखामा भए सेरमाबाट गाउँ बजारमा चलेका दरले खरीद गर्न पाउने जति बाली र जग्गाको धनी धनीको झगडा परेमा धनी बोटी र मोहीको झगडा परेमा मोही बोटी समेतमा वादी प्रतिवादीमा एक जनाले वा उनाउ वा तालुकदारले समेत जसले कमाएकोछ उसलाई आधा बाली छुट्याई दिई आधा बालीसम्म रोक्का राख्नु पर्छ - - - - - - - - - - २

मुद्दा परेको जग्गाको नालिस परेका सालको बाली झगडियाले नै लगाएकोमा यसले बाली लगाएको हो भनी छुट्टिन नसकी बाली लगाएकै कुरामा दुई थर झगडियाको कुरा नमिली बाझिन आयो भने सो सालको जम्मै बाली रोक्का गरी फैसला हुँदा जसले बाली लगाएको ठहर्छ उसैलाई आधा बाली दिलाई दी बाँकी आधा जित्नेलाई फुकुवा गर्नु वा भराउनु पर्छ - - - - - - - - - - - - - ३

माथि लेखिए बमोजिम मुद्दा परेमा सो जग्गा कमाउनलाई वादी प्रतिवादीमा जसले कमाउन रोज्छ उसैलाई र दुबैले रोजेमा मुद्दा परेको साल जसले कमाएकोछ उसैलाई र दुबैले कबुल नगरेकोमा उनाउ मानिसलाई भएपनि सो ठाउँका रोक्का जिम्मा लिनेले बन्दोबस्त गरी मुद्दा फैसला नभएसम्म जग्गा कमाउन लाउनु पर्छ । सो बमोजिम नगरी जग्गा बाँझो रह्यो भने त्यसै रोक्का जिम्मा लिनेले तिर्नु पर्छ- - ४

माथि १ दफामा लेखिए बमोजिम रोक्का भएको जग्गाको मुद्दा आखिरी टुङ्गो लागी फैसला भएपछि रोक्का गर्ने अड्डाले हक पुग्नेलाई सरकारी असूल गर्नु पर्ने भए असूल गरी बाँकी सो रोक्का बाली बुझाई दिन र दिन लाउनु पर्छ- - - - - - - ५

रोक्का गर्नु पर्नेमा मुद्दा परेका अड्डाबाट माथि लेखिए बमोजिम रोक्काको पूर्जी गरी पठाए पछि सो पूर्जी बुझिलिने समेतले रोक्का नगर्दा हक नपुग्नेले बाली खाएकोमा हक पुग्नेले सो बाली खानेबाट ऐन बमोजिम गरी लिंदा उपर भएन भने सो उपर नभएको जति रोक्का जिम्मा लिनेले तिर्नु पर्छ - - - - - - - - - - - ६

अड्डाबाट रोक्का गर्ने पूर्जी पनि गरी दिएको र सो पूर्जी बुझिलिनेले पनि रोक्का गरी जिम्मा पनि लगाएको जिम्मावारी लिनेले मात्र मासी खाएकोमा दुवै थर झगडियाले पत्याएको मानिसको जिम्मा लगाएको त्यसैले मासी खाएको रहेछ भने त्यसैबाट ऐन बमोजिम गरी विगो भराई विगोको सयकडा बीसका दरले जरिबाना समेत गर्नु पर्छ । त्यस्तामा उपर नभएकोमा जिम्मा लाउनेसँग दावा गरी लिन पाउँदैन । दुबै थरले नरोजेको मानिस जिम्मा लगाएको र त्यसैले मासी खाएकोमा सो मासी खानेबाट ऐन बमोजिम ▣भरी भराउ गरी लिन् पर्छ । सो बमोजिम भरी भराउ गराउँदा पुगेन भने र निजलाई जिम्मा लगाउँदा सो जिम्मा लगाउनेले बदनियतकासाथ जिम्मा लगाएको ठहऱ्यो भने सो नपुग जति सो जिम्मा लगाउनेबाट असूल उपर गरी लिनु पर्छ - - - - - - - - - - - - - - - - - - ७

यो नम्बर बमोजिम रोक्का जिम्मा रहेकोमा रोक्का जिम्मा लिनेले दाखिल गरेको आयस्ता उठ्तीको सयकडा पाँचका दरले निजले पारिश्रमिकको रुपमा खान पाउँछ । सो कटाई बाँकी दाखिल गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - ८

▣ पहिलो संशोधनद्वारा संशोधित ।

११ नं. ॥ ॥ जग्गामा मुद्दा परी रोक्का भएको बाली हक पुग्नेलाई फुकुवा गरी दिंदा वा नगद पारी अड्डैमा रहेको दिंदा समेत दशौंद लाग्दैन ।

१२ नं. ॥ ॥ एकाले खनजोत गरेको जग्गामा होस् बीज लगाईसकेकोमा होस् अर्काको बीज उल्टाई खनजोत गर्न पनि हुँदैन । बीज मिसामिस गर्न पनि हुँदैन । अर्काले लाएको बाली लुटी जबरजस्ती गरी लिन पनि हुँदैन । नालिस गरी हक बेहक छुट्याई मात्र लिन हुन्छ ।

१३ नं. ॥ ॥ जग्गाको बाली भराउनु पर्दा स्थानीय भलाद्मी र संधियार बुझी मुचुल्का लिई त्यस जग्गाको उब्जनी बाँधी बाली भराउनु पर्छ ।

१४ नं. ॥ ॥ आफ्नो हक नपुग्ने जग्गालाई मेरो भनी पक्रनेलाई वा अर्काको जग्गालाई जबरजस्ती गरी कब्जा गर्नेलाई जग्गाको मोल विगोको सयकडा अढाई रुपैयाँको दरले जरिबाना गर्नु पर्छ ।

१५ नं. ॥ ॥ आफ्नो हक नपुग्ने जग्गामा केही कुरा गरी बाली बिगारिदिन हुँदैन ।

१६ नं. ॥ ॥ बालीमा दैवी परेमा सो जग्गाको तिरो बुझाउनु पर्ने ठाउँमा कानूनका म्यादभित्र दरखास्त उजूर गरी जाँच गराउनु पर्छ । सो बमोजिम नगरी बाली काटेको भए दैवी पऱ्यो भनी कूत तिरो मिनाहा पाउन सक्दैन ।

१७ नं. ॥ ॥ जग्गामा दैवी परी कूत तिरो साबूद नउठ्ने भयो भन्न आयो भने बिग्रिएका जग्गाको साबूद कूत तिरो बुझाउनै पर्छ भन्न हुँदैन । मिनाहा दिई वा अधिया गरी लिनु पर्छ ।

✂१८ नं. ॥ ॥ रोक्का भएको जग्गा लिए दिएको र जग्गा दपोट वा तिरो दपोट गरेको कुरामा बाहेक अरु जग्गाको कुरामा थाहा पाएको मितिले छ महिनाभित्र कूत बालीको कुरामा तीन वर्षभित्र र जग्गाको झगडा परेको बालीको हकमा जग्गाको हक छुट्टिई अन्तिम किनारा भएको मितिले एक वर्षभित्र नालेस नदिए लाग्न सक्तैन ।

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

# महल ११

## घर बनाउनेको

१ नं. ॥ ॥ घर बनाउँदा आफ्नो हक नपुग्ने जग्गा मिची घर बनाउन हुँदैन । घर बनाउँदा बलेनी अर्काका जग्गामा परे जग्गा धनीले रोक्न हुँदैन । जग्गा धनीले त्यसै जग्गामा तला उठायो वा घर बनायो भने त्यो बलेनी काटी बनाउन पाउँछ । काट्न नदिई रोक्न हुँदैन ।

२ नं. ॥ ॥ घर बनाउँदा सडक ढल मिची बनाउन हुँदैन । मूल बाटोमा पानी खस्ने गरी ड्रूंड राख्न पनि हुँदैन ।

३ नं. ॥ ॥ अघिदेखि चली आएको वा दिई आएका ठाउँको निकास कसैले थुन्न हुँदैन । अघिदेखि नचलेको वा दिई नआएका ठाउँमा जबरजस्ती गरी लिन, चलन गर्न पनि हुँदैन ।

४ नं. ॥ ॥ आफ्नो हक नपुगेको जग्गामा होस् वा झगडा परिरहेको जग्गामा होस् त्यस्ता जग्गामा घर बनाउनु हुँदैन । जबरजस्ती घर बनाएमा सो बनाएको घरको पञ्चकृति मोल जग्गाधनीबाट लिई घर छाड्नु वा घर भत्काई छ महिनाभित्र लगी जग्गा खाली गरी दिनु पर्छ । जग्गा धनीले पञ्चकृति मोल तिरी लिन मञ्जुर नगरी वा घर बनाउनेले पञ्चकृति मोल लिई दिन मञ्जुर नगरी घरै भत्काई लगेमा जग्गा धनीलाई घरको पञ्चकृति मोलको सयकडा पाँच घर बनाउनेले दिनु पर्छ । छ महिनाभित्र घर भत्काई लगेन भने म्याद नाघेपछि सो घर भत्काई लग्न पाउँदैन जग्गाका धनीको हुन्छ । ऐन बमोजिम नक्सा पास गरी बनाउनु पर्ने ठाउँमा नक्सा पास भै जग हाली बनाउन शुरु भएको घर बनाउने काम रोक्का गर्न हुँदैन ।

५ नं. ॥ ॥ कुनै व्यहोराले मानिस बस्न नहुने गरी घर भत्कन लागेको वा भत्केको सम्बन्धित अधिकारीले देखेमा वा जाहेर गर्न आएमा जाँच्दा ठहरेमा वर्षा चार महिना बाहेक अघि पछि घरका धनीका नाउँमा सो धमीरा लागी भत्केको घरले अरु घरको पनि नोक्सानी गर्ने हुनाले आजका छ महिनाभित्र सफाई गराई घर बनाउनु भन्ने पूर्जी टाँसी दिनु पर्छ र म्यादभित्र बनाएन भने म्याद नाघेपछि सो घर बारी समेतको पञ्चकृति मोल गराई म्याद टाँसी बढाबढ गराई जसका नाउँमा खतम हुन्छ उसबाट आएको मोल सो घरवारी जग्गाको हक पुग्नेलाई दिलाई दिनु पर्छ ।

६ नं. ॥ ॥ पाको ईटको वा ढुङ्गाको गाह्रो लगाई जेसुकै छाना गरी र छाना नहाले पनि ईट पत्थर बज्र ठोकी मुंडा गरी बनाएको घर पक्की र लेखिए बाहेक अरु किसिमसँग बनाएको घर कच्ची हुन्छ ।

७ नं. ॥ ॥ रैकर राजगुठी गैह्रमा बनेका अर्काका घर पसल इत्यादिमा बहाल तिर्ने गरी वा नतिर्ने गरी त्यसै बस्नेले जग्गा कमाउने मोहीया सरह कुनै व्यहोरासँग अरुलाई दिन लिन र ती बहालमा बस्नेको सर्वस्व जायजात हुँदा पनि बहालमा बसेको घर पसलहरु जान सक्तैन ।

८ नं. ॥ ॥ घर पसलका धनीले बहाल लिने गरी वा नलिने गरी आफ्नू घर पसलमा अरुलाई बस्न दिंदा म्याद किटी लिखत गरी गराई बस्न दिएकोमा लिखतै

बमोजिम हुन्छ । बीचमा उठाउन हुँदैन । यस बखत छाडी दिनु भन्ने शर्त नगरी बसेकालाई भने पाँच वर्षसम्म उठाउन हुँदैन । धनी हकदार आफूहरु नै बस्नलाई चाहिने भयो वा बहालमा बस्नेले घर पसलको धनीका विरुद्ध नैतिक पतन देखिने कुनै फौजदारी अपराध गरेको ठहर्‍यो भने लिखत भएपनि उठाउन पाउँछ । आफूहरु बस्नलाई भनी बहाना गरी वा अत्तो लगाई उठाउन र अरुलाई राख्न भने पाउँदैन । आफूहरु बस्नलाई भनी उठाई पठाएका तीन वर्षभित्र अरुलाई राखेमा सो राखेका मितिले पैंतीस दिनभित्र अघि बस्नेले बस्न पाउँ भनी उजूर गरे उसैलाई बस्न दिनु पर्छ ।

९ नं. ॥ ॥ घर पसलबाट बसिरहेका मानिसलाई कुनै व्यहोराले उठाउन पर्ने भएमा पैंतीस दिन अगावै घर पसल छाडी खाली गरी दिनु भनी जनाउ दिई मात्र उठाउनु पर्छ । लेखिएका म्याद अगावै जनाउ नदिई त्यसै उठाउन हुँदैन ।

१० नं. ॥ ॥ ढल मिची घर बनाउनेलाई त्यसैको खर्चबाट सो मिचेको ढल बनाउन लगाई त्यसै खर्चको विगोको सयकडा दश जरिबाना गर्नु पर्छ ।

११ नं. ॥ ॥ जग्गा मिची घर बनाएकोमा घर तैयार भएको मितिले एक वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल १२

## लोग्ने स्वास्नीको

१ नं. ॥ ॥ विहावरीको महलको २ नम्बरको ⌛९ दफामा ◎वा ४ नम्बरमा लेखिएको र देहायको अवस्थामा बाहेक लोग्ने स्वास्नीको सम्बन्ध विच्छेद हुन सक्दैन । त्यस्तो अवस्था परी सम्बन्ध विच्छेद गर्नु परेमा पनि कारण खोली निवेदन गरी अड्डाबाट निर्णय भएपछि सो निर्णय बमोजिम मात्र सम्बन्ध विच्छेद हुन सक्तछ -

स्वास्नीले लोग्नेलाई निजको मञ्जुरी बेगर लगातार तीन वर्ष वा सो भन्दा बढी समयदेखि छोडी अलग बस्ने गरेमा वा लोग्नेको ज्यान जाने, अङ्गभङ्ग हुने वा अरु कुनै ठूलो शारीरिक ⊥वा मानसिक कष्ट हुने किसिमको काम वा जाल प्रपञ्च गरेमा ⊥वा स्वास्नीलाई निको नहुने यौन सम्बन्धी कुनै रोग लागेमा वा 🗐................ स्वास्नीले परपुरुषसँग करणी गराएको ठहरेमा त्यस्ती स्वास्नीसित लोग्नेले आफ्नो सम्बन्ध विच्छेद गर्न पाउँछ - - - - - - - - - - - - - - - - - १

लोग्नेले अरु स्वास्नी ल्याएमा वा राखेमा वा स्वास्नीलाई घरबाट निकालेमा वा खान लाउन नदिएमा वा स्वास्नीको खोज खबर नलिई हेरविचार नराखी लगातार तीन वर्ष वा सो भन्दा बढी समयदेखि स्वास्नीलाई छोडी अलग बस्ने गरेमा वा स्वास्नीको ज्यान जाने, अङ्गभङ्ग हुने वा अरु कुनै ठूलो शारीरिक ⊥वा मानसिक कष्ट हुने किसिमको काम वा जाल प्रपञ्च गरेमा वा लोग्ने नपुंसक हुन गएमा ⊥वा लोग्नेलाई निको नहुने यौन सम्बन्धी कुनै रोग लागेमा वा लोग्नेले परस्त्रीसँग करणी गरेको ठहरेमा vवा जबरजस्ती करणीको महलको ३ नम्बरको दफा ६ बमोजिम लोग्नेले स्वास्नीलाई जबरजस्ती करणी गरेको ठहरेमा त्यस्तो लोग्नेसित स्वास्नीले आफ्नो सम्बन्ध विच्छेद गर्न पाउँछे - - - - - - - - - - - - - - - - - २

लेखिए बाहेक अरु अवस्थामा दुबै थरीको मञ्जुरी भएमा लोग्ने स्वास्नीको सम्बन्ध विच्छेद गर्न हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

➔१क नं. ॥ ॥ यसै महलको १ नम्बरको १ दफा बमोजिम सम्बन्ध विच्छेद गर्न चाहने पक्षले वा ३ दफा बमोजिम दुबैको मञ्जुरीले सम्बन्ध विच्छेद गर्न चाहेमा लोग्ने स्वास्नी दुबैले सम्बन्धित 🕮गाउँपालिका वा नगरपालिकामा निवेदन गर्नु पर्नेछ र गाउँपालिका वा नगरपालिकाले पनि दुबैथरिलाई भरसक सम्झाई बुझाई मेलमिलाप गराई दिनु पर्छ । त्यसरी सम्झाउँदा बुझाउँदा पनि मेलमिलाप हुन नसकेमा र विवाह कायम राख्नुभन्दा सम्बन्ध विच्छेद गराउनु श्रेय भएमा निवेदन परेको एक

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

🗐 लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

v लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

➔ छैठौं संशोधनद्वारा थप ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

वर्षभित्र आफ्नो राय समेत संलग्न गरी प्राप्त निवेदन सम्बन्ध विच्छेद गर्न अधिकार भएको सम्बन्धित जिल्ला अदालतमा पठाउनु पर्छ ।

⌛२ नं. ॥ ॥ स्वास्नीले अर्कोसँग विवाह गरेमा त्यस्तो लोग्ने स्वास्नीको सम्बन्ध स्वत: विच्छेद हुन्छ ।

α३ नं. ॥ ॥ ऐन बमोजिम लोग्ने स्वास्नीको सम्बन्ध विच्छेद भएको मितिले दुईसय बहत्तर दिनभित्र जन्मेको सन्तान अन्यथा प्रमाणित नभएमा सो सम्बन्ध विच्छेद भएको लोग्नेकै सन्तान ठहर्छ । त्यस्ता सन्तान र पाँच वर्ष नपुगेका वा पाँच वर्षदेखि माथिका नाबालक पाल्ने विषयमा देहाय बमोजिम हुन्छ - - - - - - - - - -

❒नाबालकलाई आमाले आफै पाल्न चाहेमा निजैले र निजले पाल्न नचाहेमा बाबुले पाल्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

▤.................. - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

यस नम्बरको १ ▤........ दफामा जुनसुकै कुरा लेखिएको भए तापनि आमा बाबु दुवैको मञ्जुरी भएमा त्यस्तो नाबालकलाई आमा बाबुमध्ये कुनैले वा आलो पालो गरी पाल्न पाउँछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

आमा बाबुमध्ये जोसुकैले पाले पनि नाबालकको अहित हुने अवस्था वा त्यस्तो अहित हुने मनासिब आशङ्का नभएमा पाल्ने आमा बाबुले नपाल्ने आमा वा बाबुलाई बीच बीचमा नाबालकसँग भेटघाट गर्ने मौका दिनु पर्छ । त्यस्तो मौका ⌛अर्को विवाह गर्ने आमाले पनि पाउँछ - - - - - - - - - - - - - - - - - - - - ४

λआमाले पाल्दा बाबुले आफ्नो इज्जत आमद अनुसार नाबालकलाई खान, लाउन, शिक्षा र औषधि उपचार समेतको मनासिब खर्च दिनु पर्छ । आमाले नपाली बाबुले त्यस्तो नाबालक पालेको रहेछ र बाबुभन्दा आमाको आयस्ता बढी रहेछ भने अड्डाले अवस्था विचार गरी आदेशद्वारा तोकिदिए बमोजिम त्यस्तो स्वास्नीमानिसले पनि नाबालकको खान, लाउन, शिक्षा र औषधि उपचारको खर्च व्यहोर्नु पर्छ - - - ५

४ नं. ॥ ॥ सासु ससुरा समेत भै वा लोग्नले मात्र खान लाउन नदिई घरबाट निकाला गरेको वा ◗........ कुटपीट गरी दु:ख दिने गरेको वा लोग्नेले अरु स्वास्नी ल्याए वा राखेकोमा त्यस्ती स्वास्नीले लोग्नेको अंशबाट आफ्नो अंश छुट्याई लिन पाउँछे । ⌛त्यस्ती स्वास्नीमानिस मरेमा वा निजले अर्को विवाह गरेमा उसले खाईलाई बाँकी रहे जति हकवालाको हुन्छ । सासू ससुराले मात्र निकाला गरेकोमा इज्जत आमद अनुसार खान लाउन दिनु पर्छ ।

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

α छैठौं संशोधनद्वारा संशोधित ।

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

▤ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

λ नवौं संशोधनद्वारा संशोधित ।

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

[⌶]४क. नं. ॥    ॥ यस महलको १ नम्बर बमोजिम लोग्ने र स्वास्नीको सम्बन्ध विच्छेद हुने भएमा अदालतले निजहरुबीच अंशबण्डा गर्न लगाएर मात्र सम्बन्ध विच्छेद हुने निर्णय गर्नु पर्छ । सम्बन्ध विच्छेद हुने लोग्नेमानिसले नै अंश लिई नसकेको अवस्थामा अदालतले तायदाती माग गरी अंशियारहरुबीच अंशबण्डा गर्न आदेश दिई त्यस्तो लोग्नेमानिसको भागमा पर्ने अंश र सो अंशबाट सम्बन्ध विच्छेद गर्ने स्वास्नीमानिसले पाउने अंशको अन्जाम गरी अंशबण्डा नभएसम्मको लागि त्यस्ती स्वास्नीमानिसको जीविकाको निमित्त मासिक रुपले खर्च भराई दिनु पर्छ । अंशबण्डा भैसकेपछि सम्बन्ध विच्छेद भएकी स्वास्नीमानिसको अंशमा परेको सम्पत्तिमा निजको हक हुनेछ । त्यस्ती स्वास्नीमानिसले अर्को विवाह नगरेमा वा अर्को विवाह गरेको भएपनि कुनै सन्तान नभएमा निजको शेषपछि निजले पाएको त्यस्तो सम्पत्ति अघिल्लो लोग्नेपट्टिका सन्तान भए त्यस्ता सन्तानले र त्यस्ता सन्तान नभए अघिल्लो लोग्नेले पाउनेछ ।

[⊥]४ख. नं. ॥  ॥ यस महलको ४क. नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि सम्बन्ध विच्छेद हुने स्वास्नीमानिसले अंश नलिई सो बापत लोग्नेसँग वार्षिक वा मासिक खर्च भराई लिन चाहेमा अदालतले त्यस्ती स्वास्नीमानिसलाई लोग्नेको सम्पत्ति र आयस्ताको आधारमा वार्षिक वा मासिक खर्च भराई दिनु पर्छ । लोग्नेले त्यस्तो खर्च त्यस्ती स्वास्नीमानिसले अर्को विवाह नगरेसम्म मात्र भर्नु पर्छ ।

[⊥]४ग. नं. ॥  ॥ यस महलको १ नम्बर बमोजिम सम्बन्ध विच्छेद भएकोमा दफा ४क. बमोजिम बण्डा गर्नु पर्ने कुनै सम्पत्ति नभई लोग्नेबाट अंश नपाएकी स्वास्नीमानिसले लोग्नेबाट खान लाउन खर्च भराउन चाहेमा र त्यस्तो लोग्नेको आम्दानी आयस्ता भएमा अदालतले त्यस्ती स्वास्नीमानिसलाई लोग्नेको आयस्ताको आधारमा खान लाउन खर्च भराई दिनु पर्छ। लोग्नेले त्यस्तो खर्च त्यस्ती स्वास्नीमानिसले अर्को विवाह नगरेसम्मको लागि मात्र भर्नु पर्छ ।

[◎]५ नं. ॥    ॥ महिलाको दाइजो, पेवा वा स्त्री अंशधनको सम्पत्ति मास्दा अंश नभई एकाघरसँग बसेका अरु अंशियारहरु समेत रहेछन् भने उमेर पुगेको सबै अंशियारहरुको मञ्जुरीको लिखत भएमा वा त्यस्तो लिखत नभए पनि निजहरुको सहमति बमोजिम त्यस्तो सम्पत्ति मासिएको प्रमाणित भएमा  सो मासेको दाइजो, पेवा वा स्त्री अंशधनको सम्पत्ति लेनदेन व्यवहारको महल बमोजिम सबै अंशियारहरुको गोश्वारा धनबाट सोधभर्ना हुन सक्छ ।

[◎]५क. नं. ॥ ॥ कसैसँग आफ्नो नाता सम्बन्ध कायम गराई माग्न नालिस गर्न हुन्छ । नाबालक भए अरु हकवालाले समेत त्यस्तो नाबालकको नाता सम्बन्ध कायम गराई माग्न नालिस गर्न हुन्छ ।

६ नं. ॥     ॥ यस महलको १ नम्बरमा लेखिएको र जारीको कुरा बाहेक अरु कुरामा भए गरेका मितिले एक वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

⊥ एघारौं संशोधनद्वारा थप ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

# महल १३

## अंश बण्डाको

⌛१ नं. ॥ ॥ ◗............ अंशबण्डा गर्दा यस महलका अन्य नम्बरहरुको अधीनमा रही बाबु, आमा, लोग्ने, स्वास्नी, छोरा, छोरीहरुको जीयजीयैको अंश गर्नु पर्छ ।

✂१क. नं. ॥ ॥ ............

२ नं. ॥ ॥ यस महलमा अन्यथा लेखिएमा बाहेक यसै महलको १ नम्बर बमोजिम अंशबण्डा गर्दा अंश पाउने सबैको बराबर अंश गर्नु पर्छ ।

◎३ नं. ॥ ॥ सँग बसेका दाजुभाइ तथा दिदी बहिनीका छोरा छोरीहरुमा आफ्नो आफ्नो बाबु वा आमाको मात्र अंश हुन्छ ।

◎४ नं. ॥ ॥ यो नम्बर प्रारम्भ हुँदाका बखत कसैका एकभन्दा बढी स्वास्नी मात्र रहेछन् भने सबै स्वास्नीले आफ्ना लोग्नेको अंश ऐन बमोजिम बाँडी खान पाउँछन् ।

⌛५ नं. ॥ ॥ अंश नहुँदै लोग्ने वा बाबु मरेमा निजले पाउने अंश स्वास्नी वा छोराछोरीले पाउँछन् ।

⊥५क. नं. ॥ ॥ विहावरीको महल बमोजिम विवाह बदर भएकोमा त्यस्ता दम्पतीबाट जन्मिएका छोराछोरीले निजहरुबाट अंश पाउँछन् ।

६ नं. ॥ ॥ ❖.............

७ नं. ॥ ॥ कुनै खास लोग्ने नतुल्याई बसेकी स्वास्नीबाट जन्मेका सन्तानले बाबुको ठेगान नलागेमा आमाको सम्पत्तिमा मात्र अंश पाउँछन् ।

✂८ नं. ॥ ॥ ................

✂९ नं. ॥ ॥ ................

⌛१० नं. ॥ ॥ बाबु आमाको जीउ छउञ्जेल अंश दिन छोराछोरीले बाबु आमालाई वाध्य गराउन सक्ने छैनन् । म अहिले छुट्टिन्न भन्ने छोराछोरीलाई बाबुआमाले कर लगाई छुट्याउन पनि हुँदैन । स्वास्नीले पनि लोग्नेको जीउ छउञ्जेल लोग्नेको मञ्जुरी विना अंश लिई छुट्टिन पाउँदिन । लोग्ने वा बाबु आमाले स्वास्नी वा छोराछोरीलाई इज्जत आमद अनुसार खान, लाउन र आवश्यकता अनुसार उचित शिक्षा

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

❖ छैठौं संशोधनद्वारा खारेज ।

दिक्षा र स्वास्थ्य उपचारको व्यवस्था गर्नु पर्छ । सो नगरे अंश दिनु पर्छ । लोग्ने स्वास्नीको ४ नम्बरमा लेखिएको कुरामा भने सोही बमोजिम हुन्छ ।

⊠१०क. नं. ॥ ॥ ... ... ...

➔१०ख. नं. ॥ ॥ ऐन बमोजिम बाबु आमा ⧖छोराछोरीहरुको अंशबण्डा गर्दा बाबु आमा कुनै छोरा वा छोरीसँग बस्न चाहेमा सो कुरा बण्डापत्रमा नै खुलाउनु पर्छ र त्यस्तो छोरा वा छोरीले बाबु आमालाई सँग राखी हेरचाह गर्नु पर्छ । बृद्ध बाबु आमाको आफ्नो आयस्ताले नै खान लाउन नपुगे वा हेरचाह गर्न सँग बसेका छोरा वा छोरी वा छोराको छोरा कोही नभए भिन्न बसेका छोरा वा छोरीले पनि आफ्नो इज्जत आमद अनुसार खान लाउन दिई हेरचाह गरी राख्नु पर्छ ।

⧖१०ग. नं. ॥ ॥ फैसला बमोजिम अंश, रकम वा खर्च पाउने भएकी स्वास्नीमानिसले अंश, रकम वा खर्च नपाएमा सो व्यहोरा खुलाई मुद्दा छिन्ने अड्डामा दरखास्त दिएमा पक्षहरु उही रहेछन् भने अड्डाले अंश, रकम वा खर्च नदिनेलाई पाँच हजार रुपैयाँसम्म जरिबाना वा एक महिनासम्म कैद वा दुवै सजाय गरी फैसला बमोजिम यथाशक्य छिटो अंश, रकम वा खर्च दिलाई दिनु पर्छ ।

११ नं. ॥ ॥ अंश लिई बेग्लै भएपछि आफ्नो र कोही ◎स्वास्नी, छोराछोरीको अंश समेत मिसाई सँग राखेको रहेछ भने पछि अरु स्वास्नी ल्यायो वा छोरा ⊥छोरी जन्मे भने सँग बसेकाहरुको अंश जीउनी जम्मा गरी सँग बसेका र पछि ल्याए जन्मेका ◎स्वास्नी, छोराछोरीलाई ऐन बमोजिम अंश गरी दिनु पर्छ । आफ्नो अंश लिई बेग्लै भएपछि अर्को स्वास्नी ल्यायो वा छोरा ⊥छोरी जन्मे भने पछि ल्याए जन्मेकोले लोग्ने वा बाबुको अंश जीउनी सबै खान पाउँछन् । पछि ल्याए जन्मेकाले अघि अंश लिई पर सरेकोसँग अंशमा दैया गर्न पाउँदैन ।

⧖१२ नं. ॥ ॥ विधवा स्वास्नीमानिसले चाहेमा आफ्नो अंश लिई भिन्न हुन पाउँछे । सन्तान नभएका विधवा वा विधुरले अर्को विवाह गरेमा निजले आफ्नो अंश आफूखुस गर्न पाउँछन् । सन्तान भएका विधवा वा विधुरले अर्को विवाह गरेमा सन्तान नाबालक भएसम्म त्यस्ता सन्तानको पालनपोषण र शिक्षादिक्षाको व्यवस्था सोही सम्पत्तिबाट गर्नु पर्छ । सो काममा बाहेक त्यस्तो सम्पत्ति बण्डा र बेचबिखन गर्न पाउँदैनन् । सन्तान साबालक भएपछि आफ्नो अंशभाग आफूखुस गर्न पाउँछन् । त्यस्ती विधवाले अर्को विवाह गरी कुनै सन्तान नभएमा निजको शेषपछि निजले पाएको त्यस्तो सम्पत्ति अघिल्लो लोग्नेपट्टिका कुनै सन्तान भए त्यस्ता सन्तानले र त्यस्ता सन्तान नभए अघिल्लो लोग्नेपट्टिको हकवालाले पाउँछ ।

१३ नं. ॥ ॥ हकवालाले ऐन बमोजिम रीतसँग राखेकी अंश नलिएकी विधवा स्वास्नीमानिस आफ्ना घर नबसी अन्यत्रै गै बस्दा यस्ती विधवाले लाएको ऋण अपुताली खानेले तिरिदिनु पर्दैन ।

---

⊠ एघारौं संशोधनद्वारा खारेज ।

➔ छैठौं संशोधनद्वारा थप ।

⧖ एघारौं संशोधनद्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

१४ नं. ॥ ॥ बाबु लोग्नेका शेषपछि अंश गर्दा उसको काजक्रिया गरी बाँकी रहेको सँग बसेका र बेग्लै बसेका समेत सबै [⌛]छोराछोरी स्वास्नीसितका बाबु बाजे लोग्नेका आर्जनको ऋण धनमा सबै स्वास्नी [⌛]छोराछोरीहरुलाई ऐन बमोजिम बाँडिदिनु पर्छ । बाबुका शेषपछि पनि कोही [⌛]छोराछोरी आमासित सँग बसेका रहेछन् वा कोही पनि सँग बसेका रहेनछन् आफ्नो चित्त बुझी अंश नखोजी बेग्ला बेग्लै बसेका रहेछन् र आमा मरेपछि अंश गर्न पर्‍यो भने पनि आमाको काज क्रिया गरी बाँकी रहेको सबैसितका बाबु बाजेको आर्जनका ऋण धनमा ऐन बमोजिम सबै [⌛]छोराछोरीलाई बाँडिदिनु पर्छ । मानो छुट्टेपछिको ऋण धनमा ऐन बमोजिम गर्नु पर्छ ।

१५ नं. ॥ ॥ अंश बण्डामा घटी बढी गरी लिनु दिनुलाई जीउनी भन्दछन् । जीउनी दिंदा उसले पाउने अंशभन्दा सयकडा पाँचसम्म बढ्ता दिएको सदर हुन्छ । जीउनी लिई दिइसकेपछि अंशै गरी पाउँ भनी यसै महलका ३२ नम्बरका म्यादभित्र उजूर गरे सो जीउनी समेत मिसाई ऐन बमोजिम अंश गरी दिनु पर्छ ।

१६ नं. ॥ ॥ [🗐]......................

१७ नं. ॥ ॥ विवाह नभएका छोरा छोरीको विवाह खर्च पर सार्दा विवाह नभएका छोराछोरी धेरै भएपनि थोरै भएपनि जम्मा धन सम्पत्ति दुई हजारदेखि बढ्ता ठहरे सयकडा पाँच, दुई हजारदेखि मुनि एक हजारसम्म धन सम्पत्ति ठहरे सयकडा दश, एक हजारदेखि घटी धन सम्पत्ति ठहरे सयकडा बीसका दरले विवाह खर्च पर सारी जस्तो हिसाबको अंश पाउँछ सोही हिसाबसित दामासाही गरी विवाह खर्च पनि बाँडिदिनु पर्छ लेखिए बमोजिम बण्डा गर्दा विवाह खर्च पाउने एक जवान मात्र र अंश पाउने अंशियार धेरै जवान भई अंशियारले पाउने अंशभन्दा विवाह खर्च धेरै पाउने भएमा अंशियार एक जनाले पाउने अंशको चार खण्डको तीन खण्डसम्म विवाह खर्च पाउँछ बढी पाउँदैन भाइ भाइको अंश गर्दामा भए भाइ भाइको छोरा छोरीहरुलाई विवाह खर्च पर सार्नु पर्दैन ।

[✂]१८ नं. ॥ ॥ मानो नछुट्टिई सँग बसेका अंशियार छन् भने जुनसुकै अंशियारले सगोलको सम्पत्तिबाट वा सगोलको खेती, उद्योग, व्यापार व्यवसायबाट बढे बढाएको सगोलको आर्जन र लेनदेन व्यवहारको महलको ८ नम्बर बमोजिम लगाएको ऋण सबै अंशियारलाई भाग लाग्छ । सो बाहेक कुनै अंशियारले आफ्नो ज्ञान वा शीप वा प्रयासबाट निजी आर्जन गरेको वा कसैबाट निजी तवरले दान वा बकस पाएको वा कसैको अपुताली परेको वा स्त्री अंश धनको महलको ५ नम्बर बमोजिम पाएकोमा त्यस्तो आर्जन वा पाएको सम्पत्ति सो आर्जन गर्ने वा पाउने अंशियारको निजी ठहरी आफू खुशी गर्न पाउँछ । बण्डा गर्न कर लाग्दैन । अंश नभएपनि मानो छुट्टिई भिन्न बसेका वा रजिष्ट्रेशन नगरी खती उपति आफ्नो आफ्नो गरी आफ्नो हिस्सासँग मात्र राखी खानु पिउनु गरेकोमा एकै ठाउँमा भएपनि मानो छुट्टिई भिन्न भएको ठहर्छ । त्यस्तो कमाएको धन लाएको ऋण आफ्नो आफ्नो हुन्छ ।

---

[⌛] एघारौं संशोधनद्वारा संशोधित ।

[🗐] लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

[✂] सातौं संशोधनद्वारा संशोधित ।

१९ नं. ॥ ॥ अंश नलिएका स्वास्नी, छोरा ◎एकासगोलका छोरी वा विधवा बुहारी हुने मानिसको चल अचल सम्पत्तिमा देहायमा लेखिए बमोजिम हुन्छ -

पिता पुर्खाका पालाको चल अचल गैह्र सम्पत्तिको हकमा चलमा सबै र अचलमा आधीसम्म व्यवहार चलाउनालाई स्वास्नी, छोरा ◎एकासगोलका छोरी वा विधवा बुहारीको मञ्जुरी नभएपनि आफू खुश गर्न पाउँछ । अचलमा आधीभन्दा बढी भने व्यवहार चलाउनै परे पनि एक्काईस वर्ष नाघेका स्वास्नी, छोरा ◎एकासगोलका छोरी र विधवा बुहारीहरुको मञ्जुरी लिई मात्र खर्च गर्न हुन्छ । मञ्जुरी नलिई गरेको सदर हुँदैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

आफ्ना पालामा आर्जेको चल अचल सबै एक स्वास्नी वा एक स्वास्नीपट्टिका छोरा ◎एकासगोलका छोरी मात्र भएकाले वा अरु छोरा ◎एकासगोलका छोरी स्वास्नी मरी त्यस्तो अवस्था हुन आएकाले पनि आफ्नो खुश गर्न पाउँछ । एकदेखि बढ्ता स्वास्नी वा एक स्वास्नीदेखि बढ्ता स्वास्नीपट्टिको छोरा ◎एकासगोलका छोरी वा एउटा स्वास्नी र अर्को स्वास्नीपट्टिका छोरा ◎एकासगोलका छोरी भएकाले सो भएका अवस्थामा भने मन परेका स्वास्नी छोरा ◎एकासगोलका छोरीलाई दिन बाहेक आफ्नो खुशी गर्न पाउँछ । मन परेका कोही स्वास्नी छोरा ◎एकासगोलका छोरीलाई मात्र बकस समेत केही व्यहोरा गरिदिन भने हुँदैन । सबै स्वास्नी छोरा ◎एकासगोलका छोरीलाई ऐनले पाउने भाग बमोजिम दिएको भए मात्र सदर हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

माथि दफा दफामा लेखिए बमोजिम आफू खुशी गर्न पाउनेमा स्वास्नी, छोरा, ◎एकासगोलका छोरी र विधवा बुहारीको मञ्जुरी नभए पनि र खुश गर्न नपाउनेमा अंश नलिएका एक्काईस वर्ष नाघेका स्वास्नी, छोरा, ◎एकासगोलका छोरी र विधवा बुहारीहरुको मञ्जुरी भए मात्र पिता पुर्खाका पालाको आर्जनको समेत चल अचल गैह्र सम्पत्ति मन परेका स्वास्नी, छोरा, ◎एकासगोलका छोरी वा बुहारीलाई दिन समेत आफू खुशी गरेको सदर हुन्छ - - - - - - - - - - - - - - - - - - - ३

माथि दफा दफामा लेखिए बमोजिम आफू खुशी गर्न नपाउने अवस्थामा पनि आफ्नो हकको अंश जति भने आफू खुशी गर्न पाउँछ - - - - - - - - - - - - - - ४

माथि लेखिए बमोजिम दिन पाउने जति अंश बण्डा नहुँदै कुनै स्वास्नी, छोरा ◎एकासगोलका छोरी वा बुहारीलाई लिखत गरिदिएको जति पछि अंश बण्डा गर्दा बण्डा गर्नु पर्दैन । जसले पाएको हो उसले एकलौटी गरी खान पाउँछ । दिन नपाउने दिएको रहेछ भने पछि बण्डा गर्दा सो समेत सबै सम्पत्तिमा मिसाई बण्डा गरिदिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ५

१९क. नं. ॥ ॥ .......................

२० नं. ॥ ॥ अंशको नालिस परी आएकोमा अंश बण्डा गरिदिनु पर्ने देखिन आएपछि मुद्दा फैसला नगर्दै घरको लेनदेन कामकाज गर्ने जानकारसँग यसै

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

महलका २३ नम्बर बमोजिम अंशबण्डा गर्नु पर्ने चल अचल धन र ऋण समेत गैह्र श्री सम्पत्ति यत्तिकै हो, दवाए छपाएको छैन भन्ने धर्म भकाई फाँट लिई बण्डा गरिदिनु पर्छ । फाँट दिनु पर्नेले फाँट नदि अडियो भने त्यस्तालाई फाँटवारी नदिएसम्म यसै महलका २१ नम्बर बमोजिम छ महिनासम्म थुनी राख्नु पर्छ । फाँट दिएपछि थुनाबाट छाडी कानून बमोजिम बण्डा गरिदिनु पर्छ ।

२१ नं. ॥ ॥ अंशबण्डा गर्नालाई ऐनले फाँट दिनु पर्नेले फाँट नदि धिङ्याई गरी बस्दा थुनिएकोमा थुनेका मितिले दुई दुई महिनामा फाँट देउ भन्ने र अंश पाउँ भन्नेहरुलाई पनि तिमीहरुले पनि अंश बण्डा गर्नु पर्ने जो छ सो सबै घटी बढी नपारी फाँटवारी कागज लेखी ल्याउ भनी पूर्जी दिई भरपाई लिनु पर्छ । थुनेका मितिले छ महिनाभित्र थुनिएकाले फाँट दिए लिई ऐन बमोजिम बण्डा गरिदिनु पर्छ । छ महिनाभित्र फाँट दिएन भने सोही म्यादभित्र अंश पाउँ भन्नेले दिएको फाँटवारी कागज लिई थुनिएकालाई छाडी अंश पाउँ भन्नेले एकलौटी खानाका लागि नदेखाएको वा नभएको धनमाल लेखिदिएको वा घटी बढी पारी लेखिदिएको छ भने आजका पैंतीस दिनभित्र जाहेर गर्नु म्यादभित्र जाहेर नगरे पछि तिम्रो अंशियारले एकलौटी खानेछ तिम्रो उजूर लाग्ने छैन भन्ने सो धिङन्याई गर्नेलाई पूर्जी दिई भरपाई लिई सो म्यादभित्र जाहेर गरे ऐन बमोजिम बण्डा गरिदिनु पर्छ । नआए अंश पाउँ भन्नेको हाम्रो सम्पत्ति अंश लाग्ने मैले थाहा पाएको यत्तिकै हो मैले ढाँटी घटी बढी पारी नभएको माल लेखी दिएको ठहरे ऐन बमोजिम सजाय समेत गर्नु भन्ने मुचुल्का लेखाई लिई सो मुचुल्का बमोजिमको चल अचल जो छ सबै ऐन बमोजिम लिई अंश बण्डा गरिदिनु पर्छ । दबाएकोमा नदबाउनेले ऐन बमोजिम खान पाउँछ । त्यस्तो धिङन्याई गर्ने चाहिंको उजूर लाग्दैन ।

२२ नं. ॥ ॥ अंश मुद्दामा फाँट दिनु पर्ने झगडिया हाजिर नभई म्याद तारिख गुजारी बसेकोमा निजलाई तदारुखसाथ पक्राउ गरी फाँट लिनु पर्छ । बाटाका म्याद बाहेक एक महिनासम्म खोजतलास गर्दा पनि पत्ता नलागेमा वा पक्राउ भई ऐनका म्यादसम्म थुन्दा पनि फाँट नदिएमा अंश पाउँ भन्नेबाट फाँट लिई फाँट दिनु पर्ने मानिस हाजिर रहेको भए यसै महलका २१ नम्बर बमोजिम गरी र हाजिर नरहेको भए अंश पाउँ भन्नेले एकलौटी खानाका लागि नदेखाएकोछ भने बाटाका म्याद बाहेक पैंतीस दिनभित्र हाजिर भई जाहेर गर्नु म्यादभित्र जाहेर नगरेपछि तिम्रो अंशियारले एकलौटी खानेछ भनी सो फाँटको एक प्रति नक्कल समेत पठाई म्याद टाँसी दिनु पर्छ । सो बमोजिम म्याद टाँसिएकोमा हाजिर भई जाहेर गरेमा र नगरेमा समेत सोही २१ नम्बर बमोजिम बण्डा गरिदिनु पर्छ । अंशको फाँट दिनु पर्नेले फाँट नदिई वा पक्राउ भई नआई अंश पाउनेबाट सो २१ नम्बर बमोजिम फाँट लिनु पर्ने भएमा सो अंशको दावा गर्नेले पनि केही कारणले फाँट दिन सक्तिन भन्यो भने त्यसको सोही व्यहोराको कागज गराई जुन बखत फाँट तयार गरी ल्याउँछ उसै बखत बुझी ऐन बमोजिम बाँकी कारबाही गर्ने भनी फैसला गरिदिनु पर्छ । त्यस्तो फैसला भएकोमा पछि फाँट तयार गरी दरखास्त दिन आयो भने सो दरखास्त बुझी सो मिसिलबाट अघि गरी नसकेको गर्नु पर्ने बाँकी कारबाही जे जति छ ऐन बमोजिम गरी भरी भराई जो गर्नु पर्ने गर्नु पर्छ ।

२३ नं. ॥ ॥ बण्डा गर्नु पर्ने जग्गा, घर, धनमाल समेतको फाँटवारी खुलाई दिंदा जग्गाको चौतर्फी किल्ला रोपनी बिगाहा मुरी र तिरो लागेकोमा सो समेत जे जे लागेकोछ सो पनि र सो नलागेकोमा उब्जनी र घरको कवल नाल तला चार किल्ला कच्ची पक्की र अन्दाजी मोल समेत र घरजग्गा बाहेक अरु थान गन्ती नाप तौल मुरी गजका दरले बिक्री हुने जिन्सी माल भए रहेको थान गन्ती नाप तौलको

तायदात खोलाई त्यसको गाउँ बजारमा चलेको बिक्री दरले हुने नगदी अङ्क समेत खुल्न जानेमा सो पनि खुलाई खुल्न नसक्ने जतिमा अन्दाजी मोल विगो खुलाई दिने लिने गर्नु पर्छ । बढी पारी मोल विगो कसैको भन्ने उजूर परेमा साहू महाजन भलाद्मी समेत जसबाट मोल तौल गर्नु पर्छ गराई विगो कायम गर्नु पर्छ ।

२४ नं. ॥ ॥ फाँट दिनु पर्नेसँग भएको ढुकुटीको साँचो सो फाँट दिनु पर्ने ठहरेको झगडिया म्याद तारिख गुजारी बसेको वा हाजिरै रहेकोमा पनि फाँट नदिंदा अंश पाउनेबाट फाँट दिने लिने भएमा त्यस्तो ढुकुटी खुलाई तायदाती खडा गराई पाउँ भनी उजूर गऱ्यो भने अड्डाले सो साँचो लिने झगडिया भए त्यसलाई समेत र सो नभएमा एक थरी मात्र भएपनि झगडिया र 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि र कम्तीमा अरु दुई जना भलाद्मी समेत राखी ताल्चा खोली भएको तायदाती गरी बण्डा गरिदिनु पर्छ ।

२५ नं. ॥ ॥ आफ्ना बण्डामा परी बण्डा उठाई लिइसकेपछि पछिबाट बिग्रे नासिएको रहेछ अर्को सट्टा गरी पाउँ भन्ने उजूर लाग्न सक्तैन ।

२६ नं. ॥ ॥ अंश मुद्दामा फाँट दिनु पर्नेले फाँट नदिई अरुले दिएका फाँटबाट बण्डा भयो भने सो फाँट नदिनेलाई फाँट नदिए वापत अरु ऐनले हुने सजायमा फाँट नदिएका जम्माको सयकडा पाँच रुपैयाँका दरले थप जरिबाना गर्नु पर्छ ।

२७ नं. ॥ ॥ दबाए छपाएको छैन भनी कागज गरिसकेपछि दबाए छपाएको ठहऱ्यो भने त्यो धनमाल दबाउनेले पाउँदैन । नदबाउने अरु अंशियारले ऐन बमोजिम अंश गरी खान पाउँछन् । दबाए वापतको सजाय हुँदैन ।

२८ नं. ॥ ॥ अंशबण्डा गर्दा असल कमसल मिलाई दिने लिनेका मञ्जुरी भएकोमा मञ्जुरी बमोजिम र मञ्जुरी नभएकोमा गोला राखी बण्डा गरिदिनु पर्छ ।

२९ नं. ॥ ॥ अंशबण्डा भएका मितिले तीन वर्षभित्र आफ्ना अंश भागमा परेको चल अचल अर्काको हकको ठहरिएको वा सो तीन वर्षभित्र नालिस परेकोबाट अर्काको हकको ठहरिन गएको भए अंश खाने सबैबाट दामासाहीले सट्टा भर्ना लिन पाउँछ ।

✀३० नं. ॥ ॥ अंशबण्डा गर्दा साक्षी राखी कानून बमोजिम बण्डा छुट्याई बण्डापत्रको कागज खडा गरी लिने दिनेको र साक्षीको समेत सहीछाप गरी रजिष्ट्रेशन गर्नु पर्नेमा सो गरी राख्नु पर्छ । सो बमोजिम नभएको बण्डा सदर हुँदैन । तर यो ऐन प्रारम्भ हुँदा सम्ममा बण्डापत्र खडा गरी वा नगरी घरसारमा नरम गरम मिलाई अचल अंशबण्डा गरी छुट्टिई आफ्नो आफ्नो हिसाब भाग शान्ति बमोजिम लिई पाई दाखिल खारिज समेत गराई सकेको वा बण्डा बमोजिम आफ्नो आफ्नो भागको अचल छुट्टाछुट्टै भोग बिक्री व्यवहार गरेकोमा व्यवहार प्रमाणबाट बण्डा भइसकेको ठहरेमा पछि बण्डापत्र रजिष्ट्रेशन भएको छैन वा बण्डा घटीबढी असल कमसल भयो भन्न पाउँदैन । रजिष्ट्रेशन नभएपनि बण्डा भएको सदर हुन्छ । पाउने अंश भन्दा घटी अंश जीउनी लिएकोमा र अंश छोडपत्र गरेकोमा भने रजिष्ट्रेशन भएको हुनु पर्छ ।

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

✀ सातौं संशोधनद्वारा संशोधित ।

३१ नं. ॥ ॥ अंश भाग छुट्याई पाउँ भन्ने नालिस परेकोमा अंश दिनु पर्ने भनी सावित भएको वा प्रमाणबाट पाउने देखिए अंशको फाँट दाखिल भैसकेपछि मेरो अंश हिस्सामा आउने जतिको आयस्ता रोक्का गरी पाउँ भनी वादीले दरखास्त दिए उसले पाउने भाग जतिको आयस्ता ▣जग्गा मिच्नेको महलको १० नम्बर बमोजिमको रीत पुर्‍याई बण्डा नहुन्ज्यालसम्म रोक्का गरी बण्डा भैसकेपछि फुकुवा गरिदिनु पर्छ ।

३२ नं. ॥ ॥ अंशबण्डा गर्दा ऐन बमोजिम गरिदिनु पर्छ । घटी बढी गर्न हुँदैन । अंशमा चित्त नबुझ्ने सोह्र वर्ष नाघेकाले बण्डापत्रको कागज भएका मितिले र सोह्र वर्ष मुनिकाले सोह्र वर्ष नाघेका मितिले तीन महिनाभित्र नालिस नगरे लाग्न सक्तैन । △अंश मुद्दामा वादीले तारिख गुजारे पनि मुद्दा डिसमिस नगरी ठहरे बमोजिम फैसला गर्नु पर्छ ।

३३ नं. ॥ ॥ एकाघरसँग छँदा अंश बाँड्नु पर्ने साझा जग्गा जमीन घर खेत गैह्र नेपाल सरकार लागेको वा नेपाल सरकारबाट कानून बमोजिम रोक्का भएको वा निकासा नभै रहेको तलब भत्ता समेतको पारिश्रमिक गैह्र भिन्न भएपछि कुनै अंशियारले फिर्ता गरायो वा निकासा गराई ल्यायो भने निकासा गरी ल्याए यति वा यति सम्म दिने लिने भनी लिखत भएकोमा सोही लिखत बमोजिम र लिखत नभएकोमा नेपाल सरकारबाट फिर्ता गराउनेले सो फिर्ता भएको मितिदेखि तीन वर्षसम्म अचलको हकमा एकलौटी भोग गरी खाई चौथा सालदेखि सबै अंशियारले बाँडी खान पाउँछन् र चलको हकमा निकासा गराउने अंशियारले दशौंदसम्म बढ्ता लिई अरु सबै अंशियारले बाँडी खान पाउँछन् । नेपाल सरकार बाहेक अरुले खाई राखेकोमा कुनै अंशियारले फिर्ता गराई ल्याएको पनि माथि लेखिए बमोजिम हुन्छ ।

३४ नं. ॥ ॥ अंश नपाउनेले पाउँ भनी नालिस गरे पक्रेको विगो मिसिलबाट देखिएमा विगोको हिसाबले नपाउने पक्रेमा हुने ऐन बमोजिम र विगो नदेखिएकोमा औकात हेरी दुईसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

३५ नं. ॥ ॥ अंशबण्डा नै नभएको वा बण्डा हुँदा अंशबण्डा गोश्वाराको लिखत भएको र लिखत नभएपनि हिसाव शान्ति दुबै थरको भोग भएकोमा जहिलेसुकै पनि र लिखत र भोगै नभएकोमा अघि बण्डा भै बाँकी रहेको वा दबाए छपाएको पाउँ भन्न आएमा भिन्न भिन्न जीउसम्म मात्र नालिस लाग्छ ➔अबण्डा गोश्वाराको लिखत भएकोमा आ-आफ्नो अंश हक लाग्ने जति अबण्डा आ-आफ्नो खुश हुन्छ ।

---

▣ पहिलो संशोधनद्वारा संशोधित ।

△ सातौं संशोधनद्वारा थप ।

➔ छैठौं संशोधनद्वारा थप ।

# महल १४

## स्त्री अंश धनको

१ नं. ॥ ॥ कन्या, सधवा वा विधवा स्वास्नीमानिसले आफ्नो आर्जनको चल अचल आफ्नो खुश गर्न पाउँछन् ।

❒२ नं. ॥ ॥ भिन्न भएको कन्या, सधवा वा विधवाले आफ्नो अंश हकको चल अचल सम्पत्ति आफूखुशी गर्न पाउँछन् ।

३ नं. ॥ ॥ यसै महलको २ नम्बर बमोजिम आफ्नो खुश गर्न नपाउने अचल सम्पत्तिबाट त्यस्ता स्वास्नीमानिसले लगाएको कपाली साहूको थैली भरी भराउ हुन सक्तैन ।

४ नं. ॥ ॥ स्वास्नीमानिसलाई माइती मावलीपट्टिका नातेदार इष्टमित्रहरुले दिएको चल अचल र त्यसबाट बढे बढाएको सम्पत्ति दाइजो ठहर्छ । लोग्ने वा लोग्नेपट्टिका अंशियारले सबै अंशियारहरुको मञ्जुरीको लिखत गरी दिएको र लोग्नेपट्टिका अरु नातेदार वा इष्टमित्रले दिएको चल अचल र त्यसबाट बढे बढाएको सम्पत्ति पेवा ठहर्छ ।

◎५ नं. ॥ ॥ स्वास्नी मानिसले आफ्नो दाइजो पेवा आफूखुस गर्न पाउँछिन् । निजको शेषपछि त्यस्तो सम्पत्ति अपुतालीको महल बमोजिम हुनेछ ।

⊠६ नं. ॥ ॥ .........

✂७ नं. ॥ ॥ ............

८ नं. ॥ ॥ यसै महलको ७ नम्बरमा लेखिएको कुरामा ⌛अर्को विवाह भएको मितिले र अरुमा भए गरेका मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

⊠ एघारौं संशोधनद्वारा खारेज ।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

# महल १५

## ❐धर्मपुत्र, धर्मपुत्रीको

☒१ नं. ॥ ॥ … … …

❐२ नं. ॥ ॥ आफ्नो छोरा, छोरी भएको व्यक्ति बाहेक अन्यले लिखत गरी धर्मपुत्र वा धर्मपुत्री राख्न हुन्छ ।

तर, छोरा हुनेले धर्मपुत्र र छोरी हुनेले धर्मपुत्री राख्न पाउने छैन ।

२क. नं. ॥ ॥ 🗐……………………

⊥२ख. नं. ॥ ॥ यस महल बमोजिम एक पटक धर्मपुत्र वा धर्मपुत्री भएकालाई पुन: धर्मपुत्र वा धर्मपुत्री दिन हुँदैन । दिएको भएपनि बदर हुन्छ ।

३ नं. ॥ ॥ धर्मपुत्र राख्न पाउनेले सन्तान छोरा नहुँदा ऐन बमोजिम राख्न हुनेलाई रीत पूर्वकको लिखत गरी धर्मपुत्र राखिसकेपछि सन्तान छोरा जन्म्यो भने पनि अघि धर्मपुत्र राखेको बदर हुन सक्तैन । भाइ सरहको अंश पाउँछ ।

☒४ नं. ॥ ॥ … … …

☒४क.नं. ॥ ॥ … … …

☒५ नं. ॥ ॥ … … …

☒६ नं. ॥ ॥ … … …

☒७ नं. ॥ ॥ … … …

☒८ नं. ॥ ॥ … … …

☒ ९ नं. ॥ ॥ … … …

☒९क. नं. ॥ ॥ … … …

⌛९ख. नं. ॥ ॥ धर्मपुत्र वा धर्मपुत्री हुने र राख्नेको उमेर कम्तीमा तीस वर्ष फरक हुनुपर्छ ।

✎तर तीन पुस्ताभित्रको व्यक्तिलाई धर्मपुत्र वा धर्मपुत्री राख्दा सो बन्देज लाग्ने छैन ।

⌛९ग. नं. ॥ ॥ धर्मपुत्र वा धर्मपुत्रीको हक छोराछोरी सरह हुन्छ । धर्मपुत्र वा धर्मपुत्रीले आफूलाई जन्माउने बाबुपट्टिको अंशमा दावी गर्न पाउँदैनन् ।

---

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

☒ एघारौं संशोधनद्वारा खारेज ।

🗐 लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

⊥ एघारौं संशोधनद्वारा थप ।

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

➔९घ. नं. ॥ ॥ धर्मपुत्री राख्न पाउनेले धर्मपुत्री राखी सकेपछि छोरी जन्म्यो भने पनि अघि राखेको धर्मपुत्री बदर हुन सक्तैन । छोरी सरह नै हुन्छ ।

१० नं. ॥ ॥ ⌛बालबालिका फाल्ने पत्ता लाग्यो भने बाबु आमा दुबैका सल्लाहले फालेको भए दुबैको अंश र त्यस ⌛बालबालिकाको समेत त्यही पाल्नेलाई दिलाई पाल्न लाउनु पर्छ । एकजनाको मात्र मतलब रहेछ भने जसले फालेकोछ उसैको र ⌛बालबालिकाको अंश दिलाई दिनु पर्छ । ✐... ... ... ।

⌛११ नं. ॥ ॥ ऐनको रीत पुऱ्याई धर्मपुत्र वा धर्मपुत्री राखिसकेपछि कुनै खास कारण नभई बदर गर्नु हुँदैन । धर्मपुत्र वा धर्मपुत्री बस्नेले धर्मपुत्र वा धर्मपुत्री राख्नेलाई खान लाउन नदिने, घरको सम्पत्तिको हेरचाह नगरी दुरुपयोग गर्ने, शारीरिक वा मानसिक यातना दिने जस्ता कार्य गरेमा धर्मपुत्र वा धर्मपुत्री राख्नेले त्यस्ता धर्मपुत्र वा धर्मपुत्री बदर गर्न पाउँछन् । बदर हुने धर्मपुत्र वा धर्मपुत्रीले जन्माउने बाबुपट्टिको अंश पाउँछन् । लेखिएका कारण नभई धर्मपुत्र वा धर्मपुत्री राख्नेले खान लाउन नदिई घरबाट निकाला गरेमा वा शिक्षा स्वास्थ्योपचारको व्यवस्था गरेन भने त्यस्तो धर्मपुत्र वा धर्मपुत्रीले धर्मपुत्र वा धर्मपुत्री राख्नेसँग छोराछोरी सरह अंश गरी लिन पाउँछन् ।

⌛१२ नं. ॥ ॥ एउटा मात्र छोरा वा छोरी हुनेले धर्मपुत्र वा धर्मपुत्री दिन हुँदैन । दिएको भएपनि बदर हुन्छ ।

➔१२क. नं. ॥ ॥ कुनै विदेशी नागरिकले ऐनले धर्मपुत्र वा धर्मपुत्री राख्न हुने नेपाली नागरिकलाई धर्मपुत्र वा धर्मपुत्री राख्न चाहेमा त्यस्तो विदेशी नागरिकको चरित्र र आर्थिक स्थिति हेरी सम्बन्धित विदेशी सरकार वा राजदूतावासको सिफारिस भएमा नेपाल सरकारले उपयुक्त सम्झेका शर्तहरुमा धर्मपुत्र वा धर्मपुत्री लिन दिन स्वीकृति दिन सक्नेछ ।

⊥१२ख. नं. ॥ ॥ यस महल बमोजिम नेपाल सरकारले विदेशी नागरिकलाई धर्मपुत्र वा धर्मपुत्री राख्ने स्वीकृति दिंदा त्यस्तो विदेशी नागरिक रहेको देशको कानूनमा धर्मपुत्र वा धर्मपुत्रीलाई छोराछोरी सरह हक हुने व्यवस्था भएमा मात्र धर्मपुत्र वा धर्मपुत्री राख्न स्वीकृति दिनेछ ।

✎१२ग. नं ॥ ॥ नेपाली नागरिकले धर्मपुत्र वा धर्मपुत्री राख्दा गरेको लिखत पाँचशय रुपैयाँ तिरी जिल्ला न्यायाधीशबाट प्रमाणित गराउनु पर्छ ।

१३ नं. ॥ ॥ ऐनले राख्न नहुने धर्मपुत्र ➔वा धर्मपुत्री राखेको कुरामा थाहा पाएका दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

➔ छैठौं संशोधनद्वारा थप ।

✐ एघारौं संशोधनद्वारा झिकिएको ।

⊥ एघारौं संशोधनद्वारा थप ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

➔ छैठौं संशोधनद्वारा थप ।

# महल १६

## अपुतालीको

❒१ नं. ॥ ॥ हकवाला भनेको सम्बन्धित व्यक्तिको सात पुस्तासम्मको सबैभन्दा नजिकको अंशियार हुन्छ । सात पुस्ता नाघेको टाढाको नातेदार हुन्छ ।

◎२ नं. ॥ ॥ यस महलको अन्य नम्बरहरुमा अन्यथा लेखिएकोमा बाहेक अपुताली परेको व्यक्तिले कुनै लिखत गरी दिएकोमा सोही लिखत बमोजिम र त्यस्तो लिखत गरी नदिएकोमा देहायका व्यक्तिमध्ये प्राथमिकता क्रमानुसार जुन व्यक्ति जीवित छ सोही व्यक्तिले र त्यस्तो व्यक्ति कोही नभए यसै महलको १ नम्बर बमोजिमका हकवालाले त्यस्तो अपुताली पाउँछ । - - - - - - - - - - - - - - - - - - १

(क) सगोलको पति वा पत्नी,

(ख) सगोलको छोरा, छोरी, विधवा बुहारी,

(ग) सगोलका बाबु, आमा, सौतेनी आमा, छोरा छोरी तर्फका नाति नातिनी, नातिनी बुहारी,

(घ) भिन्न भएका पति, पत्नी, छोरा, छोरी, बाबु, आमा, सौतेनी आमा, विवाहिता छोरी,

(ङ) सगोलका बाबुतर्फका बाजे, बज्यै, दाजु, भाइ, दिदी, बहिनी,

(च) सगोलका काका, काकी, भतिजा, भतिजी,

(छ) भिन्न भएका छोरातर्फका नाति, नातिनी, विवाहिता छोरी तर्फका नाति, नातिनी,

(ज) सगोलका भाउजू, भाइ बुहारी,

(झ) भिन्न भएका दाजु, भाइ तथा दिदी बहिनी,

(ञ) भिन्न भएका बाजे, बज्यै,

माथि दफा १ बमोजिमका हकवाला नभएमा वा भए पनि निजले अपुताली नलिएमा यस महलको अन्य नम्बरहरुको अधीनमा रही त्यस्तो अपुताली नेपाल सरकारको हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - २

<u>स्पष्टीकरण:</u> यस नम्बरको प्रयोजनको लागि एउटै क्रमका एक भन्दा बढी व्यक्ति हकवाला भएमा प्रत्येक हकवालाले बराबरी अपुताली पाउँछ ।

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

◎३ नं.॥ ॥ यस महलको २ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै व्यक्तिलाई नजिकको हकवालाले हेरचाह नगरी सोभन्दा टाढाका कुनै हकवाला, अन्य व्यक्ति वा संस्थाले हेरचाह र स्याहार सम्भार गरेको भएमा निजको अपुताली त्यस्तो टाढाको हकवाला, अन्य व्यक्ति वा संस्थाले पाउँछ ।

४ नं. ॥ ॥ ... ... ...

५ नं. ॥ ॥ ... ... ...

६ नं. ॥ ॥ एकै स्वास्नीपट्टि वा एकदेखि बढी स्वास्नीपट्टिका सन्तान हुने बाबु आमाले आफू र सबै स्वास्नी छोरा ◗............ छोरी बुहारीहरुलाई समेत ऐन बमोजिम अंशबण्डा गरी दी लिई कोही स्वास्नी छोरा ◗......... छोरी बुहारीसँग आफ्नो अंश मिसाई बसेकोमा बाबु आमा मरी अपुताली पऱ्यो भने त्यो अपुतालीसँग बसेका स्वास्नी छोरा ◗.......... छोरी बुहारीले मात्र पाउँछन् । लिखत भए लिखत बमोजिम हुन्छ ।

७ नं. ॥ ॥ भिन्न भई बसेका लोग्ने, स्वास्नी, छोरा, ◗.......... छोरी वा छोराका छोरा वा ◗............. छोरीले हेरचाह नगरी एकै बाबुबाट जन्मिएका दाजुभाइ वा दिदीबहिनीले स्याहार सम्भार गरी पालेका रहेछन् भने त्यसरी पालेका दाजुभाइ वा दिदीबहिनीको अपुताली पाल्ने दिदीबहिनी वा दाजुभाइले पाउँछन् । अरु हकवालाले पाउँदैनन् ।

८ नं. ॥ ॥ ... ... ...

९ नं. ॥ ॥ एकै स्वास्नीपट्टिका छोरा ◗............ छोरी रहेछन्, ऐन बमोजिम अंशबण्डा गरी लिई दिई अरु छोरा ◗........... छोरी बेग्लै बसेछन्, एक छोरा ◗................ छोरी बुहारीपट्टि आफू बसेको रहेछ र सँगबस्ने छोरा ◗........... छोरी बुहारीले स्याहार सम्भार नगर्दा आफ्नो जो भएको अंश जीउनी लिई अर्को छोरा ◗................ छोरी बुहारीसँग बस्न गएको मऱ्यो भने पछि सँगबस्न गएकाले खान पाउँछन् । अंश जीउनी लिई बस्न गएको रहेनछ केही कारणले केही दिन बस्न गएकोमा मरेको भए त्यो अपुताली केही दिन बस्न गएको छोरा ◗.............. छोरी बुहारी हकवालाले पाउँदैनन् ।

१० नं. ॥ ॥ .................

११ नं. ॥ ॥ ................

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

एघारौं संशोधनद्वारा झिकिएको ।

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

एघारौं संशोधनद्वारा संशोधित ।

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

१२ नं. ॥ ॥ कुनै ◎दाजु,भाइ वा दिदी, बहिनी अंश ली भिन्न बसेको र कुनै ◎दाजु,भाइ वा दिदी, बहिनीसँग बसेकोमा सँगबसेका ◎दाजु,भाइ वा दिदी, बहिनीमा कुनै ◎दाजु,भाइ वा दिदी, बहिनी मरी अपुताली पऱ्यो भने भिन्न भएको ◎दाजु,भाइ वा दिदी, बहिनीले पाउँदैन । विमातृक भए पनि सँग बसेकाले मात्र पाउँछ । सँगबसे पनि खानु पिउनु आफ्ना अंशबाट आफ्ना हिस्सा बमोजिम राखी खाएका रहेछन् भने सँगबसेको भए पनि त्यस्तोमा र भिन्न बसेका ◎दाजु,भाइ वा दिदी, बहिनी को अपुतालीमा समेत मर्ने ◎दाजु,भाइ वा दिदी, बहिनी को सहोदर ◎दाजु,भाइ वा दिदी बहिनीहरुले पाउँछन् । विमातृक पट्टिकाले पाउँदैनन् ।

१२ क. नं. ॥ ॥ ▤.......................

☒१३ नं. ॥ ॥ ... ... ...

☒१४ नं. ॥ ॥ ... ... ...

१५ नं. ॥ ॥ अपुताली खान पाउनेले अपुताली खान्न भने कर लाग्दैन । अपुताली खाए पनि नखाए पनि मर्नेको सदगत भने गर्नु गराउनु पर्छ ।

१६ नं. ॥ ॥ हकवालाले अपुताली नखाएमा मर्नेको सदगत गरी बाँकी रहेको सम्पत्ति साहू भए साहूले दामासाहीले पाउँछन् । साहू नै नभए सबै र साहू तिरी बढ्ता भए सो बढ्ता भए जति सम्पत्ति नेपाल सरकारको हुन्छ ।

१७ नं. ॥ ॥ कुनै गृहस्थी नेपाल सरहदभित्र मऱ्यो र सो ठाउँमा निजको हकदार कोही रहेनछ र सम्पत्ति रहेछ भने सो ठाउँको जिमिदार तालुकदार र निजहरु नभए निजहरुको दाम काम गर्ने व्यक्तिले सो कुराको सूचना 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकालाई दिनु पर्छ र गाउँपालिका वा नगरपालिकाले पनि त्यस्तो जिमिदार तालुकदार वा दामकाम गर्ने व्यक्ति र कम्तीमा दुई जना स्थानीय भलाद्मी साक्षी राखी सो मर्नेको धनमाल तायदात गरी सो तायदातीको एक प्रति मुचुल्का सहित सो कुराको जाहेरी नजिकको 🕮जिल्ला कार्यालयमा पठाउनु पर्छ । सो बमोजिमको जाहेरी आएमा जिल्ला कार्यालयले पनि सो मर्ने मानिस फलाना ठाउँको हो भन्ने पत्ता लागे मर्नेका हकवालाका नाउँमा ऐन बमोजिम तीन महिने म्याद पठाउनु पर्छ । म्यादभित्र हकवाला आए दशौंद लिई ऐनको रीत पुऱ्याई निजलाई बुझाई दिनु पर्छ । म्यादभित्र हकवाला कोही आएन वा पत्ता लागेन भने त्यो अपुताली नेपाल सरकारको हुन्छ ।

१८ नं. ॥ ॥ कुनै भेषधारी नेपाल ⟩......... भित्र मऱ्यो भने त्यसको धनमाल जो छ उसको वारिस भए उसलाई दिनु पर्छ, नभए जुन भेषको अपुताली जुन भेषको महन्तले लिनु भन्ने कानूनी व्यवस्था भएको छ उसले ती मर्नेको भेष अनुसार सदगत गरी खान पाउँछन् । सो मर्नेको धन सम्पत्ति नभएपनि जुन भेषको हो उसै भेषको अपुताली खानेले सदगत गराउनु पर्छ ।

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

▤ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

☒ एघारौं संशोधनद्वारा खारेज ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

⟩ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

⌛१९ नं. ॥ ॥ कसैले कुनै रिस इवीले कसैलाई मारेमा सो मार्ने वा निजका सन्तानले सो मर्ने वा निजको सन्तानको अपुताली खान पाउँदैन ।

२० नं. ॥ ॥ यस महलमा अन्यत्र हदम्याद लेखिएको कुरामा बाहेक अपुताली परेको तीन वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

# महल १७

## लेनदेन व्यवहारको

१ नं. ॥ ॥ कानून बमोजिम लिखत नगरी लेनदेन व्यवहार गरेकोमा नालिस लाग्न सक्तैन । रजिष्ट्रेशन पास भै राखेकोमा बाहेक अरु कुनै लिखत दैवी परेमा सो परेको मितिले बाटाका म्याद बाहेक सात दिनभित्र दुई प्रति दरखास्त लेखी आफ्नू सहीछाप गरी आफ्ना नजिकको प्रहरी कार्यालयमा दिनु पर्छ । त्यस्तो दरखास्त पर्न आएमा एक प्रति अड्डाको स्रेस्तामा दर्ता गरी अर्को प्रतिमा अड्डाको छाप र आफ्नो दस्तखत गरी दरखास्तवालालाई फिर्ता दिनु पर्छ । दैवी परेको पन्ध्र दिनभित्र असामीले वा निज मरिसकेको भए त्यसको अपुताली खाने हकदारले दैवी परेको व्यहोरा जनाई अर्को लिखत गरी नदिए सो म्याद नाघेको पैंतीस दिनभित्र अघि लिखत भैरहेको र दैवी परेको पक्का प्रमाण देखाई नालिस दिई आफ्नू हक कायम गराई राख्नु पर्छ । सो बमोजिम गराई नराखेमा नालिस लाग्न सक्तैन ।

२ नं. ॥ ॥ तमसुक भएका मितिले दश वर्षभित्र केही ब्याज असूल पनि नभएको भाखापत्र पनि नगराएकोमा सो म्यादपछि नालिस लाग्न सक्तैन । दश वर्षको बीचमा भाखापत्र गराएको वा केही ब्याज असूल गरेको रहेछ भने सो मितिले फेरि दश वर्षको म्याद पाउँछ । भोग वा दृष्टि बन्धकको हकमा यसै महलको ३ नम्बर बमोजिम हुन्छ ।

३ नं. ॥ ॥ भोग वा दृष्टिबन्धक लेखाई लिएकोमा भोगबन्धकको हकमा लिखत भएको मितिले र दृष्टिबन्धकको हकमा भाखा नाघेका मितिले दुई वर्षभित्र बन्धक लिएको अचल सम्पत्ति साहूले वा निजका तर्फबाट चलन गर्नु पर्छ वा चलन गर्न नदिए चलन चलाई माग्न नालिस दिनु पर्छ । सो म्यादभित्र नालिस नदिएमा बन्धकी लिखत कपाली सरह हुन्छ ।

✂४ नं. ॥ ॥ ब्याज भराउनु पर्ने मुद्दामा जुनसुकै तहबाट ब्याज भराउँदा आफूले फैसला गरेको मितिसम्मको ब्याज र त्यसपछि भरी भराउको दरखास्त परेमा भराएको मितिसम्मको ब्याज समेत भराउने गरी फैसला गर्नु पर्छ ।

५ नं. ॥ ॥ साहू असामीले साँवा ब्याज समेत लिंदा बुझाउँदा देहाय बमोजिमको रीत पुऱ्याई लिनु दिनु पर्छ । सो बमोजिम नगरेको सदर हुँदैन - - - - -

साँवा जम्मै बुझाउँदा असामीले सो सम्बन्धमा गरिदिएको लिखत फट्टा गराई वा सोही लिखतमा असूली जनाउन लगाई बुझाउनु पर्छ । कुनै कारणले सो लिखत फेला नपरेमा सोही व्यहोरा जनाई साहूबाट भरपाई गराई लिनु पछ- - - - - - - १

साँवामध्ये केही मात्र बुझाउँदा वा ब्याज बुझाउँदा असामीले साहूबाट माथि १ दफामा लेखिए बमोजिम भरपाई गराई लिई यथासम्भव तमसुक, खाताबही वा भरपाई समेत सो साँवाको सम्बन्धमा अघि जुन लिखत भएको छ सो लिखतको पीठमा सो व्यहोरा खोली लेखी असामीको सहीछाप गर्नु गराउनु पर्छ । सो दरपीठ गर्ने कागजमा दरपीठको व्यहोरा नअटाएमा अर्को कागज गाँसी लेखी बन्दमा समेत सो बमोजिम सहीछाप गर्नु गराउनु पर्छ - - - - - - - - - - - - - - - - - - - २

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

६ नं. ॥ ॥ कर्जा लेनदेन भएकोमा ब्याजको ब्याज लिन हुँदैन, लिइसकेको भएपनि फिर्ता गर्नु पर्छ । लिखतमा ब्याज नलेखिएकोमा ब्याज पाउँदैन । वर्ष एकको साँवाको सयकडा दशभन्दा घटी ब्याज लेखिएकोमा लिखत बमोजिम नै हुन्छ । लिखतमा ब्याज लिने दिने कुरा लेखी ब्याजको अङ्क नकिटिएकोमा वा वर्ष एकको साँवाको सयकडा दशभन्दा बढी ब्याजको अङ्क लेखिएकोमा वा ऐन बमोजिम ब्याज भराउनु पर्ने अरु अवस्थामा साहूलाई असामीबाट ब्याज भराउँदा वर्ष एकको साँवाको सयकडा दशभन्दा बढी भराउनु हुँदैन । ब्याज नलेखी मुनाफा लिने दिने कुरा लेखिएकोमा पनि ब्याज सरह नै हुन्छ ।

७ नं. ॥ ॥ ब्याज भराई लिनु पर्दा साँवामध्ये केही पनि असूल नभएको भए त्यस साँवाको र केही असूल भएको रहेछ भने बाँकी साँवाको बराबर भन्दा बढी भराइने छैन ।

८ नं. ॥ ॥ घरको मुख्य भै कामकाज गर्ने वा सगोलमै बसी विभिन्न ठाउँमा घर, खेती, व्यापार वा अरु कुनै काम गरी बस्ने उमेर पुगेका जानकार लोग्नेमानिस वा स्वास्नीमानिस आफू बसी काम गरेको ठाउँको मुख्य ठहर्छन् । त्यस्ता मुख्यले गरेको व्यवहार वा एकाघरका उमेर पुगेका अरुले गरेकोमा मुख्य जानकारको पनि सहीछाप वा लिखत भएको व्यवहार मात्र गोश्वारा धनबाट चल्छ ।

❒९ नं. ॥ ॥ यसै महलको ८ नम्बर बमोजिम मुख्य भै कामकाज गरेकोमा बाहेक अरु अवस्थामा एकाघरका उमेर पुगेको कुनै व्यक्तिले कुनै व्यवहार गरेको रहेछ भने निजले आफूले पाउने धनमा निजको हक नपुगेसम्म साहूले सो धनमा समाउन पाउँदैन । निजले आफैले आर्जन गरेको वा आफूखुशी गर्न पाउने सम्पत्तिबाट मात्र लिन पाउँछ । निजको आफ्नो आर्जनको वा आफूखुशी गर्न पाउने सम्पत्ति रहेनछ भने निजले पाउने धनमा हक नपुगेसम्म धरपकड गर्न पनि हुँदैन । यस्तोमा दश वर्षभित्र नालिस गरी आफ्नो हक कायम गराई राखे मात्र त्यस्तो धनमा निजको हक पुगेपछि साहूले ऐन बमोजिम गरिलिन पाउँछ । त्यस्तोमा आसामीको हक पुगेका मितिले दण्ड सजायको महलको ४२ नम्बर बमोजिमको भरी भराउको दरखास्त दिने म्याद शुरु हुन्छ ।

✂१० नं. ॥ ॥ अंश नभएका अंशियारले सगोलको अचल सम्पत्ति बेचबिखन गर्दा वा कुनै किसिमले हक छाडी दिंदा ऐनले आफूखूशी गर्न पाउने अरुको मञ्जुरी लिनु नपर्नेमा बाहेक अरुमा एकाघरसँगका अंशियार सबै साक्षी बसेको वा निजहरुले मञ्जुरीको लिखत गरी दिएको भए मात्र पक्का ठहर्छ । साक्षी पनि नबसेको र मञ्जुरीको लिखत पनि नभए मञ्जुर नहुनेले रजिष्ट्रेशन भएको मितिले एक वर्षसम्ममा थाहा पाएको पैंतीस दिनभित्र उजूर गऱ्यो र निजको मञ्जुरी ठहरिएन भने निजको हक जति सो सम्पत्ति निजलाई फिर्ता गराई दिनु पर्छ । सो बमोजिम फिर्ता भएकोमा साहूको थैली परेको भए फिर्ता भए जतिको थैली र ऐन बमोजिमको ब्याज लिखत रजिष्ट्रेशन दस्तुर समेत सो सम्पत्ति बेचबिखन गरी वा अरु कुनै किसिमले हक छाडी दिनेबाट साहूले कपाली सरह असूल गरी लिन पाउँछ । आफ्नो निजी आर्जनको भए सँग बस्नेको मञ्जुरी लिनु पर्दैन । बेचबिखन समेत गैह्र गर्न हुन्छ ।

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

✂११ नं. ॥    ॥ कसैले आफ्नो हक पुग्ने अचल बिक्री गरेकोमा यसै महलको १० नम्बर बमोजिम साक्षी बस्ने, मञ्जुरी दिने बाहेक सो बिक्री भएको सम्पत्ति सन्धिसर्पन परेको निजको ऐन बमोजिमको कुनै हकवालाले निखनी लिन चाहेमा सो किने बेचेको लिखत रजिष्ट्रेशन भएको मितिले छ महिनासम्ममा थाहा पाएको पैंतीस दिनभित्र निखनी लिन पाउँछ । सो म्याद नाघेपछि किने बेचेको पक्का हुन्छ । एकाघर सगोलमा उमेर पुगेको कसैले थाहा पाएकोमा सगोलमा भएका मुख्य समेत सबै हकवालाले थाहा पाएको ठहर्छ । सन्धिसर्पन पर्ने धेरै हकवालाले निखन्न चाहेमा सो मध्ये सबैभन्दा नजिकको हकवालाले निखन्न पाउँछ । नजिकको हकवालाले किनेकोमा सन्धिसर्पन पर्ने भएपनि टाढाको हकवालाले निखन्न पाउँदैन ।

✂१२ नं. ॥    ॥ सन्धिसर्पन पर्ने हकवाला नभए वा भएपनि निजले ननिखनेमा यसै महलको ११ नम्बरको म्यादभित्र निखन्न पाउँ भनी उजूर गरे देहायकोले निखन्न पाउँछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

जग्गा भए सो जग्गाको मोही    - - - - - - - - - - - - - - - - - - - - - - - १

तर घरबारीको लागि जग्गा किनेकोमा दुई रोपनी वा तीन कठ्ठासम्म जग्गा सन्धिसर्पन पर्ने हकवाला बाहेक अरुले निखन्न पाउँदैन ।

घर भए - - - - - - -   - - - - - - - - - - - - - - - - - - - - - - २

एउटै घरको भिन्न भिन्न हिस्साको भिन्न भिन्न धनी भएको अवस्थामा घरको कुनै हिस्साको धनीले आफ्नो हिस्सा जति बिक्री गरी दिएकोमा सो घरको अर्को हिस्साको धनीले निखन्न खोजेकोमा निजले निखन्न पाउँछ । त्यस्तो निखन्न पाउने व्यक्ति धेरै भएमा ती मध्ये सबैभन्दा मर्का पर्ने व्यक्तिले निखनी लिन पाउँछ - - - - - - - १

माथि देहाय दफा १ बमोजिम निखन्न पाउने व्यक्तिले निखनी नलिएमा र मोहियानी हकको जग्गामा मोहीले घर बनाएको भए जग्गावालाले निखन्न पाउँछ - - - - २

१३ नं. ॥    ॥ कुनै अचल सम्पत्ति बन्धकीसम्म राखेकोमा अंशबण्डा भई छुट्टिएको सन्धिसर्पन पर्ने ऐन बमोजिमको हकवालाले धनीले ऐन बमोजिमको याममा निखन्न आएका बखत निखन्न दिने गरी अरुको परेको थैली तिरी यसै महलको ११ नम्बरमा लेखिए बमोजिमको म्यादभित्र निखनी लिन पाउँछ । ⏭... ... ... । धनी र धनीका सन्तान नभए अपुताली खानेले बन्धकको प्रमाण पुऱ्यायो भने परेको थैली तिरी निखनी लिन पाउँछ ।

१४ नं. ॥    ॥ चल अचल भोग बन्धक दिएकोमा दश वर्षमा नबढाई भाखा राखी सो भाखाको म्यादभित्र सो भोगबन्धक निखनी नलिने गरी करार भए गरेकोमा सोही बमोजिम र अरुमा असामीले भोग वा दृष्टिबन्धकी जहिलेसुकै निखन्न आए पनि साहूले आफ्नो थैली बुझी लिई निखन्न दिनु पर्छ । बन्धकी दिएको सम्पत्ति जग्गा रहेछ भने जग्गा पजनीको महलमा लेखिएको याम नाघेपछि थैली बुझाएकोमा सो वर्षको बाली साहूकै हुन्छ ।

१५ नं. ॥    ॥ दृष्टिबन्धक दिंदा लिंदा पाँच वर्षभन्दा बढीको भाखा राख्न हुँदैन सो भाखा नपुगी साहूले थैलीमा टण्टा गर्न वा धितो चलन गर्न पाउँदैन ।

---

⏭ सातौं संशोधनद्वारा झिकिएको ।

✂१६ नं. ॥ ॥ थैली तिरी निखनी लिन पाउने गैह्र कुरामा निखनाई पाउँ भनी अड्डामा उजूर गर्न आउँदा थैली थाहा भएकोमा थैली र रजिष्ट्रेशन गराउँदा तिरेको दस्तुर समेत ल्याई धरौट राख्नु पर्छ । थैली थाहा नहुने मनासिब कारण परी थाहा नभएकोमा प्रतिउत्तर परेको पैंतीस दिनभित्र र थैलीमा मुख नमिलेकोमा मुख मिले जति उजूर गर्दा नै र नमिले जतिमा पनि बुझाउनु पर्ने ठहरे सो ठहरी पहिलो फैसला भएको पैंतीस दिनभित्र सो तिर्नु पर्ने थैली दस्तुर समेत अड्डामा ल्याई धरौट राख्नु पर्छ । सो म्यादभित्र थैली धरौट राख्न ल्याएन भने निखनी लिन पाउँदैन लिए दिएको पक्का हुन्छ । असामीले नै बन्धकी निखनी लिने कुरामा पनि सोही नालिस फैसलाबाट निखनाई दिनु पर्दैन । असामीले पछि निखन्न चाहेमा साहूले नबुझे थैली र दस्तुर समेत धरौट राखी उजूर गरेमा निखनाई दिनु पर्छ ।

१७ नं. ॥ ॥ ✂थैली र रजिष्ट्रेशन दस्तुर बुझ्नु पर्ने बुझी नलिएको ठहर्‍यो भने अड्डामा धरौट राखेको मितिदेखिको ब्याज बाली वा बहाल र लिखतमा लेखिएको कुरा समेतमा साहूको हक पुग्दैन ।

१८ नं. ॥ ॥ सोह्र वर्ष नपुगेका नाबालकले गरेको लेनदेन व्यवहार सदर ठहर्दैन । त्यसको धनको हिफाजत गर्ने मानिस समेतको सहीछाप गराएको रहेछ भने मात्र सदर ठहर्छ । त्यसले पनि सो नाबालकको धन बिगार्नका लागि बेइमानी गरेको रहेछ भने निजबाट त्यसको विगो भराई सो विगोको सयकडा पच्चीस जरिबाना गर्नु पर्छ ।

१९ नं. ॥ ॥ साहूको विगो वापत असामीको जायजात गरी भराउँदा उपर हुन नसकेकोमा देहाय बमोजिम हुन्छ - - - - - - - - - - - - - - - - -

व्यापारलाई कर्जा लिए दिएकोमा सो कर्जा लिने वा कर्जा लिदा शरीक भई काम गर्न वा सो लिखतमा मञ्जुर भई सहीछाप गर्ने एकाघर सँगका अंशियारहरुका नाउँमा नालिस परेमा मुख्यले नोक्सानीको फाँट दिनु पर्छ । सो नोक्सानीको फाँट दिंदा चोरी आगलागीमा परेको पानीमा डुबी बेपत्ता भएको र लहना परेको मिनाहा दिंदा नोक्सानीको फाँट पुग्यो भने सो असामीले बेइमानी गरेको ठहर्दैन कैद पनि हुँदैन । लेखिएदेखि बाहेक अरु कुरा भै नोक्सान परेको भनेको र लेखिए बमोजिम नोक्सानी भएको भनेमा पनि नोक्सानीको सबुत गुजार्न नसकी जायजात गराई साहूको धन नपुग्ने भएमा साहूको धनमा बेइमानी गरेको ठहर्छ । त्यस्तामा कैद गरी पाउँ भनी दण्ड सजायको महलको ४२ नम्बर बमोजिम साहूले दरखास्त दियो भने λएक दिनको पच्चीस रुपैयाँको दरले बढीमा एक वर्षसम्म कैद गरी दिनु पर्छ । लेखिए बाहेक अरु उसका एकाघरसँगका अंशियार वा अपुताली खानेहरु समेतका नाउँमा नालिस गरेकोमा भने जायजात गरी भराउँदा नपुगेकोमा यिनीहरुले नोक्सानीको फाँट दिनुपर्दैन कैद पनि हुन सक्दैन - - - - - - - - - - - - - - १

माथि १ दफामा लेखिए बमोजिम व्यापारलाई बाहेक अरु वापतमा कर्जा लिए दिएकोमा जायजात गरी भराउँदा नपुग भएमा नोक्सानीको फाँट दिनु भने पर्दैन । जायजात भई नपुगेकोमा कैद गराई पाउँ भनी साहूले दण्ड सजायको महलको ४२ नम्बर बमोजिम दरखास्त दियो भने कर्जा लिने र सो लिखतमा मञ्जुरी भई

✂ सातौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

सहीछाप गर्ने एकाघरका हकदार अंशियारहरुका नाउँमा नालिस गरेकोमा भए माथि १ दफामा लेखिए बमोजिम गरी कैद गरी दिनु पर्छ । कर्जा लिने वा कर्जा लिंदाको लिखतमा मञ्जुरी भई सहीछाप नगर्ने एकाघरसँगका अंशियार हकदार वा अपुताली खानेहरुका नाउँमा नालिस परेकोमा जायजात भई नपुग भएमा कैद हुन सक्दैन - - २

माथि १।२ दफामा लेखिए बमोजिम असामीको जायजात गरी साहूलाई भराई दिंदा साहूको जम्मा उपर हुन नसकेको जतिमा ऐनले कैद गराउन पाउनेमा दरखास्त दिई कैद गराए पछि र कैद गराउन नपाउनेमा पनि सो जायजात हुँदाको मौकासम्मको दबाए छपाएको भए ऐनले उजूर गर्न पाउने बाहेक एक पटक जायजात गराई लिइसकेपछि नपुग भएको भनी फेरि असामीलाई पक्री लिन पाउँदैन । तमसुक खाता बही समेतको लिखतपत्र जे छ फट्टा गराई दिनु पर्छ - - - - - - - - - - - - - ३

२० नं. ॥ ॥ ✤... ... ...

२१ नं. ॥ ॥ अंशबण्डा गर्दा साहूको मञ्जुरी लिई बण्डा गरेको भए सो मञ्जुरी बमोजिम जुन हिसाबसँग बण्डा गरेकोछ सोही बमोजिम साहू असामीले लिनु दिनु पर्छ । साहूको मञ्जुरी नली बण्डा गरेकोमा एकै साहू पनि जति बण्डा लाग्छ कलमपिच्छे बण्डा गर्नु पर्छ । साहूको जीउ जीउ पर्ने गरी बण्डा गरेको सदर हुँदैन ।

२२ नं. ॥ ॥ अपुताली नखानेलाई साहूले पक्रन हुँदैन । अपुताली खाए पछि साहू तिर्दिन भन्न पनि हुँदैन । जुन हिसाबको अंश अपुताली पाउँछ सोही हिसाबसँग साहू पनि तिर्नु पर्छ । स्त्री अंश धनको महलको ३ नम्बर बमोजिमको अचल सम्पत्ति मात्र खाएकोमा भने त्यस्ताको साहू तिर्न कर लाग्दैन ।

२३ नं. ॥ ॥ चल अचल गैह्र राजीनामा दृष्टि भोगबन्धक लिई भोग गरेपछि थोरै वा घटिया रहेछ भनी वा बिग्रे नासिएमा समेत थैलीमा टण्टा गर्न हुँदैन । भोग गर्न नपाउने केही कुराले लेखिएको कुरा कच्चा ठहर्न गयो भने लिखत भए लिखत बमोजिम हुन्छ । लिखत नभएपनि साँवा र ऐन बमोजिम ब्याज समेतमा साहूले दाबी गरी लिन पाउँछ ।

२४ नं. ॥ ॥ आफूले बन्धकी लिई भोग गरेको घर साहूकै चलनमा बिग्र्यो वा पाताल भयो भने असामी भए असामी र निज नभए वा बस्न मञ्जुर नगरेमा 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि र कम्तीमा दुईजना भलाद्मी साक्षी राखी खर्च गरी बनाउनु पर्छ । घर निखन्न आउँदा त्यसरी साक्षी राखी बनाएको खर्च समेत थैलीमा गाभी हिसाब गरी लिनु दिनु पर्छ । असामी वा 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य वा प्रतिनिधि र कम्तीमा दुई जना भलाद्मी नराखी बनाएको खर्च लिन पाउँदैन । पाताल समेत भएछ भने आषाढदेखि आश्विनतक वर्षा चार महिना बाहेक भत्केको मितिले नक्सा पास गर्नु पर्नेमा पैंतीस दिनभित्र दरखास्त दिई पास भएका नक्सा बमोजिमको बनाउने म्यादभित्र र नक्सा पास गर्न नपर्नेमा एक वर्षभित्र बनाई तयार नगरे साहूको थैली भूस हुन्छ । पाताल जग्गा असामीको हुन्छ । घरवारी भोग बन्धकी लिएकोमा घर भत्की पाताल भयो भने पाताल भएको घरको र जग्गाको दामासाहीको हिसाबले जग्गाको मात्र रुपैयाँ लिन पाउँछ ।

---

✤ सातौं संशोधनद्वारा खारेज ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

२५ नं. ॥ ॥ एकालाई लिखत गरिदिएको अचल दोहोरो पारी अरुलाई कुनै व्यहोराले लेखिदिनु हुँदैन । जानी जानी दोहरी पारी लिनेको थैली परेको भए भूस हुन्छ । नजानी लिएकोमा यसै महलको २६ नम्बर बमोजिम लिन मञ्जुर नगरे पछिल्लाको थैली कपाली हुन्छ । त्यस्तो दोहोरो परेकोमा जसको लिखतको मिति अघिको छ उसैको सदर हुन्छ । म्याद नाघेपछिलाई ऐन बमोजिम हुन्छ ।

२६ नं. ॥ ॥ यसै महलको २५ नम्बर बमोजिम दोहोरा लिखत भएकोमा हक छाडी लिनु दिनु भएकोमा बन्धकवाला साहूले हक छाडी लिने चाहिंको थैली तिर्न पाउँदैन । अघि लेखाई लिनेले बन्धकी र पछिल्लाले हक छुटाई लिएको रहेछ भने अघिल्लाको थैली तिरी आफ्ना लिखत बमोजिम भोग गर्न पाउँ भनेमा पाउँछ अघिल्लाले हक छुटाई लिएकोमा भने पछिल्लाको थैली तिर्न कर लाग्दैन । बन्धक लिएको सदर हुने वा नहुने साहूले सो बन्धक लिएका अरु साहूको थैली तिरी आफ्नो थैलीमा समेत सो बन्धक परेको अचल भोग चलन गर्न पाउँ भन्छ भने भोग चलन गर्न पाउँछ । सदर हुने साहूले लिएसम्म अरुले लिन पाउँदैन । पछिल्ला साहू धेरै जना भएकोमा भने अघिल्ला लिखतवालाले कबुल गरेको भन्दा धेरै जना साहूको थैली पछिल्ला लिखतवालाले तिर्न कबुल गरेमा पछिल्लोले नै पाउँछ । बराबर तिर्न कबुल गरेमा भने जसको लिखतको मिति अगाडिको छ उसैले पाउँछ । रुपैयाँ तिर्न पाउनेले अड्डाबाट अन्तिम फैसला भएका मितिले पैंतीस दिनभित्र तिर्नु पर्छ । सो म्यादभित्र थैली तिर्न नसक्नेले पाउँदैन ।

✂२७ नं. ॥ ॥ दोहोरो लिखत भएकोमा पछिल्ला लिखतवालाले भोग गरेको मितिले अघिल्लाले भोगबन्धकीमा लिएको भए दुई वर्षभित्र र दृष्टिबन्धक भए भोग गर्न पाउने अवस्था भएका दुई वर्षभित्र उजूर गरे अघिल्लो लिखतवालाले पाउँछ । म्याद नाघेपछि अचल समाउन पाउँदैन । थैली कपाली हुन्छ । अघिल्लाले हक टुटाई लिएको भए पछिल्लाले जुनसुकै व्यहोराले लिएको भएपनि अघिल्लाले नै पाउँछ ।

२८ नं. ॥ ॥ दोहरा पारी लिखत गरिदिनेलाई पछिल्ला लिखतमा विगो देखिए सोही बमोजिम र सो नदेखिए अघिल्ला लिखतको विगो बमोजिम र सो लिखतहरुमा विगो नदेखिएमा पाँचसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

२९ नं. ॥ ॥ चल अचल भोग बन्धक वा दृष्टिबन्धक लिई राख्नेले तमसुक बमोजिमको वा त्यसभन्दा घटी लिई लख बन्धक राखी थैली लिन हुन्छ । बढ्ता लिई सार्नु हुँदैन । लखबन्धक परेको चल अचल अघि भोग दृष्टिबन्धक राख्नेले रुपैयाँ तिरी निखन्न जाँदा घटी लिई लख सारेकोमा आफूले बन्धक दिएका ठाउँमा तह तहसँग गै निखन्न जानु पर्छ । पूरा लिई लख सारेकोमा पछिल्ला साहूकहाँ निखन्न गए पनि हुन्छ । पछि लिनेले अघिको भन्दा बढ्ता थैली लिएको र करार लेखेको सदर हुँदैन ।

३० नं. ॥ ॥ चल माल धितो राखी कर्जा लिंदा दिंदा तमसुकमा मालको मोल तौल चढाई लिने दिने गर्नु पर्छ । असामीले रुपैयाँ तिरी माल निखन्न आउँदा साहूले जस्ताको तस्तो माल फिर्ता दियो भने साहूको साउँ र हिसाब बमोजिम दशौंद ब्याज समेत भराई दिनु पर्छ । साहूले धितोबन्धक राखेको माल फिर्ता गरिदिन सकेन खर्च गरेछ भने त्यस्ता साहूले रुपैयाँको ब्याज पाउँदैन । हिसाबमा असामीको

---

✂ सातौं संशोधनद्वारा संशोधित ।

फाजिल पर्ने रहेछ भने तमसुकका मितिदेखिको हिसाब गरी ब्याज समेत फाजिल रुपैयाँ असामीलाई फिर्ता गरिदिनु पर्छ ।

३१ नं. ॥ ॥ चल अचल सम्पत्ति गैह्र लेखी कर्जा लिंदा दिंदा यति नाघेपछि राजीनामा सुत्री बिक्री गरी लिनु वा राजीनामा गरी दिउँला वा राजीनामा भयो भन्ने बोली लेखिएको भएपनि सदर हुँदैन । सो लिखत धितो बन्धक सरहनै हुन्छ ।

३२ नं. ॥ ॥ ऐनले लिन दिन गर्न हुने सबै तरहको चल अचल बन्धक धितो लिंदा तमसुकमा लेखिए बमोजिमको व्यहोरा पुऱ्याई तमसुक लेख्ने मानिसकै हस्ताक्षरले दोहरी कागज लेखी तमसुकमा लेखिएकै साक्षीहरु राखी साहूले सहीछाप गरी असामीलाई दिने समेत गर्नु पर्छ । सो बमोजिम रीत नपुऱ्याई बन्धक लिनु दिनु गरेकोमा साहूलाई तमसुकमा लेखिएका विगोको दोहोरी नै गरी नदिएको भए सयकडा पाँच र लेखक वा साक्षी फरक पारेको मात्र भए सयकडा एक जरिबाना गरी सो कागजबाट नालिस उजूर सुनी इन्साफ गरिदिनु पर्छ ।

३३ नं. ॥ ॥ विदेशी नागरिकसँग विदेशमा लेनदेन व्यवहार भएकोमा नेपाल सरहदभित्र बुझाउने व्यहोराको साहूले असामीसँग नेपालको कानूनको रीत पुगेको लिखत गराई लिएको रहेछ र सो असामी नेपाली नागरिक रहेछ भने नेपालका सम्बन्धित अड्डाबाट कानून बमोजिम हेरिनेछ । सो बाहेक विदेशका नागरिकसित विदेशमा भएको लेनदेन व्यवहारको नालिस नेपालका अड्डाबाट हेरिने छैन ।

३४ नं. ॥ ॥ विदेशमा लेनदेन व्यवहार भएकोमा सो लिने दिने दुवै थर नेपाली नागरिक रहेछन् र नेपालको कानूनको रीत पुगेको लिखत रहेछ भने नेपालका सम्बन्धित अड्डाबाट नालिस सुनी इन्साफ गरिदिनु हुन्छ ।

३५ नं. ॥ ॥ साविक जिमिदारी साथमा रहेको र पछि कुनै व्यहोराले जिमिदारी साथैमा रहन आएको समेत जिमिदारी साथको जोत जिरायत जग्गा जिमिदारीसाथ दिन बाहेक जोत जिरायत छुटाई जिमिदारी मात्र वा जिमिदारीबाट छुटाई जोत जिरायत मात्र भएपनि धितो बन्धक राख्न र कुनै व्यहोरासँग हक छुटाई दिन लिन समेत हुँदैन । दिए लिएमा बदर हुन्छ । सो दिए लिएको जिमिदारी मै थामी जानी जानी थैली हाली लिएको भए परेको थैली अड्डाबाट भरीभराउ हुन सक्तैन । जानी जानी लिनेलाई पचास रुपैयाँ जरिबाना गर्नु पर्छ । नजानी लिनेलाई बात लाग्दैन नजानी लिने साहूको थैली कपाली हुन्छ । जिमिदारी साथमा रहेको जोत जिरायत छुटाई दिए वापत दिनेलाई रुपैयाँ लिई दिएको भए लिएको रुपैयाँको सयकडा दशका दरले र रुपैयाँ नलिई त्यसै दिए लिएको भए फि बिगाहा दश रुपैयाँका दरले जरिबाना गर्नु पर्छ । आफूले आर्जेको नम्बरी बाँकी नलाग्दै अघिबाट लिए दिएको सदर हुन्छ ।

३६ नं. ॥ ॥ चल अचल सम्पत्ति गैह्र सट्टा पट्टा गर्दा घरका मुख्य मालिकलाई राजी गराई सट्टा पट्टा गर्नु पर्छ । सट्टा पट्टा गरेका पैंतीस दिनभित्र चित्त नबुझ्नेले फिर्ता लिन दिन हुन्छ । मुख्य मालिकलाई राजी नगराई अरुसँग सट्टा पट्टा गरेकोमा सो गरेको मितिले चलमा भए पैंतीस दिनभित्र र अचलमा भए छ महिनाभित्र सम्ममा थाहा पाएको पैंतीस दिनभित्र नालिस नपरे लाग्न सक्तैन ।

३७ नं. ॥ ॥ [γ]... ... ...

---

γ करार सम्बन्धी ऐन, २०२३ द्वारा खारेज ।

३८ नं. ॥ ॥ दिनु पर्ने दिन जाँदा बुझिदिएन वा निखन्न जाँदा निखन्न दिएन भन्ने उजूर परेकोमा सो कुरा ठहरे बुझी नलिएको अङ्कको र बुझाउनै नलगेको वा बुझाउन नपाउने झुट्टा उजूर गरेको ठहरे झुट्टा उजूर गर्नेलाई झुट्टा ठहरेको अङ्क जतिको घटी बढी भने पक्रेको ठहरे घटी बढी भनेको पक्रेको अङ्क जतिको सयकडा अढाई जरिबाना गर्नु पर्छ । लेखिए बमोजिम बुझाउने चाहिँको उजूर परी भराई दिए जति विगोको दशौंद लाग्दैन ।

३९ नं. ॥ ॥ [७]... ... ...

४० नं. ॥ ॥ यस्तो व्यवहार गरेको सदर हुँदैन भनेको, नालिस सुनिने छैन भनेको, नाबालकको धन बिगार्नलाई बेइमानी गरेको, ब्याजको ब्याज खाएको, ब्याजमा दशौंददेखि बढ्ता लेखाएको वा लखबन्धक लिंदा बढ्ता लिएको बढ्ता करार लेखाएको यति कुरामा हदम्याद लाग्दैन । यस महलमा अन्यत्र हदम्याद लेखिएको वा हदम्याद लाग्दैन भनेको कुरामा बाहेक अरुमा भए गरेको मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

[७] सातौं संशोधनद्वारा खारेज ।

# महल १९

## दान बकसको

१ नं. ॥ ॥ आफ्नो हक पुग्ने सम्पत्ति दान वा बकस गरी दिन हुन्छ । सो बमोजिम दान वा बकस गरिदिंदा हकवालालाई बकस भनी र अरुलाई दान वा बकस जुन व्यहोराले दिए पनि हुन्छ । आफ्नो खुश गर्न पाउने बाहेक अरुमा अंशियार र हक पुग्नेहरुको मञ्जुरीको लिखत नलिई वा साक्षी नराखी दान बकस गरिदिन हुँदैन ।

२ नं. ॥ ॥ दिनेको शेषपछि खान पाउने कुराको लिखत गरी दिएकोमा सो लिखत गरी दिनेको चित्त नबुझी बदर गर्छु भन्छ भने जहिलेसुकै बदर गर्न पाउँछ । सो लिखत बदर गर्नालाई लिखत रजिष्ट्रेशन भएको वा आफ्ना इलाकाको रजिष्ट्रेशन गर्ने अड्डामा गै दरखास्त दिई बदर गराउनु पर्छ । त्यस्तो दरखास्त पर्न आएमा रजिष्ट्रेशन गर्ने अड्डाले पनि उजूरी दरखास्त बमोजिम शेषपछिको जतिलाई बदर भएकोछ भन्ने व्यहोराको तुरुन्त पूर्जी लेखी अड्डाको छाप र हाकिम तहरीरको सहीछाप लगाई सो बदर गर्न आउनेलाई दिई सो पूर्जी दिएको मितिले बाटाको म्याद बाहेक सात दिनभित्र लिखत गरी पाउनेलाई उसले पाएको लिखत बदर भएको जनाउ पठाई दिने गर्नु पर्छ । सो दरखास्तको पाँच रुपैयाँ दस्तुर लिनु पर्छ ।

३ नं. ॥ ॥ कसैले केही व्यहोरासँग आफ्नो हक छाडी अरुको हक लाग्ने गरी एकै घरमा आधा वा केही खण्ड सो घर वा घरले चर्चेको जमीन दान बकस गरी दिई पाएको रहेछ र पाउनेले आफूले पाएको वा दिनेले आफूले दिएदेखि बाँकी अर्कालाई दिए भने अघि दिने वा अघिबाट दिनेका सोही ठाउँमा बस्ने हकवालाले र दिनेले बाँकी अर्कालाई दान बकस गरिदिए भने पाउने वा सोही ठाउँमा बस्ने उसका हकवालाले लिखत रजिष्ट्रेशन भएको मितिले छ महिनासम्ममा थाहा पाएको पैंतीस दिनभित्र मोल अङ्क देखिनेमा सो बमोजिम र अङ्क नदेखिनेमा पञ्चकृति मोल दिई लिन पाउँछन् ।

४ नं. ॥ ॥ एउटालाई दान बकस दिइसकेको चल अचल अर्कालाई दोहोरो पारी दानबकस गरिदिनेलाई मुद्दा हेरी पाँचसय रुपैयाँसम्म जरिबाना हुन्छ ।

५ नं. ॥ ॥ आफूले दान बकस पाएको कुरामा आफ्नो हक पुगेको मितिले र दिन नहुने दान बकस दिएकोमा पाउनेको हक पुगी भोग चलन गरेको मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल २०

## दामासाहीको

१ नं. ॥ ॥ आफ्नो जीउले लाएको ऋणमा साहूको मञ्जुरी बिना दामासाही हुन सक्तैन । त्यस्तालाई साहूले कि भाखादिनु पर्छ कि दामासाही गरी लिनु पर्छ । भाखा पनि नदि वा दामासाही पनि नगरी जोर जुलुम गर्न हुँदैन ।

२ नं. ॥ ॥ आफ्नो जीउले लाएको बाहेक अरु अंशियार हकवालाले लाएको ऋणमा उसका अपुताली खाने अंशियार हकदारले दामासाही गराई माग्नेमा साहूले मञ्जुर नगरे पनि दामासाही हुन्छ । असामीको मञ्जुरी बेगर भाखा हुन सक्तैन ।

३ नं. ॥ ॥ व्यापारलाई आफ्नो जीउले लाएको ऋणमा सो कर्जा लिनेले र त्यसबाट काम गर्दा सरीक भई काम काज गरी आएका सोह्र वर्ष नाघेका जानकारले भाखा माग्दा वा दामासाही गराउँदा नोक्सानीको फाँट दिनु पर्छ । लेखिए बाहेक अरुले आफ्ना हकदारले लगाएको ऋणमा र आफ्नो जीउले लाएको ऋण भएपनि व्यापारलाई बाहेक अरु ऋणमा नोक्सानीको फाँट दिनु पर्दैन । नोक्सानीको फाँट दिनु पर्नेले पनि दुईसय रुपैयाँसम्मको फाँट दिन नसकेकोमा बात लाग्दैन ।

४ नं. ॥ ॥ असामीले दामासाही वा भाखा गराई माग्नलाई नालिस दिनु पर्ने भएमा यस वापतमा आफ्नै जीउले वा अंशियार हकदारले लिएको फलाना फलाना साहूलाई जम्मा यति तिर्नु पर्ने यस कारणले तिर्न सकिन हक पुग्ने जायजात जम्मा यति मात्र छ भनी भएसम्मको आफ्ना हक पुग्ने जायजातको र ऐनले र नोक्सानी फाँट दी रहनु पर्नेमा यस्तो परी यति नोक्सानी पर्‍यो भनी नोक्सान परी बिग्रेको यथार्थ फाँट समेत पछि बुझ्दा फरक नपर्ने गरी लेखी प्रमाण समेत दी दामासाही गराई वा भाखा माग्नेमा यति वर्षसम्मको भाखा पाउँ भएको साहू जायजात दबाई नभएको साहू जायजात देखाएको वा नोक्सानीको फाँट देखाउनु पर्नेमा नोक्सानी नपरेकोलाई नोक्सान पर्‍यो भनी ढाँटी फरक पारी लेखिदिएको ठहरे कानून बमोजिम सजाय सहूँला बुझाउँला भनी स्पष्ट खोली रीत पुर्‍याई असामीले ऐनले भरी पाउने सबै साहूको नाउँमा नालिस दिए ली प्रतिवादी साहूहरुले पनि दामासाही गराई लिनामा वा ऐनले भाखा दिन पाउनेमा भाखा दिनामा जुनमा मञ्जुर छ सो कुरा स्पष्ट खोली भाखा दिन पाउनेमा भाखा दिन मञ्जुर भए असामीले मागे बमोजिमको वा यति वर्षसम्मको भाखा दिन्छु भनी र भाखा नदि दामासाही नै गरी लिनेमा नोक्सानी परेको भनी असामीले लेखिदिएको फाँट देखाएको जायजात साहू ठीक नभए यस कारणले यति ठीक छैन यो यो नभएको साहू देखाएको र भएको यो यो जायजात यस परिबन्दले यस ठाउँमा दबाई राखेकोछ भनी स्पष्ट खोली त्यस कुराको समेत प्रमाण देखाई नालिसमा लेखिएको फरक परेका जति कुराको पूरा जवाफ लेखी प्रतिउत्तर दिए प्रतिवादी साहूहरुको उजूर समेत बुझी कानून बमोजिम गर्नु पर्छ ।

५ नं. ॥ ॥ दामासाही गराई पाउँ भन्ने नालिस परेमा दामासाही गराउनलाई आएको कुरा दामासाही गराउन पाउने असामीले नदेखाएका अरु साहूहरुलाई थाहा दिना निमित्त फलानाले फलाना फलाना साहूलाई दामासाही गराई दिनलाई आएकोछ भएको साहू दबाई लेखेको रहेछ भने असामीले नदेखाएको साहूहरुले असामीले दिएको नालेसको नक्कल ली हेरी बुझी आफ्नो लिनु पर्ने कुराको सबुत कागजपत्र ली यो सूचना टाँसिएको मितिले बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र यसै महलको ४ नम्बर

बमोजिम असामीले देखाएका साहूले खोली दिनु पर्ने जति कुरा सबै खोली भाखा मागेकोमा मागे बमोजिमको भाखा दिने नदिने नोक्सानीको कारण र जायजातको फाँट लेखिएको ठीक बेठीक के रहेछ सो समेत नालिसमा लेखिएका कुराको जवाफ लेखी प्रमाण दिनु पर्नेमा देखाई आफ्नो भएको व्यहोराको सबै कुरा र लिनु पर्ने अङ्क देखाई प्रतिउत्तर सरहको सरकारी तमसुकी बाँकी लिनु पर्ने अड्डाले ऐन बमोजिमको लेखोट पठाउनु अरु साहूहरुले आफै हाजिर भई वा ऐन बमोजिमको रीत पुऱ्याई वारिसद्वारा दाखेल गर्न आउनु र बुझी ठहरेका साहूहरुको थैलीमा समेत ऐन बमोजिम दामासाही हुनेछ म्यादभित्र नपठाए नआए पछि हाम्रो थैलीमा दामासाही गराई पाउँ भन्ने समेत कुराको उजूर लाग्न र असामी पत्री लिन समेत पाउने छैनौ भन्ने व्यहोराको सूचना लेखी असामीले देखाएका साहूलाई इतलायनामा जारी गरेका दिन अड्डाको छाप लगाई आफ्नो अड्डाको ढोकामा र आफ्नो जिल्लाको सबैले देख्ने शहर गाउँ बजारमा असामीले देखाएका साहूहरुका नाउँमा इतलायनामा जारी गरेकै दिन तामेल गर्न पठाई र सरकारी तेजारथ सरसापट दिने अड्डाहरुलाई समेत जनाउ पठाई सो टाँसिएको जनाउ पठाएको निस्सा समेत मिसिल सामेल राख्नु पर्छ । लेखिएका म्यादभित्र लेखिए बमोजिम लेखोट पठाए लिखित सबुत निवेदनपत्र साथ दाखिल गरे त्यस साहूलाई असामीले देखाएका अरु साहू सरह राखी असामीको पनि कागज गराई जो बुझ्नु पर्ने प्रमाण समेत बुझी ऐन बमोजिम गर्नु पर्छ । म्यादभित्र लेखोट निवेदनपत्र नपठाउनेको हामीहरुको लिनु पर्ने बाँकीमा दामासाही भएन भन्ने कुराको पछि उजूर लाग्न र अड्डाबाट भरी भराउ समेत हुन सक्तैन ।

६ नं. ॥ ॥ सरकारी लिनु पर्ने तमसुकी बाँकीमा दामासाहीको नालिस परेको जनाउ पठाउँदा पनि म्यादभित्र जवाफ नपठाए त्यसको हकमा दामासाही हुन सक्तैन । अरु साहूलाई दामासाही गरी दी सकेपछि सो सरकारी बाँकीमा ऐन बमोजिम असामीबाट उपर नभए उपर नभए जति जनाउ पठाउँदा पनि जवाफ नदिए जवाफ नदिने हाकिमबाट र जनाउ दिनु पर्नेमा जनाउ नदि अरु साहूहरुलाई मात्र दामासाही गराई दिएको भए जनाउ नदिने हाकिमबाट उपर गरी लिनु पर्छ ।

७ नं. ॥ ॥ दामासाही गराई माग्न आएमा ऐनले नालिस नलाग्ने भइसकेका चाहिं साहूलाई दामासाही हुन सक्तैन । ऐनले नालिस लाग्न सक्ने जति साहूहरुलाई मात्र दामासाही गरी दिनु पर्छ ।

८ नं. ॥ ॥ असामीले देखाई लेखिदिएको र पछि प्रमाणबाट देखिएको जायजात दामासाही वा भाखा नहुँदै अघिबाट असामीले हिनामिना बेचबिखन, धितोबन्धक, दान बकस समेत केही गरिकन पनि कसैलाई दिन र लिए दिएको सदर समेत हुँदैन ।

९ नं. ॥ ॥ असामीले सम्पत्ति लुकाएको दबाएकोमा सम्पत्तिको फाँट दिए देखाएको मितिले दश वर्षभित्र पत्ता लगाई उजूर नगरे लाग्न सक्तैन ।

१० नं. ॥ ॥ नोक्सानीको फाँट दिनु पर्नेमा लेखिएको नोक्सानी परेको प्रमाण पुऱ्याउन पनि सकेन आफूले देखाएको वा प्रमाणबाट देखिएको सम्पत्ति दिंदा पनि दिएन भने त्यो असामीले बेइमानी गरेको ठहर्छ । बेइमानी गरे वापत जति विगोमा बेइमानी गरेकोछ उसै विगोको सयकडा पन्ध्र जरिबाना गरी भएको सम्पत्तिबाट

दामासाही गरिदिनु पर्छ । नपुग विगोमा साहूले कैद गराई पाउँ भनेमा λएक दिनको पच्चीस रुपैयाँको दरले बढीमा छ महिनासम्म कैद गरिदिनु पर्छ । कर्जा लिनेले काम गर्दा कामकाज गरी आएको सोह्र वर्ष नाघेकालाई भए माथि लेखिएको सजायको आधी सजाय गर्नु पर्छ ।

११ नं. ॥ ॥ बेइमानी गरेकोमा यसै महलको १० नम्बर बमोजिम कैद भइसकेपछि सो कैद भुक्तान भै नसक्दै जायजातको पत्ता लगाई ल्याई साहू भर्ना पुग्यो भने भर्ना पुग्ने बित्तिकै छोडिदिनु पर्छ ।

१२ नं. ॥ ॥ जायजात हुने धनमाल लुकाउन लान र लुकाउन ल्याएको जानी जानी नासो लिन वा लुकाई दिन समेत हुँदैन । लुकाउन लगेको वा लुकाई दिएको भए विगो बुझी ली लुकाउन लाने लुकाइदिनेलाई विगोको सयकडा पाँचको दरले जरिबाना हुन्छ ।

१३ नं. ॥ ॥ दामासाहीको नालिस पर्नुभन्दा अगावै ऐनको रीत पुऱ्याई चल अचल धितो बन्धक दिएकोमा सो चल अचलबाट बन्धक लिने साहूको थैली उपर भै बाँकी रहन आएको जति मात्र अरु साहूलाई दामासाही गरिदिनु पर्छ ।

१४ नं. ॥ ॥ दामासाही गर्दा ऐनको रीत पुऱ्याई धितो बन्धक ली राख्ने साहूको थैली र साहूको वा अरु कसैको दामासाही गराउनेले नासो धरौट ली राखेको नासो धरौट माल दामासाहीमा जाँदैन । सो र अरु ऐनले पर सार्नु पर्ने जति पर सारी बाँकी रहेको असामीको हकको चल अचल असामी समेत गैह्र दामासाहीमा जान्छ ।

१५ नं. ॥ ॥ दामासाही गरी भराई दिंदा दामासाही गराई माग्नेका हकको सम्पत्तिमा यसै महलको १४ नम्बर बमोजिम पर सार्नु पर्ने जति पर सारी बन्धकी लेखी दिराखेको र अरु चल अचल समेत गैह्र लिलाम बिक्री गरी आएकोबाट बन्धकवाला साहूको यसै महलको १३ नम्बर बमोजिम थैली भराई बाँकी रहेको अरु ऐनले भरी पाउने ठहरेका जति साहूलाई ऐन बमोजिम दामासाही गरी बाँडी दी साहूसँग रहेको कागजपत्र केराई फेराई दिनु पर्छ । दामासाहीबाट नपुगेकोमा असामी पत्री लिन पाउँदैन ।

१६ नं. ॥ ॥ दामासाही गरी भराई दिनु पर्दा दण्ड सजायको महलको २६ नम्बर बमोजिम विगो वापत जायजात गर्दा असामीहरुलाई थामिदिन र पर सार्नु पर्ने जति थामी पर सारी अरु बाँकी रहेकोबाट ऐन बमोजिम दामासाही गरिदिनु पर्छ ।

१७ नं. ॥ ॥ भाखा गराई दिंदा मागे दिए बमोजिमको भाखा दिन लिनलाई साहू असामी दुबैथरीको मञ्जुरी भएकोमा मञ्जुरी बमोजिमको भाखा गराई दिनु पर्छ । साहू असामी दुबै थरीको मुख नमिलेकोमा दश वर्षदेखि बढ्ताको भाखा गराईदिन हुँदैन ।

१८ नं. ॥ ॥ कोही साहू भाखा दिने कोही साहू दामासाहीमा लिने भयो भने दामासाहीमा कबुल गर्ने जतिलाई दामासाही गरी गराई दिई भाखा दिने जतिको भाग असामीलाई नै सौपिदिई पल्हाएमा लेनदेन व्यवहारको महलका म्यादभित्र ऐन बमोजिम गरी भराइलिनु भनी सुनाई दिनु पर्छ । सो असामीलाई सौपिदिएको भाखा दिने साहूको भाग असामीले बेचबिखन समेत गर्न पाउँछ ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

१९ नं. ॥ ॥ दबाई राखेको दामासाही भई नसक्दै अघिबाट पत्ता लगाई ल्याए पत्ता लगाई ल्याउने र अरु साहूहरुलाई समेत ऐन बमोजिम दामासाही गरिदिनु पर्छ । दामासाही भइसकेपछि मात्र म्यादभित्र असामीले दबाएको कसैले पत्ता लगाई ल्यायो भने पत्ता लगाई ल्याउनेलाई पहिले उसको थैलीमा नपुगेको भर्ना दिई बढ्ता भए अरुलाई दामासाही गरिदिनु पर्छ ।

२० नं. ॥ ॥ साहू देखाउँदा ऐनले भरी पाउन सक्ने भएको साहू नदेखाउने वा नभएको बढी साहू देखाउनेलाई कर्जा लिनेले नै वा हकदारले जानी थाहा पाई छुटाए बढी देखाएको भए सयकडा दश जरिबाना गर्नु पर्छ । थाहा नपाई छुटेको बात लाग्दैन ।

२१ नं. ॥ ॥ भोग दृष्टिबन्धकवालाको थैली परसारी र नासो धरौट फिर्ता गराई दिएकोमा दशौंद लाग्दैन ।

# महल २१

## रजिष्ट्रेशनको

१ नं. ॥ ॥ ◗................ अचल सम्पत्ति भएकाको मानु छुट्टिएको वा मानु जोरिएको लिखत र अरु गैह्र अचल सम्पत्तिको देहायमा लेखिए बमोजिमको लिखत गर्दा गराउँदा रजिष्ट्रेशन गराउनु पर्छ - -- - - - - - - - - - -

बिक्री गरी वा अरु कुनै किसिमले आफ्नो हक छोडिदिएको लिखत - - - - - - - १

जुनसुकै किसिमको बन्धकी तमसुक - - - - - - - - - - - - - - - - - - - - १

✂भोग वा दृष्टिबन्धकको लख सारेको तमसुक - - - - - - - - - - - - - - - १

शेष पछिको बकसपत्र - - - - - - - -- - - - - - - - - - - - - - - - - १

सट्टा पट्टाको लिखत - - - - - - - - - - -- - - - - - - - - - - - - - १

अंशबण्डाको लिखत - - - - - - - - - - - - - - - - - - - - - - - - - १

२ नं. ॥ ॥ ✿... ... ...

३ नं. ॥ ॥ यसै महलको १ नम्बर बमोजिम रजिष्ट्रेशन गराइरहनु नपर्ने लिखत पनि रजिष्ट्रेशन गराउन हुन्छ । सो बमोजिम कसैले रजिष्ट्रेशन गराउन आएमा रजिष्ट्रेशन गर्ने अड्डाले पनि यसै महल बमोजिमको रीत पुऱ्याई रजिष्ट्रेशन गरिदिनु पर्छ ।

४ नं. ॥ ॥ ऐनले रजिष्ट्रेशन गर्नु पर्ने लिखत गर्दा अड्डैबाट होस् भनी अड्डैमा कागज गरी दिने लिने दुबैथरी आई लेखाउनु वा पहिले घरायसमा ऐन बमोजिम सहीछाप समेत गराई लिखत गरी सो लिखत ली लिखत भएका मितिले छ महिनाभित्र रजिष्ट्रेशन गरी दिने अड्डामा आई रजिष्ट्रेशन गराउन वा रीत बमोजिम घरायसमा कागज लेखी सहीछाप गराउन मात्र बाँकी राखी सो कागज ली रजिष्ट्रेशन गरिदिने अड्डामा आई रजिष्ट्रेशन गराउन पनि हुन्छ । अड्डैबाट गरी पाउँ भनेकोमा अड्डैबाट लेखी दी र घरायसमा सहीछाप समेत गराई ल्याएको र सहीछाप गर्न बाँकी राखी ल्याएकोमा समेत रीत पुगे नपुगेको जाँची रीत नपुगेकोमा अर्को लेखी दि रीत पुगेकोमा त्यसै कागजमा अड्डैको सामुन्ने लिने दिनेको र सनाखत गर्ने साक्षी समेतको सहीछाप गराई रजिष्ट्रेशन गरिदिनु पर्छ ।

५ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने घरसारको लिखत ऐनका म्यादभित्र लिने दिने दुबैथरी अड्डामा गै रजिष्ट्रेशन गराउनु पर्छ । ▦... ... ... ...

६ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने घरायसको लिखत यसै महलको ५ नम्बर बमोजिम रजिष्ट्रेशन गराई लिन सकेको रहेनछ भने त्यस्तो लिखतबाट कुनै

---

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

✂ सातौं संशोधनद्वारा संशोधित ।

✿ सातौं संशोधनद्वारा खारेज ।

▦ सातौं संशोधनद्वारा झिकिएको ।

अचल सम्पत्ति पत्री दावी गरेको नालिस लाग्न सक्तैन । थैली परेकोमा सो थैली र लिखत बमोजिमको सम्पत्ति भोग गर्न नपाएकोमा भोग गर्न नपाए जतिको कानून बमोजिमको ब्याज समेत साहूले कपाली सरह भराई लिन पाउँछ ।

७ नं. ॥ ॥ [७]... ... ...

८ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने घरसारको लिखत सो लिखत गरी दिने मरी म्यादभित्र रजिष्ट्रेशन हुन नसकेकोमा ऊ मुनिका हकदारले रजिष्ट्रेशन गरी दिने म्याद पैंतीस दिनभन्दा बढी बाँकी छँदै मरेकोमा बाँकी म्यादभित्र र पैंतीस दिनभन्दा घटी बाँकी छँदै मरेमा मरेका मितिले पैंतीस दिनभित्रै रजिष्ट्रेशन गराई लिनु दिनु पर्छ । लेखिएका म्यादभित्र मर्नेपट्टिका मुख्य हकदार जो हो उसलाई ल्याई रजिष्ट्रेशन गराउन आएमा लिखत सकारी रजिष्ट्रेशन गरी दिन मञ्जुर गरे सो लिखतको शिरमा व्यहोरा जनाई सहीछाप गराई ऐन बमोजिमको रीत पुऱ्याई रजिष्ट्रेशन गरिदिनु पर्छ ।

९ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने घरसारमा भएको लिखत रजिष्ट्रेशन हुन नपाउँदै सो लिखत गरिदिने मानिस मऱ्यो त्यसको ऐनले अपुताली खाने हकदार कोही छैन रजिष्ट्रेशन गरी पाउँ भनी लिखत गराई लिनेले ऐनका म्यादभित्र दरखास्त दिन आएमा यस्तो व्यहोराको लिखत घरायसमा गरिदिई मरेको हो होइन मर्नेका अपुताली खाने हकदार कोही छौ भने बाटाका म्याद बाहेक पन्ध्र दिनभित्र हाजिर भै जाहेर गर्न आउनु लेखिएका म्यादभित्र मर्नेको अपुताली खान पाउने हकदार हाजिर हुन नआए रजिष्ट्रेशन भै जानेछ भन्ने समेत व्यहोराको म्याद सो लिखत गरी दी मर्नेको गाउँ शहर टोलमा १ घरमा १ रजिष्ट्रेशन गरिदिने अड्डाको ढोकामा १ र सबैले देख्ने ठाउँमा १ समेत टाँसिदिनु पर्छ । सो म्यादभित्र मर्नेको अपुताली खाने हकदारको वा नेपाल सरकारमा आउने अपुताली भए जोसुकैको लिखत गरी दिएको वा मरेको छैन भन्ने उजूर नपरे म्याद नाघेको मितिले सात दिनभित्र लिखत गरी दी मरेको जान्ने भनी दरखास्तवालाले लेखिदिएको मानिस र सो लिखतमा लेखिएका साक्षीहरु बुझी बुझिएसम्मका प्रमाणबाट लिखत गरिदिसकेपछि मरेको ठहऱ्यो र त्यसको अपुताली खाने हकदार पत्ता लागेन भने सोही व्यहोरा जनाई कानून बमोजिमको रीत पुऱ्याई रजिष्ट्रेशन गरिदिनु पर्छ । जीउँदोलाई मऱ्यो भनी वा लिखत गरी नदिएकोमा गरिदिएकोछ भनी वा अपुताली खाने हकदार भएको जानी जानी थाहा पाई छैन भनी ढाँटी दरखास्त दी रजिष्ट्रेशन गराएको ठहरे रजिष्ट्रेशन बदर गरी ऐन बमोजिम सजाय समेत गर्नु पर्छ ।

१० नं. ॥ ॥ रजिष्ट्रेशन हुने लिखतमा लिने दिने दुवैथरीको देहायमा लेखिए बमोजिमको व्यहोरा पारी लेख्नु पर्छ । सो लिखत घरायसमा भएको र अड्डैमा भएको जे छ खुलाई सो लिखतको शिरमा लेखी हाकिम, तहरीर र फाँटवालाले सहीछाप गर्नु पर्छ । डोर मार्फत भै आएकोमा डोरमा खटी गएकाले समेत सहीछाप गर्नु पर्छ -

लिखत गरी दिने खूद महजूद भई गरी दिएकोमा अरु कसैको हक नलाग्ने मेरो हकको कसैलाई अन्त बन्धकी वा हक छोडी लेखी नदिएको यस्तो किसिमको मेरो सम्पत्ति यो व्यहोरासँग लेखी दिएँ भन्ने व्यहोरा लेखाउनु पर्छ - - - - - - १

लेखि दिने मरी त्यसको हकदारले रजिष्ट्रेशन गरी दिनेमा फलानाले फलाना मितिमा यस व्यहोरासँग फलानालाई लेखी दिई राखेको हुनाले सो बमोजिम रजिष्ट्रेशन गरी दियौं भन्ने व्यहोरा लेखाउनु पर्छ - - - - - - - - - - - - - २

---

[७] सातौं संशोधनद्वारा खारेज ।

रुपैयाँ लिने दिने लिखत भएकोमा भए रुपैयाँ घरसारमै वा अड्डैमा लिई लेखी दिएको भन्ने व्यहोरा लेखाउनु पर्छ - - - - - - - - - - - - - - - - - - ३

लेनदेनमा अघिको तमसुकी रुपैयाँनै वा त्यसमा केही थप गरी वा न्हेडिक तिरी ल्याएको भए सो व्यहोरा लेखाउनु पर्छ - - - - - - - - - - - - - - - - - ४

दिनेको हकको प्रमाण भए यो यो प्रमाण छ भन्ने लेखाउनु पर्छ - - - - - - - ५

११ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने ✂लिखत रजिष्ट्रेशन गराउन अड्डामा नआई अड्डाबाट डोर खटाई घरमै रजिष्ट्रेशन गराई पाउन कसैले दरखास्त दिएमा सो रजिष्ट्रेशन गर्ने अड्डाको इलाकाभित्रको रहेछ भने हाकिम वा कारिन्दा सो दरखास्त बमोजिम घरैमा गै ऐनको रीत पुऱ्याई ✂रजिष्ट्रेशन गरिदिनु पर्छ । लिखत गरी दिने व्यक्ति मात्र अड्डामा हाजिर भै कागज गराई लिने व्यक्ति हाजिर नभएकोमा लिखत गरी लिनेले आफ्नो छाप र आवश्यक लेखोट समेत दी मानिस पठाएमा पनि रजिष्ट्रेशन गरिदिनु पर्छ ।

△११क. नं. ॥ ॥ आफ्नो हक पुग्ने अचल गैह्र बेचबिखन गर्दा र रजिष्ट्रेशन हुनु पर्ने लिखत गरी दिने व्यक्ति अड्डामा हाजिर हुन नसक्ने मनासिब कारण देखाई आफूले बेचबिखन गर्नु पर्ने अचल सम्पत्ति किटान गरी ऐनले वारिस दिन हुने जुनसुकै व्यक्तिलाई आफ्नो तर्फबाट हक छोडी बेचबिखन गर्न सक्ने गरी अख्तियारनामा लेखी अदालती बन्दोबस्तको महलको ७१ख. नम्बरको रीत पुऱ्याई अधिकृत वारिस मुकरर गर्न हुन्छ । त्यस्तो अधिकृत वारिसले आफूले पाएको अख्तियारनामाभित्र रही वारिस दिनेको हकमा अधिकृत वारिसले नै रजिष्ट्रेशन गर्न हुन्छ ।

१२ नं. ॥ ॥ यसै महलका ११ नम्बर बमोजिम घरसारमा लिखत गराउनलाई खटी जानेले ऐन बमोजिमको रीत पुऱ्याई स्रेस्ता मिलाउना निमित्त लिखतहरु लिई आउँदा र दस्तुर बुझी लिंदा भरपाई नदि त्यसै ल्याउन हुँदैन । जससँग लिएकोछ उसलाई आफ्नो भरपाई दी बुझी ल्याई अड्डामा स्रेस्ता मिलाई सकेपछि आफूले बुझी ल्याएको लिखत फिर्ता र दस्तुर बुझाएको अधकट्टी समेत बुझाई दी आफूले अघि गरी दिएको भरपाई खिची लिने गर्नु पर्छ ।

१३ नं. ॥ ॥ यसै महलको ११ नम्बर बमोजिम घरायसमा लिखत गराउनलाई रजिष्ट्रेशन गर्ने अड्डाका हाकिम कारिन्दा बोलाउन जाँदा अड्डाका हाकिम कारिन्दा आउना साथ लिखत गर्नालाई हर्जा नहुने गरी मानिस कागजपत्र समेत सबै ठीक गराई मात्र बोलाउन जाने गर्नु पर्छ । लेखिए बमोजिम नभएकोबाट लिखत गर्नालाई अड्काउ परेमा पाँच रुपैयाँ जरिबाना गरी लिई अड्डाको स्याहामा आम्दानी बाँध्नु पर्छ र रजिष्ट्रेशन गर्ने कुराको हकमा यथासम्भव चाँडो रजिष्ट्रेशन गरी फर्कनु पर्छ ।

१४ नं. ॥ ॥ लिनु दिनु गर्दा रुपैयाँ अड्डैका सामुन्नेमा गनाई लिन दिन हुन्छ । घरसारमा लिनु दिनु भएकोमा अड्डामा रुपैयाँ नल्याए पनि हुन्छ ।

---

✂ सातौं संशोधनद्वारा संशोधित ।
△ सातौं संशोधनद्वारा थप ।

१५ नं. ॥ ॥ अचल सम्पत्ति सम्बन्धी कुनै लिखत गर्दा गराउँदा सो सम्पत्तिको कुनै कागज स्रेस्तामा किल्ला किटिएको भए सोही किल्ला र नकिटिएको भए जुन किल्ला हो फरक नपारी छुट्टा छुट्टै कित्ताको छुट्टाछुट्टै किल्ला लेख्नु लेखाई लिनु पर्छ ।

१६ नं. ॥ ॥ लिखत गर्दा सो लिखत गरी दिनेले घर जग्गाको किल्ला लेखाएकोमा पछि सो किल्ला ठीक छैन भन्ने उजूर परेमा प्रमाणबाट ठहरे बमोजिम हुन्छ । लिखतमा लेखिएकोले मात्र किल्ला कायम हुन सक्तैन ।

१७ नं. ॥ ॥ जग्गा जमीनको रजिष्ट्रेशन गर्दा जुन जग्गाको लिखत रजिष्ट्रेशन हुने हो सो जग्गामा दिनेको हक पुगेको प्रमाण वा तिरो तिरेको रसिद बेगर रजिष्ट्रेशन गर्न गराउन हुँदैन । दाखिल भएको प्रमाण वा रसिद समेत राखी रजिष्ट्रेशन गरी दी प्रमाण वा रसिद लिखत गराई लिनेलाई सौंपी दिनु पर्छ । धेरै जग्गाको एउटै प्रमाण वा रसिद भएमा अड्डाबाटै त्यसको रीतपूर्वकको नक्कल लिखत गराई लिनेलाई दिलाई सक्कल जसको हो उसैलाई फिर्ता दिनु पर्छ ।

१८ नं. ॥ ॥ लिनु दिनु भई लिखत गर्दा गराउँदा सो दिनेको हकको प्रमाणको कागज समेत दाखिल गरेको भए सो कागज साहूलाई सौपनु पर्नेमा सौपी लिखतमा समेत सो व्यहोरा पार्नु पर्छ । जग्गा जमीनको हकमा यसै महलको १७ नम्बर बमोजिम हुन्छ ।

१९ नं. ॥ ॥ रुपैयाँ लिनु दिनुभन्दा अघिको तमसुकी रुपैयाँ नै वा केही थपी वा न्हेडिक तिरी ल्याएको भए सोही बोली पारी लिखत गरी दिनु पर्छ ।

२० नं. ॥ ॥ न्हेडिक तिरेकोमा निस्सा अड्डामा देखाउनु पर्छ । न्हेडिक तिरिसकेको नभई तिर्नु पर्ने बाँकी भए सो रुपैयाँ तिरेको न्हेडिकको फट्टा वा निस्सा ल्याएपछि मात्र रजिष्ट्रेशन गर्ने अड्डाले लिखत गराई दिन हुन्छ ।

२१ नं. ॥ ॥ रजिष्ट्रेशन गरी दिंदा लिने दिने मानिसलाई चिन्ने जान्ने जहाँसुकैको भएपनि दुई जनामा नघटाई साक्षी राखी लिने दिने मानिस यी हुन यिनको नाउँ वतन लेखिएको ठीक छ भनी लेखी सहीछाप गराउनु पर्छ ।

२२ नं. ॥ ॥ अड्डाबाट लिखतमा सहीछाप गराउँदा लिनेदिने दुबै थरलाई सो लिखत स्पष्ट गरी पढी सुनाई यो लिखतबाट यस्तो हुन्छ भन्ने मतलब समेत सम्झाई मात्र ऐन बमोजिम सहीछाप गराउनु पर्छ ।

२३ नं. ॥ ॥ रजिष्ट्रेशन गरिदिनु पर्ने लिखतमा रुपैयाँ लिनु दिनु पर्नेमा अड्डैमा लिनुदिनु गरेको वा घरायसमा भएकोमा दिनेका हकको प्रमाण दाखिल गरेकोमा भए सो समेत खोली मेरै सामुन्नेमा यो यो कारबाही भएको हो भन्ने व्यहोरा रजिष्ट्रेशन हुने लिखतको शिरमा लेखी अड्डाको छाप र हाकिम तहरीर फाँटवालाको समेत सहीछाप गरी रजिष्ट्रेशनको लिखत रजिष्ट्रेशन गराई माग्नेलाई दी ऐनले दोहरी दिनु पर्नेमा लिखत गरी दिनेलाई दोहरी सौंपिदिई अड्डामा रहने चांहि लिखतको किनारामा दोहरी बुझी लिएँ भनी लेखी दोहरी पाउनेको सहीछाप समेत गराउनु पर्छ ।

२४ नं. ॥ ॥ केही कारण परी अड्डामा हाकिम नभएमा तहरीरले आफ्नो र आफू मुनिका फाँटवालाको र तहरीर नभएमा हाकिमले आफ्नो र तहरीरदेखि मुनिका फाँटवालाको सहीछाप गर्नु गराउनु पर्छ । सो गर्दा हाकिम वा तहरीर नभएको कारण समेत लेख्नु पर्छ ।

२५ नं. ॥ ॥ रजिष्ट्रेशन हुने लिखत घरायसमा वा अड्डामा लेख्दा समेत दोहरी दिनु पर्नेमा तीन प्रति र अरुमा दुई प्रति समेत एकै मिलानसँग लेखी सो सबै प्रतिमा कारणी र त्यसमा बसेका साक्षीको समेत रीतपूर्वक सहीछाप गर्नु गराउनु पर्छ घरायसमा भएका लिखतमा बस्ने साक्षीलाई अड्डामा ल्याउनु पर्दैन । सनाखत गर्ने साक्षीलाई भने अड्डैका रोहवरमा सबै प्रतिमा सहीछाप गराई नम्बर चढाई यस महलको रीत पुऱ्याई रजिष्ट्रेशन गरी एक प्रति अड्डामा राखी एक प्रति लिखत गराई लिनेलाई र दोहरी दिनु पर्नेमा एक प्रति लिखत गरी दिनेलाई समेत दिनु पर्छ । ✂यसै महलको ९ नं. बमोजिम नालेस परी फैसला बमोजिम रजिष्ट्रेशन गरिदिनु पर्ने भएमा नालिस परी सदर भै आएको लिखतको शिरमा सो व्यहोरा जनाई यसै महलको २३ नम्बर बमोजिम रजिष्ट्रेशन गरी माथि लेखिए बमोजिम सहीछाप गराई सो लिखतको नक्कल लेखी सक्कल बमोजिम नक्कल दुरुस्त छ सक्कल बुझीलिएँ भनी रजिष्ट्रेशन गर्न आउनेको र नक्कल दुरुस्त छ भनी रजिष्ट्रेशन ⏭... ... ... गरी दिनेको समेत सहीछाप गराई राख्नु पर्छ ।

२६ नं. ॥ ॥ रजिष्ट्रेशन गर्न आउँदा वा अघिपछि जोसुकैले पनि अरुलाई लेखिएको छ छैन भनी रजिष्ट्रेशन भएको लिखत हेर्न वा नक्कल लिनलाई आएमा हेर्न वा नक्कल दिनु पर्छ ।

२७ नं. ॥ ॥ रजिष्ट्रेशन भैरहेको लिखत बमोजिम बुझाउनु पर्ने नगदी, जिन्सी भिन्न भै धेरैजनाले भाग शान्ति तिर्नु पर्ने हुन आएकोमा सबैले एकैचोटी बुझाउन नल्याई कुनै कुनैले मात्र आफूले तिर्नु पर्ने जति बुझाउन ल्याए तिर्न आउनेको भागको जति बुझी लिई लिखतका पीठमा व्यहोरा जनाई दरपीठ गरी बुझाउन ल्याउनेलाई पनि बुझाएको निस्सा निमित्त यति मध्ये यसले बुझाउनु पर्ने यति बुझी लिएँ भन्ने भरपाई गराई लिई दिई आफूले तिर्नु पर्ने जति सबै बुझाइसकेपछि यसै महलको ३७ नम्बर बमोजिम रजिष्ट्रेशन गर्ने अड्डामा रहेका नक्कलमा दरपीठ गराउन आएमा वा अड्डैमा बुझाएमा समेत असूल जनाई राखी लिखत बमोजिम तिर्नु पर्ने जति सबै बुझाईसकेपछि लिखतको पीठमा अड्डाको छाप लगाई फिर्ता दिने लिने गर्नु पर्छ । बुझाउनु पर्ने जम्मै नबुझाई बुझी लिन्न दरपीठ गरी दिन्न धितो छोड्दिन भन्न पाउँदैन ।

२८ नं. ॥ ॥ कानून बमोजिमको लिखत रजिष्ट्रेशन गराई माग्न आएमा जुनसुकै इलाकाको रजिष्ट्रेशन गर्ने अड्डाबाट गरी दिनु पर्छ ।

२९ नं. ॥ ॥ आर्का इलाकाको अचल सम्पत्तिको लिखत रजिष्ट्रेशन भएकोमा रजिष्ट्रेशन गर्ने अड्डाले सो घर जग्गा भएका इलाकाको रजिष्ट्रेशन गर्ने अड्डामा एक प्रति नक्कल पठाइ दिनु पर्छ । सो अड्डाले पनि सिलसिलेवार नम्बर चढाई नक्कल किताबमा सामेल राख्नु पर्छ ।

३० नं. ॥ ॥ रजिष्ट्रेशन भएको लिखतबाट आफ्ना अड्डामा रहेको स्रेस्तामा दाखिल खारिज गर्नु पर्ने कुरा भए दाखिल खारिज गरिदिनु पर्छ । अन्यत्र रहेको स्रेस्तामा दाखिल खारिज गर्नु पर्ने भए लिखत गराइ लिने मानिसलाई फलाना ठाउँमा पैंतीस दिनभित्र दाखिल खारिज गराउन जानु भनी सुनाई दिई सो दाखिल खारिज गर्नु पर्ने ठाउँमा पनि फलानाको यो यति घर वा जग्गा फलानाका नाउँमा दाखिल खारिज

✂ सातौं संशोधनद्वारा संशोधित ।
⏭ सातौं संशोधनद्वारा झिकिएको ।

गरिदिनु भनी सात दिनभित्र लेखी पठाउनु पर्छ । सो दाखिल खारिज गरी दिनेले पनि कानून बमोजिम दाखिल खारिज गरी दिनु पर्छ ।

३१ नं. ॥ ॥ रजिष्ट्रेशन हुने गैह्र लिखतमा गर्ने गराई लिने दुबै थरको आफ्नो आफ्नो ❒बाबु, आमा र बाजे, बज्यैको नाम खोली लेखिएको हुनु पर्छ । संगठित संस्थाहरुको हकमा भने सो संस्थाको नामसम्म लेखे पुग्छ ।

३२ नं. ॥ ॥ शेषपछि हक पुग्ने गरी लिखत गरिदिने मानिस मरी लिखत गराई पाउनेको हक पुग्न आएपछि हक पुग्नेले हक पुगेका दाखिल खारिज गर्नु पर्ने जति कलम आफ्ना नाउँमा दाखिल खारिज गराई माग्नलाई सो लिखत गरिदिने मानिस मरेको मितिले पैंतीस दिनभित्र रजिष्ट्रेशन गर्ने अड्डामा दरखास्त दिनु पर्छ । सो बमोजिम दरखास्त परेकोमा रजिष्ट्रेशन गर्ने अड्डाले पनि आफूकहाँ रहेको लिखत हेरी सो लिखत गरिदिने मानिस मरेको हो होइन र लिखत गरी दी सकेपछि फेरि बदर गराई सकेको छ छैन भन्ने समेत जो बुझ्नु पर्ने बुझी लिखत गरिदिने मरी हक पुगिसकेको र लेखी दिएको लिखत बदर गराई सकेको नभै कायमै रहेको ठहरे यसै महलको ३० नम्बर बमोजिम दाखिल खारिज गर्नु गर्न लाउनु पर्छ ।

◆३२क. नं. ॥ ॥ यस महलको ३० नम्बर र ३२ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि कसैले सो नम्बरहरुमा लेखिएको म्याद गुजारी दाखिल खारिज गराउन दरखास्त दिएमा जतिसुकै अवधि व्यतित भएपनि दश रुपैयाँ दस्तुर लिई नाउँसारी दाखिल खारिज गरिदिनु पर्छ । यो ऐन लागू हुनुभन्दा अगावै त्यस्तो म्याद गुज्रिसकेकोमा पनि सो बमोजिम दस्तुर लिई नामसारी दाखिल खारिज गरिदिनु पर्छ ।

३३ नं. ॥ ॥ रजिष्ट्रेशन गराउनु पर्ने लिखत पहिले घरायसमा लेखी पछि रजिष्ट्रेशन गराएकोमा उजूर गर्ने हदम्याद कायम गर्दा रजिष्ट्रेशन भएकै मिति कायम गर्नु पर्छ ।

३४ नं. ॥ ॥ दोहोरो लिखत भएकोमा पहिले रजिष्ट्रेशन भएकै लिखत जेठो ठहर्छ ।

३५ नं. ॥ ॥ लेनदेन व्यवहारको महल बमोजिम अचल सम्पत्ति निखन्दा देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - -

निखन्न पाउने व्यक्तिले निखन्न चाहेको अचल सम्पत्ति लिने साहूका साथमा रजिष्ट्रेशन गर्ने अड्डामा गै लिनु दिनु गरी भरपाई गराई रजिष्ट्रेशन भएको लिखत साहूबाट दरपीठ गराई वा लिखत नभए त्यसको कारण खुलाई लिनु पर्छ । फैसला बमोजिम निखन्नु पर्दा दरखास्त साथ फैसलाको रीतपूर्वकको नक्कल पेश गर्नु पर्छ । यस्तो निखन्न पाउने कलममा अरुका नाउँमा दाखिल खारिज भैसकेको भएपनि निखन्न आउने हक पुगेको व्यक्तिका नाउँमा दाखिल खारिज गरी दिनु पर्छ र सो कुरा अड्डामा रहेको तमसुक र स्रेस्तामा समेत जनाई राख्नु पर्छ - - - - - - - - १

निखन्न पाउने व्यक्तिले निखन्न खोज्दा निखन्न दिनु पर्ने व्यक्तिले बाधा अड्काउ उपस्थित गरेमा निजलाई बुझाउनु पर्ने थैली निखन्न पाउने व्यक्तिले लिखत रजिष्ट्रेशन भएको वा साहू रहेको इलाकाको रजिष्ट्रेशन गर्ने अड्डामा धरौट राखी

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

◆ तेस्रो संशोधनद्वारा थप ।

निखनाई पाउन दरखास्त दिन हुन्छ र सो बमोजिम दरखास्त परेमा निजलाई तारिखमा राखी निखन्न दिनु पर्ने व्यक्तिलाई ⏭... ... ... बाटाका म्याद बाहेक सात दिनभित्र सक्कलै लिखत ली आउनु भनी म्याद पठाउनु पर्छ । सो म्यादमा हाजिर भै निखन्न दिन मञ्जुर गरे माथि १ दफा बमोजिम थैली साहूलाई बुझाई साहूको भरपाई गराई भरपाई र रजिष्ट्रेशन भएको लिखत समेत असामीलाई बुझाई दिनु पर्छ । हाजिर नभएमा म्याद नाघेपछि पर्चा खडा गरी सो निखनी पाउने अचल सम्पत्ति चलन गर्नु भनी निखन्न पाउनेलाई चलन पूर्जी दिई सो पूर्जी भएको व्यहोरा र धरौट रहेको रुपैयाँ तीन वर्षभित्र लिन नआए पछि पाउने छैनौ भन्ने समेत कुराको सूचना साहूलाई पठाई दिनु पर्छ । हाजिर भै निखन्न दिन मञ्जुर नगरे दरखास्तवालाले दावी लिएको सम्पत्ति रजिष्ट्रेशन भएको लिखत वा अड्डामा रहेका स्रेस्ताबाटै निखन्न दिनु पर्नेमा निखन्न दिन इन्कार गरेको देखिन आए रजिष्ट्रेशन गर्ने अड्डाबाटै निखनाई दिने फैसला गरी पुनरावेदन लाग्ने अवस्था नाघेपछि निखन्न पाउनेलाई चलन पूर्जी गरी दिनु पर्छ । निखन्न दिनु पर्नेले दिनु नपर्ने कारण देखाएकोमा प्रमाण बुझी इन्साफ दिनु पर्ने कुरा देखिन आए पैंतीस दिनभित्र नालिस गर्नु भनी सुनाई दिनु पर्छ । म्यादमा नालिस नपरे वा परेपनि निखन्न नपाउने ठहरी फैसला भएकोमा धरौट रहेको थैली कानून बमोजिम म्यादभित्र लिन आए दरखास्तवालालाई दिनु पर्छ । साहू वा असामीले धरौट रहेको थैली फिर्ता लिनु पर्नेमा म्यादभित्र नलिएमा सो थैली नेपाल सरकारको हुनेछ - - - - - - - - - २

माथि २ दफा बमोजिम निखन्न धरौट राखी दरखास्त गरेको व्यक्तिले पछि कुनै कारणले निखन्न नचाहेमा वा तारिख छोडेमा वा म्यादभित्र नालिस नगरेमा निजलाई थैलीको सयकडा अढाई रुपैयाँ जरिबाना गरी सो जरिबानाको रकम कट्टा गरी बाँकी थैली फिर्ता दिनु पर्छ - - - - - - -- - - - - - - - - - - - - - - - ३

निखन्न पाउने र निखन्न दिनेले मिलापत्र गर्न चाहेमा रजिष्ट्रेशन गर्ने अड्डैबाट मिलापत्र गराई दिनुहुन्छ । सो मिलापत्र वापत बक्सौंनी लिंदा थैलीको सयकडा एक रुपैयाँको दरले लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

३६ नं. ॥ ॥ म्यादभित्र रजिष्ट्रेशन गरी नदिएकोले नालिस परी रजिष्ट्रेशन हुने गरी फैसला भएकोमा दण्ड सजायको महलको ४४ नम्बर बमोजिम फैसला गर्ने अड्डाबाट रजिष्ट्रेशन गर्ने अड्डाका नाउँमा पूर्जी गराई लिनु पर्छ । सो पूर्जी पाएका मितिले पैंतीस दिनभित्र आफूले पाएको पूर्जी, फैसलाको नक्कल र रजिष्ट्रेशन गर्नु पर्ने लिखत समेत ली रजिष्ट्रेशन गर्ने अड्डामा दरखास्त दिन आफै जान वा वारिस पठाउन पर्छ । लेखिए बमोजिम दरखास्त दिन आएमा रजिष्ट्रेशन गरी दिने अड्डाबाट पनि म्यादभित्र दरखास्त दिन आएको रहेछ भने फैसला पूर्जी बमोजिम कानूनको रीत पुऱ्याई रजिष्ट्रेशन गरी दिई फैसलाको नक्कलको शिरमा फलाना मितिमा रजिष्ट्रेशन भयो भनी लेखी अड्डाको र हाकिमको समेत छाप लगाई फिर्ता दिनु पर्छ । लेखिएको म्यादभित्र दरखास्त नगरे म्याद नाघेपछि रजिष्ट्रेशन हुन सक्तैन ।

३७ नं. ॥ ॥ रजिष्ट्रेशन भएको लिखतको रुपैयाँ धनीलाई बुझाउँदा घरसारैमा बुझाई कागज फट्टा गरी लिन दिन पनि हुन्छ । अड्डैमा आई बुझाए पनि हुन्छ । घरसारैमा लिनु दिनु गरेकोमा बुझाउने कागजको पीठमा यस मितिमा यति रुपैयाँ बुझी लिएँ भन्ने व्यहोरा लेखी बुझी लिने धनीको ऐन बमोजिमको रीत पुऱ्याई

---

⏭ सातौं संशोधनद्वारा झिकिएको ।

सहीछाप गराई फट्टा लिई सो लिएको मितिले पन्ध्र दिनभित्र आफै हाजिर भई वा वारिस गरी वा लेखोटसाथ छाप पठाई अड्डामा रहेको कागज स्रेस्तामा जनाई माग्न आएमा वा अड्डैका रोहवरमा बुझी लिएमा समेत अड्डामा रहेको लिखतका पीठमा र पञ्जिकामा समेत सो व्यहोरा जनाई लेखी फट्टाका पीठमा समेत अड्डाको छाप लगाई फिर्ता दिनु पर्छ ।

३८ नं. ॥ ॥ रजिष्ट्रेशन भएको लिखत बमोजिम तिर्नु पर्ने नगद जिन्सी धनीले साक्षी राखी लेखी पठाएको इच्छापत्र लिई आउने इच्छापत्रवालालाई बुझाए पनि हुन्छ । लेखिए बमोजिम घरसारमा इच्छापत्रवालालाई बुझाई दरपीठ गराई फट्टा लिखत र इच्छापत्र लिई यसै महलको ३७ नम्बर बमोजिम म्यादभित्र अड्डामा रहेका नक्कल पञ्जिकामा जनाई माग्न वा अड्डैमा इच्छापत्रवालालाई बुझाउन आएमा दिई इच्छापत्रवालालाई बुझाएको व्यहोरा समेत खोली अड्डामा रहेका नक्कल पञ्जिकामा जनाई फिर्ता दिने गर्नु पर्छ ।

३९ नं. ॥ ॥ कसैले अड्डामा रहेको रजिष्ट्रेशन भएको कुनै लिखतको नक्कल लिन वा हेर्न आएमा दिनु पर्छ । सो बमोजिम नक्कल लिएकोमा फी थान दुई रुपैयाँ र हेरेकोमा फी थान एक रुपैयाँ दस्तुर लाग्छ ।

४० नं. ॥ ॥ कानूनले तोकेको रजिष्ट्रेशन दस्तुर देहायका अवस्थामा देहायका व्यक्तिबाट लिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - -

राजीनामा बन्धकी समेत लेनदेनको लिखत भएकोमा धनीबाट - - - - - - - - - - १

बण्डापत्र वा मानु छुट्टिएको वा मानु जोरिएको लिखतमा दामासाहीले सबै अंशियारबाट - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

अरु लिखत भएकोमा लिने पाउनेबाट - - - - - - - - - - - - - - - - - - - - १

४१ नं. ॥ ॥ रजिष्ट्रेशन भएको लिखतमा सो रजिष्ट्रेशन गरी लिने दिने साहूले नै वा उनीहरुका हकदारले थप ली दी गरे भएको लिखत रजिष्ट्रेशन गराउँदा अघि लिए दिएको दस्तुर लाग्दैन । थपि लेनदेन गरे जति अङ्कको मात्र कानून बमोजिमको दस्तुर लाग्छ ।

४२ नं. ॥ ॥ जग्गा घरको लेनदेनमा सो घर जग्गाको मोल अङ्क देखिए पनि रुपैयाँ लिनु दिनु गरी लिखत भएकोमा लिनु दिनु गरेको रुपैयाँको विगो कायम गरी रजिष्ट्रेशन दस्तुर लिनु पर्छ ।

४३ नं. ॥ ॥ लिखतको रजिष्ट्रेशन गराउनु पर्ने म्याद गुज्रेमा थामिन सक्तैन ।

४४ नं. ॥ ॥ यसै महलका ३७ नम्बरमा लेखिएको काम सोही नम्बरमा लेखिएको म्यादभित्र नगरी सो म्याद नाघेको एक वर्षसम्ममा गर्न आएको भए म्याद नघाई आए वापत सो आउनेलाई एकसय रुपैयाँमा पच्चीस पैसा र एक वर्षभन्दा बढी म्याद नघाई आएको भए एकसय रुपैयाँमा पचास पैसा जरिबाना गरी सो नम्बरमा लेखिए बमोजिम काम गरी दिनु पर्छ ।

# महल २२

## बाँकी नतिर्नेको

१ नं. ॥ ॥ दण्ड सजाय बाहेक सरकारी बाँकी तिर्नु पर्ने ठहरेकाले सो ठहरेको बाँकी तिर्न सकेन र माथवर धन जमानी दियो भने एक वर्षको भाखा दिनु पर्छ । सो बमोजिम जमानी दिन नसके कानून बमोजिम असूल गर्नु पर्छ ।

λ२ नं. ॥ ॥ आफ्नो जिम्माको सरकारी वा नेपाल सरकारको पूर्ण वा आँशिक स्वामित्व भएको संगठित संस्थाको वा कुनै बैंकको नगदी जिन्सी कानून बमोजिम बाहेक वा रीतपूर्वकको आदेश निकासा बेगर लिन, दिन, दिलाउन वा सो गर्ने प्रयत्न गर्न गराउन हुँदैन ।

३ नं. ॥ ॥ सरकारी नगदी जिन्सी रहेको तहवील जाँच्दा जसको जिम्माको तहबील हो सो व्यक्ति रोहवरमा भए उसलाई र रोहवरमा भएका तहरीर तहवीलदार भण्डारे समेत राखी जाँच्नु पर्छ । सो बमोजिम जाँच्दा अकर्ण र श्रेस्ता बमोजिमको तहबील मौज्दात नभए मसौट गरेको ठहर्छ । सो मासेको विगो मास्नेबाट उपर गरी लिई निजलाई विगो बमोजिम जरिबाना वा तीन वर्षसम्म कैद वा दुबै हुन्छ ।

☯३क.नं. ॥ ॥ नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व भएको संगठित संस्थाको वा कुनै बैंकको नगदी जिन्सी मस्यौट गरे वा गर्ने प्रयत्न गरेमा विगो भराउन पर्नेमा विगो भराई विगो बमोजिम जरिबाना वा तीन वर्षसम्म कैद वा दुवै सजाय र विगो भराउन नपर्नेमा पाँच हजार रुपैयाँसम्म जरिबाना वा तीन वर्षसम्म कैद वा दुबै सजाय हुनेछ ।

☯३ख.नं. ॥ ॥ नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व भएको संगठित संस्थाको वा कुनै बैंकको विगो मसौट गरेमा विगो मसौट गर्नेको अंश हकको सम्पत्तिबाट भराई दिइनेछ । उपर हुन नसकेको विगो बापत कैद गरी पाउँ भनी सम्बन्धित संस्था वा बैंकको निवेदन परेमा प्रति महिना पाँच सय रुपैयाँका दरले कट्टी हुने गरी जतिसुकै विगो उपर नभएको भएपनि बढीमा चार वर्षसम्म कैद गरिदिनु पर्छ ।

४ नं. ॥ ॥ सरकारी अड्डाको तहवीलदार भण्डारेले तहवील मासेकोमा सो तहवीलदार भण्डारे हाकिमले पत्याएको मानिस भनी भर्ना भएको रहेछ भने मास्नेबाट उपर नभएको जति बाँकी विगो हाकिमले बुझाउनु पर्छ ।

५ नं. ॥ ॥ तहबील मासिएका दिनदेखिको दशौंदका हिसाबले सूद समेत लिनु पर्छ ।

६. नं. ॥ ॥ सरकारी सूद लाग्ने बाँकीमा जायजात रोक्का भएकोमा जायजात रोक्का भएको मितिदेखि र जायजात रोक्का नहुँदै थुनिएकोमा थुनिएको मितिदेखि सूद लाग्दैन । सो रोक्का भएको जायजात लिलाम बिक्री भै विगो उपर नभएकोमा जायजात रोक्का गर्दा जायजात दबाए छुपाएको पछि ठहर्न आयो भने नपुगेको बाँकी मध्ये दबाएको ठहरी उपर भए जतिको रोक्का भएकै मितिदेखिको सूद

---

λ नवौं संशोधनद्वारा संशोधित ।

☯ नवौं संशोधनद्वारा थप ।

पनि लिइनेछ । सो जायजात रोक्का भैरहेकोमा लिलाम बिक्री गरी असूल गर्न हुने अवस्था पुगेपछि पैंतीस दिनभित्र लिलाम बिक्री गर्नु पर्छ ।

७ नं. ॥ ॥ कसैले चल वा अचल कुनै किसिमको सम्पत्ति नेपाल सरकारमा बुझाउनु पर्ने भनी कुनै अड्डामा बुझाउन ल्याएमा सो अड्डाले बुझ्नु पर्ने रहेछ भने सबै व्यहोरा र कारण खुलाई बुझिलिनु पर्छ । अडबड परेकोमा भने सोही व्यहोरा जनाई धरौटीमा आम्दानी बाँधी कानून बमोजिम कारबाही गरी निर्णय गर्नु गराउनु पर्छ ।

८ नं. ॥ ॥ काम गर्ने बाँकीवालाको अपुताली खाने हकदार पक्राउ भएकोमा उपर गर्नु पर्ने ठहरेको विगोमा सो हकदारको जायजात गरी उपर गर्नु पर्छ । जायजातबाट नपुगेको बाँकीमा पक्राउ गर्न हुँदैन । सो जायजात हुँदा दवाई छुपाई राखेको रहेछ र बुझ्दा ठहऱ्यो भने सो दबाउने हकदारलाई दवाएको विगो बमोजिम जरिबाना गरी जरिबाना बापत कैद गर्नु पर्छ ।

९ नं. ॥ ॥ [λ]यसै महलको २ नं., ३क. नं. र ३ख. नं. मा लेखिएदेखि बाहेक अरुको काम गर्ने कामदारले आफ्ना जिम्माको नगदी जिन्सी तहबील मासेमा धनीको उजूर परी ठहऱ्यो भने विगोको सयकडा पच्चीस जरिबाना गरी विगो भराउनु पर्नेमा विगो समेत भराई दिनु पर्छ । सो बाहेक अरु दिनु पर्ने दिएन वा पक्राउ गर्न नपाउनेमा पक्राउ गऱ्यो लियो भन्ने समेत इत्यादि व्यहोराको काम गर्ने गराउनेको नालिस परेमा साहु असामी सरह हुन्छ ।

[λ]१० नं. ॥ ॥ यसै महलको ९ नम्बर बमोजिम भराउनु पर्ने विगो नपुग भै कैद गराउनु पर्दा एक दिनको पच्चीस रुपैयाँको दरले बढीमा एक वर्ष कैद गराउन पाउनेछ ।

११ नं. ॥ ॥ यसै महलको ९ नम्बर बमोजिमको कसूरमा सो कसूर भए गरेका मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

१२ नं. ॥ ॥ सरकारी तहवील मासेमा कानून बमोजिम भएको सजाय र सरकारी विगो वापत समेतमा कैद गर्नु पर्दा दश वर्षभन्दा बढी कैद हुन सक्ने छैन ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

# भाग ४

## महल १

### कीर्ते कागजको

१ नं. ॥ ॥ हस्ताक्षर वा औंलाको ल्याप्चे सही निशाना र छाप इत्यादि झुट्टा बनाई गरी वा ऐन बमोजिम रीतपूर्वकको सहीछाप भइरहेको अर्कै विषयको सच्चा लिखतमा लेखिएको व्यहोरा कुनै तरकीवसँग उडाई अर्कै मतलब निस्कने व्यहोरा पारी मिलाई लेख्ने र एउटा कामलाई भनी सहीछाप गरेको लिफा कागज वा छाप लिए दिएकोमा सो काममा नलगाई अर्कै व्यहोराको लिखतमा लगाई वा अर्कै व्यहोराको लिखत लेख्ने इत्यादि काम गरेकोबाट अर्काको जीउ धन वा हक जाने नोक्सान हुने वा सो केही नभएपनि झुट्टा काम गर्ने मानिस आफैलाई वा अरु कसैलाई फाइदा प्रमाण हुने गरी काम गरेको रहेछ भने त्यस्ता झुट्टा कागजबाट काम गरी भइसकेको हवस् वा नहवस् कीर्ते गरेको ठहर्छ । त्यस्तो कीर्ते गर्ने गराउनेलाई र जानी बुझी कीर्ते कागजमा बस्ने साक्षी मतियार समेतलाई बात लाग्छ ।

२ नं. ॥ ॥ समूचा लिखत भने कीर्ते नगरेको कारणीका जानकारी मञ्जुरीले भैरहेको सच्चा लिखतमा अङ्क मिति वा केही व्यहोरा घटी बढी पारी सच्याई बनाएकोसम्म रहेछ भने जे जति कुरा घटी बढी पारी बनाएकोछ उति कुराको कीर्ते गर्ने ठहरी बात लाग्छ ।

[λ]३ नं. ॥ ॥ लेखिए बाहेक अर्काको हक मेट्ने, हदम्याद तारिख जाने वा कुनै तरहसँग नोक्सान पार्ने इत्यादि जुनसुकै मतलबले होस् नगरे नभएको झुट्टा कुरा गरे भएको हो भनी वा मिति अङ्क वा व्यहोरा फरक पारी सहीछाप गरी गराई कागज बनाए वा बनाउन लगाएमा समेत जालसाजी गरेको ठहर्छ ।

४ नं. ॥ ॥ नगरे नभएको काम कुरा मुखको परिपञ्च मिलाई प्रतीत पर्ने हिसाबसँग भनी काम गरी सक्ने पनि मुखका परिपञ्चले कीर्ते गर्ने ठहर्छ ।

५ नं. ॥ ॥ ज्यान लिनाको मतलबले कीर्ते गरी ज्यान गैसकेको रहेछ भने कीर्ते गर्ने गर्न लाउनेलाई सर्वस्व सहित जन्मकैद र अरु मतियारलाई दश वर्ष कैद हुन्छ । ज्यान मरिसकेको रहेनछ भने कीर्ते गर्ने गर्न लगाउनेलाई दश वर्ष र अरु मतियारलाई पाँच वर्ष कैद हुन्छ ।

६ नं. ॥ ॥ सर्वस्व सहित जन्म कैद वा जन्म कैद हुने कुरा कीर्ते गरे दश वर्ष र सर्वस्व हुने कुरा कीर्ते गरेको रहेछ भने तीन वर्ष कैद गर्नु पर्छ । काम भैसकेको रहेनछ भने लेखिएका सजायको आधा सजाय गर्नु पर्छ ।

७ नं. ॥ ॥ सम्पत्तिका सम्बन्धमा कीर्ते गरी लिई खाइसकेको भए विगो भराई विगो बमोजिम जरिबाना हुन्छ । काम भैसकेको रहेनछ भने विगोको आधी जरिबाना हुन्छ ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

८ नं. ॥ ॥ ▶लालमोहर लागेको वा प्रमाणीकरण भएको कागज कीर्ते गरेमा सो गर्नेबाट विगो भराउनु पर्ने भए विगो भराई दशवर्ष कैद गर्नु पर्छ ।

९ नं. ॥ ॥ लिखत जम्मै कीर्ते नगरी अङ्क वा व्यहोरासम्म घटी बढी पारी कीर्ते गरेमा जति कुरा घटी बढी गरेकोछ उति कुरामा मात्र सजाय गर्नु पर्छ । मितिसम्म अघि पछि पारेको रहेछ भने सो गर्दा विगो खुलेकोमा जे जति बेहक हुने वा नोक्सान हुने गरी अघि पछि पारेको हो सोही विगोको सयकडा पच्चीसले जरिबाना गर्नु पर्छ । विगो नखुलेको मुद्दामा पचास रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१० नं. ॥ ॥ जालसाजी कागज गर्ने गराउनेलाई विगो खोलिएको रहेछ भने त्यसै विगोको सयकडा पच्चीस रुपैयाँ जरिबाना हुन्छ । विगो खोलिएको रहेनछ भने दुई सय रुपैयाँसम्म जरिबाना हुन्छ ।

११ नं. ॥ ॥ ज्यान लिनाका मतलबले बाहेक अरु कुरामा कीर्ते गर्ने गर्न लगाउनेलाई कीर्ते गर्ने ठहरेका मानिसलाई हुने बमोजिम र अरु मतियारलाई त्यसैको आधी सजाय गर्नु पर्छ ।

१२ नं. ॥ ॥ सरकारी अड्डाको छाप वा सरकारी काममा सरकारी कर्मचारीको छाप दस्तखत वा सो छाप दस्तखत भएको सरकारी कागज कीर्ते गर्नेलाई यसै महलको अरु नम्बरले हुने सजायमा एक वर्ष र उसै अड्डाको कर्मचारीले कीर्ते गरेमा दुई वर्ष थप कैद हुन्छ ।

१३ नं. ॥ ॥ एउटाका नाउँमा अर्काले सहीछाप गर्नेलाई नाउँ लेखिनेको मञ्जुरी भएपनि मुद्दा हेरी बीस रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१४ नं. ॥ ॥ कीर्ते कागज हो भनी जानी जानी साक्षी हुनेलाई काम भैसकेको भए मुख्य कीर्ते गर्ने कारणीलाई सर्वस्व सहित जन्म कैदको सजाय हुने रहेछ भने पन्ध्र दिनदेखि दुई वर्षसम्म कैद र जरिबाना हुनेमा रहेछ भने एकसय रुपैयाँसम्म जरिबाना हुन्छ । काम भै नसकेकोमा लेखिएका सजायको आधा सजाय गर्नु पर्छ ।

१५ नं. ॥ ॥ मुखका परिपञ्चले कीर्ते काम कुरा गरेकोमा सो गर्नेलाई विगो खुलेकोमा विगोको आधी र विगो नखुलेकोमा एकसय रुपैयाँसम्म जरिबाना हुन्छ । काम भै नसकेकोमा सो सजायको आधी सजाय हुन्छ ।

१६ नं. ॥ ॥ नेपाल सरकारको स्वीकृतिले दिने पाउने व्यक्तिले दिएकोमा वाहेक आफ्ना मनासिबले कसैले कसैलाई कुनै दर्जा दिन वा म फलानो दर्जाको हुँ भन्न लेख्न हुँदैन । अधिकार भएकाले दिए पाएको दर्जा बहाल टुटेपछि पनि लेख्न भन्न हुन्छ सो बाहेक अरुले नपाएको दर्जा पाएँ भन्ने वा लेखापढी गर्ने र देहायमा लेखिए बमोजिमको काम गर्नेलाई समेत देहायमा लेखिए बमोजिम सजाय हुन्छ - - - - - -

नपाएको दर्जाको धाकले कामकाज समेत गर्नेलाई केही लिए खाएको भए सो विगो फिर्ता गराई चार वर्षसम्म कैद वा पाँच हजार रुपैयाँसम्म जरिबाना वा दुबै हुन्छ । अरु केही कसूर समेत गरेको भए जुन कसूर गरेकोछ सो कसूरमा ऐन बमोजिम हुने सजाय छुट्न सक्तैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

---

▶ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

यस्ता मानिस हुन् भन्ने थाहा नपाई त्यस्ता व्यक्तिसँग लागी काम गरेकोमा बाहेक जानी जानी सो व्यक्तिसँग लागी काम गर्ने व्यक्ति मतियार ठहर्छ । माथि १ दफामा लेखिएका सजायको आधा सजाय हुन्छ - - - - - - - - - - - - - - - - - - - २

१७ नं. ॥ ॥ सर्वस्व सहित जन्म कैद हुनेमा बाहेक यस महलका अरु कुरामा कैद गर्नु पर्दा बाह्र वर्षदेखि बढ्ता कैद गर्नु हुँदैन ।

१८ नं. ॥ ॥ सरकारी छाप लागेका कागजहरु र सरकारी अड्डामा रहेको कागजपत्रहरु बाहेक अरु कीर्ते वा जालसाजी गऱ्यो भन्ने वा मुखका परिपञ्चले कीर्ते कुरा गऱ्यो वा नपाएको दर्जा पाए भनी भन्यो वा सो भनी परपजनी समेत गऱ्यो भन्ने कुरामा [*]सो काम भए गरेको थाहा पाएको मितिले छ महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

[*] अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

# महल २

## लुटपीटको

१ नं. ॥     ॥ वारदातका रुपबाट चोरीको महल बमोजिमको अपराध ठहर्ने बाहेक अरु यसै महलका नम्बर नम्बरमा लेखिएका रुपबाट उठान भई सोही जरियाबाट झगडा कुटपीटसम्म भई वा सो केही नभई अर्काका हकको वा जिम्माको नगदी जिन्सी धनमाल दोपाया चौपाया जग्गाको बाली समेत हात हाली जबरजस्तीसँग खोसी लैजान वा कुनै किसिमसँग नोक्सान गराई दिन समेत हुँदैन, गरे लुटपीट ठहर्छ ।

२ नं. ॥     ॥ आफ्नो पनि नोक्सान पऱ्यो वा पर्ने भयो भनी वा आफ्नो समेत हक लाग्ने हो भनी जग्गा जमीन साँध सिमाना साहू असामी अंशबण्डा दान बकस बिजाई विद्युत रकम कलम सन्धिसर्पन कुला पानी बाली चराई नासो धरौट समेत इत्यादि र अरु कुनै कुरामा धरपकड वा भनाभन झगडा लछार पछारसम्म भई सोही ठाउँ उसै बखतमा साथमा भए रहेको धनमाल नगदी जिन्सी खोसी लिए लगे नोक्सान गरेको समेत लुटपीट ठहर्छ ।

३ नं. ॥     ॥ भोग दृष्टि वा नासो धरौटमा समेत लिखत बमोजिम लिन पाउने भई लिएमा बाहेक अरु आफ्नै हक पुग्ने धनमाल भएपनि अर्काका जिम्मा रहेकोमा सो जिम्मा लिने मानिसको मञ्जुरी लिई वा नालिस दिई आफ्नो हक कायम गराएपछि मात्र लैजानु पर्छ । सो बमोजिम नगरी त्यसै लगेको भए उसले लिनु पर्ने विगो भन्दा बढीको धनमाल लगेको भए सयकडा पच्चीस र लिनु पर्ने जति वा सो भन्दा घटी लगेको भए सयकडा पन्ध्र रुपैयाँ जरिबाना गरी उसले लिएको धनमाल फिर्ता गराई दिनु पर्छ ।

४ नं. ॥     ॥ अर्काले लाएको पाकेको बाली नकाट्दै लुटपीट गर्ने गराउनेलाई सो लुटपीट गरे गराएको विगोको आफ्नो हक पुग्ने लुटपीट गरे गराएकोमा सयकडा दश र आफ्नो हक नपुग्ने लुटपीट गरे गराएकोमा सयकडा बीस जरिबाना गर्नु पर्छ । नपाकेको काँचो बाली लुटपीट गरे गराएकोमा सो लुटपीट गरे गराएको विगोको आफ्नो हक पुग्ने लुटपीट गरे गराएको भए सयकडा साढे बाह्र र आफ्नो हक नपुग्ने लुटपीट गरे गराएको भए सयकडा पच्चीस जरिबाना गर्नु पर्छ । आफ्नो हक पुग्ने लुटपीट गरे गराएकोमा आफ्नो नोक्सान भएको विगो पाउँदैन । आफ्नो हक नपुग्ने लुटपीट गरे गराएको भए नोक्सानी विगो सो लुटपीट गर्ने गराउनेबाट हक पुग्नेलाई भराई दिनु पर्छ । लुटपीट गर्न सरीक भै जाने मुख्य बाहेक अरु मद्दतगारलाई जनही मुख्यलाई हुने सजायको मुख्यको हक पुग्ने लुटपीट गरेकोमा चौथाई र मुख्यको हक नपुग्ने लुटपीट गरेकोमा आधा सजाय हुन्छ ।

५ नं. ॥     ॥ अड्डाबाट रोक्का भएको बाली वा चल अचल गैह्र, फुकुवा नभई कसैले लिन खान हुँदैन । कसैले लुटपीट गरी लिए खाएछ भने त्यस कुराको उजूर परेमा रोक्का गर्ने अड्डाले जसले लिए खाएकोछ त्यसलाई तुरुन्त पत्री रोक्का भए गरेको बाली चल अचल जो जति हो त्यसबाट उपर गरी अड्डा वा माथवर मानिसको जिम्मा राखी दिनु पर्छ । दिएन भने सो नदिएसम्म अड्डामा थुन्नु पर्छ । पन्ध्र दिनसम्म थुन्दा पनि फिर्ता बुझाएन भने लुटपीट गरेको चल अचलै साबूद फेला परे सोही र नपरे त्यसको विगो त्यसका जायजात समेतबाट उपर गरी राख्नु पर्छ । पछि मुद्दा फैसला गर्दा हक नपुग्नेले लिए खाएको ठहरे सो विगोको सयकडा पच्चीस

रुपैयाँका दरले र हक पुग्नेले लिए खाएको ठहरे पनि सयकडा साढे बाह्र रुपैयाँका दरले जरिबाना गर्नु पर्छ । विगो हक पुग्नेलाई दिनु पर्छ ।

६ नं. ॥ ॥ यसै महलको ३।४।५ नम्बरमा लेखिएदेखि बाहेक अरु तरहसँग लुटपीट गरेमा लिने खाने नोक्सान पारी दिनेबाट विगो भराई निजलाई सोही विगोको सयकडा पच्चीस जरिबाना गर्नु पर्छ । लेखिएका कुरामा मद्दत गर्ने मद्दतगारलाई जनही मुख्यलाई हुने सजायको आधी सजाय गर्नु पर्छ ।

७ नं. ॥ ॥ लुटपीट भएको तीन महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ३

## ठगीको

[λ]१ नं. ॥ ॥ कसैले आफ्नो हक नपुग्ने अर्काको हकको चल-अचल धनमाल हक पुग्नेलाई वा जसका जिम्मामा रहेकोछ उसलाई ललाई-फकाई वा जाल परिपञ्च गरी वा आफ्नो हक नभएको सम्पत्तिमा आफ्नो हक पुग्ने कीर्ते कागज बनाई, दिई वा पेश गरी वा आफूसँग नभएको कुरा आफूसँग छ भनी झुक्याई वा झूटो कुरालाई सद्दे हो भनी झुक्याई वा अरु जुनसुकै व्यहोरासँग धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल-अचल धनमाल लिए दिए दिलाएमा वा अर्काको माल मेरो हो भनी वा मेरो भएकोछ भनी लिखत गरी वा नगरी सोही माल लिए दिए बिक्री व्यवहार गरेमा वा सट्टा पट्टा गरी लिएमा ठगी गरेको ठहर्छ ।

२ नं. ॥ ॥ कसैले आफ्नो नाउँ ढाँटी सो नाउँ मेरो होइन, अर्कैको हो भनी वा सो मानिस म होइन अर्कै हो भनी र अर्को मानिसको नाउँलाई मेरो हो सो मानिस मै हुँ भनी भन्नु वा त्यस्तो कुरा अर्काबाट जानी बुझी भनाउनु भनी दिनु इत्यादि जुनसुकै कुरो गरी होस् कसूर सजायबाट बच्नाका लागि वा बेइमानीको नियतसँग अरु कसैलाई धोका, गफलत वा झुक्यानमा पारी अर्काको नोक्सान वा आफ्नो फाइदा हुने काम गरेमा ठगी गरेको ठहर्छ ।

३ नं. ॥ ॥ ठगिनेले ठगी गर्नेलाई पत्री भाखा तमसुक गराई राखेको रहेछ भने साहू असामी सरह हुन्छ ।

[λ]४ नं. ॥ ॥ ठगी गर्नेलाई ठगी लिएको विगो कायम भएमा हक पुग्नेलाई विगो भराई विगो बमोजिम र विगो कायम नभएमा पाँच हजार रुपैयाँसम्म जरिबाना र पाँच वर्षसम्म कैद हुनेछ ।

५ नं. ॥ ॥ ठगी गर्नेसँग मिली ठगी गरेको धनमाल बाँडी लिने वा ठगी गर्नलाई मद्दत दिने वा ठगी गर्नको निमित्त गरेको कुनै लिखतमा जानी जानी साक्षी हुने व्यक्ति मतियार ठहर्छ । त्यस्तालाई ठगी गर्ने सरह सजाय हुन्छ ।

६ नं. ॥ ॥ ठगी ल्याएको हो भनी जानी जानी ठगी ल्याएको धनमाल लिने वा किन्नेबाट सो लिए किनेको धनमालको विगो हक पुग्नेलाई भराई त्यस्तो लिने किन्नेलाई दुई सय पचास रुपैयाँसम्म जरिबाना वा तीन महिनासम्म कैद वा दुबै सजाय हुनेछ ।

७ नं. ॥ ॥ ठगी गरेको धनमाल दिए लिएकोमा पाउने वा लिनेको सदर हुँदैन । जोसित छ उसैबाट माल भए माल, नभए विगो सो धनमालमा हक पुग्नेलाई भराई दिनु पर्छ । ठगी गरी ल्याएको हो भनी जानी जानी लिनेको थैली भराई दिनु पर्दैन । नजानी लिएको भए थैली कपाली सरह हुन्छ ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

[λ]८ नं. ॥ ॥ यस महलमा लेखिएको कुरामा नेपाल सरकार वादी हुनेमा नेपाल सरकारलाई सो कुरा थाहा भएको मितिले एक वर्षभित्र र अरु अवस्थामा सो कुरा गरे भएको मितिले दुई वर्षभित्र नालिस नदिए लाग्न सक्दैन ।

---

λ नवौं संशोधनद्वारा संशोधित ।

## महल ४

### चोरीको

१ नं. ॥ ॥ आफ्नो हक नपुग्ने अचल भै रहेकोलाई चलको हिसाब गराई वा चल धनमाल समेत हक पुग्ने धनीलाई थाहा नदिई वा उसको मञ्जुरी नली धनीको हक मेटाई आफूले लिना खानाका लागि जुनसुकै कुरो गरी बेइमानीका नियतले कसैले लग्यो भने चोरी गरेको ठहर्छ ।

२ नं. ॥ ॥ सगोल परिवारमा नाबालकलाई थाहा दिएको वा नाबालकको मञ्जुरी लिएकोमा यसै महलको १ नम्बरको प्रयोजनको निमित्त धनीलाई थाहा दिएको वा धनीको मञ्जुरी लिएको ठहर्दैन । उमेर पुगेका अरु जानकारलाई थाहा दिएको वा त्यस्तो जानकारको मञ्जुरी लिएकोमा चोरी नभै लेनदेन व्यवहारको महल बमोजिम हुन्छ ।

३ नं. ॥ ॥ खुला ढोकाबाट बाहेक सेन वा सुरुङ्ग खनी वा भित्ता झ्याल ढोकाहरु फोरी वा खोली वा छाना कौशी झ्याल परखाल इत्यादि गैÅ अबाटोबाट कुनै तरहले भित्र पसी चोरी गरेको वा भित्र पस्दा बाटैबाट पसेको भएपनि निस्कदा सो लेखिएका किसिमबाट बाहिर निस्केको भए नकबजनी गरेको ठहर्छ ।

४ नं. ॥ ॥ चोरी गर्दा कुटपीट हातपात गरी वा बाँधी थिची वा उत्तिखेरै ज्यान लिने वा जीउ जखम अङ्ग भङ्ग गर्ने डर त्रास गराई वा भित्र बसेको मानिस निस्कन नहुने गरी ढोका बन्द गरी चोरी गरेमा वा चोरी गरेको थाहा पाई मौकैमा वा दपेट्दै गई माल लिन वा चोर पक्रन खोज्दा चोरले माथि लेखिए बमोजिम जोरजुलुम गरेमा वा सो बमोजिम केही नगरे पनि नाबालकको जीउको धनमाल खोसी चोरी गरेकोमा जबरजस्ती चोरी गरेको ठहर्छ ।

५ नं. ॥ ॥ बाटो घाटो वा जङ्गलमा ढुकी जबरजस्ती चोरी गरेको रहजनी ठहर्छ ।

६ नं. ॥ ॥ चारजना भन्दा बढ्ताको जमात भई जबरजस्ती चोरी वा रहजनीमा लेखिएका रीतसँग वा हातहतियार लिई उठाई छाडी वा हूलहुज्जत गरी चोरी गरेको डाँका गरेको ठहर्छ ।

७ नं. ॥ ॥ कसैले कुनै प्रकारको चोरी भएको कुरा थाहा पाएमा सो थाहा पाएको सात दिनभित्र नजिकको प्रहरी ठाना चौकीमा गै यो यति यस्तो धनमाल यति मोल विगोको चोरी भयो भनी चोरिएको माल घटीबढी नपारी दरखास्त दिई त्यसको निस्सा लिनु पर्छ । त्यस्तो दरखास्त पर्न आएमा प्रहरी कार्यालयले त्यसको एक प्रति आफ्नो माथिल्लो कार्यालयमा पठाई आफूले पनि कानूनी कारबाही र खोजतलास गर्नु पर्छ ।

८ नं. ॥ ॥ कसैले कुनै माल बेच्न राख्न ल्याएकोमा सो माल चोरीको हो भन्ने शङ्का पर्ने मनासिब माफिकको कारण रहेछ भने सो माल र सो बेच्न राख्न ल्याउने मानिसलाई नजिकको प्रहरी कार्यालयमा बुझाई दिनु पर्छ ।

९ नं. ॥ ॥ प्रहरीमा सूचना नदिदै जबरजस्ती चोरी, रहजनी वा डाँका गर्ने वा अघि चोरीमा सजाय पाएको चोर बाहेक अरु चोरलाई छाडेमा धनीलाई बात

लाग्दैन । जुनसुकै अवस्थामा पनि धनीले आफ्नो लिनु पर्ने विगो चोरलाई माफ दिन्छ भने माफीको कागज लेखाई सजायको हकमा ऐन बमोजिम हुन्छ । चोरलाई पक्री आफ्नो विगोमा लिखत गराएको रहेछ भने कपाली सरह हुन्छ ।

✂१० नं. ॥ ॥ चोरी मुद्दामा देहाय बमोजम गरी फैसला गर्नु पर्छ - - -

डाँका बाहेक अरु प्रकारका चोरी मुद्दामा कुनै अभियुक्तले म्याद गुजारी फरार रहेकोमा वा हाजिर पक्राउ भएका अभियुक्तले आफू मुख सावित भई साक्षी वा मतियार भनी पोलेको अरु व्यक्तिले म्याद गुजारी फरार रहेकोमा ती फरारी हाजिर वा पक्राउ भएका बखत कारबाही फैसला गर्ने गरी निजहरुका हकमा मुलतबी राखी सो मुद्दामा अरु प्रतिवादीका हकमा म्यादभित्र ठहरे बमोजिम फैसला गर्नु पर्छ । मुद्दाको सबै प्रतिवादी एकैपटक हाजिर वा पक्राउ नभै पटक पटक बयान भई सबैका हकमा एकैचोटी मुद्दा फैसला गर्न अङ्ग नपुग्ने भएमा जसको हकमा अङ्ग पुग्छ त्यस्को हकमा म्यादभित्र फैसला गर्ने गर्नु पर्छ - - - - - - - - - - - - - १

मुलतबी रहेकाका हकमा अभियुक्त पक्राउ नपरे वा हाजिर भएन भने पनि ✱एक वर्ष पुगेपछि मुद्दा खडा गरी बुझिएसम्मको प्रमाणबाट ठहरे बमोजिम फैसला गरिदिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

सबै प्रकारको चोरी मुद्दामा विगो जसले जति जति खाएको ठहर्छ उसबाट उति उति असूल गरी लिनु पर्छ । विगो भराउँदा चोरी भएको माल पत्ता लागेमा सो माल नै भराई दिनु पर्छ दाखिल भएको वा उपर भएको विगोबाट भराई नपुगेकोमा धनीले सो विगो खाने अपराधीको जायजात देखाई दरखास्त दिएमा सो विगो सोही जायजातबाट भराई दिनु पर्छ र सरकारी चोरीको विगो बाहेक अरुमा जायजातबाट उपर नभएको विगोमा कैद गराई पाउँ भनी दण्ड सजायको महलको ४२ नम्बर बमोजिम धनीले दरखास्त λदिएमा एक दिनको पच्चीस रुपैयाँको दरले बढीमा दुई वर्षसम्म कैद गरी दिनु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - ३

११ नं. ॥ ॥ जुनसुकै प्रकारको चोरीमा पक्राउ भएकोमा एकै पटक पक्रिएको भएपनि जति पटक जति ठाउँमा चोरी गरेको ठहर्छ उति पटकको सजाय हुन्छ । डाँका र अरु प्रकारको चोरी एकै जनाले गरेमा डाँका र अरु प्रकारको चोरीको बेग्ला बेग्लै पटक गरी सजाय गर्नु पर्छ । सो गर्दा विदेशमा सजाय पाएको पटक भने खापी सजाय गर्न हुँदैन ।

१२ नं. ॥ ॥ डाँका, रहजनी, जबरजस्ती चोरी र नकबजनी बाहेक अरु साधारण चोरीमा कसूरदारलाई जनही सो चोरीको जम्मा विगो बमोजिम जरिबाना र पहिला पटककोलाई एक महिना, दोस्रो पटककोलाई तीन महिना, तेस्रो पटककोलाई छ महिना, चौथो पटककोलाई एक वर्ष, पाँचौ पटककोलाई दुई वर्ष, छैठौं पटककोलाई चार वर्ष र सोभन्दा बढी जतिसुकै पटक भएपनि छ वर्ष कैद समेत गर्नु पर्छ ।

१३ नं. ॥ ॥ यसै महलको १२ नम्बर बमोजिम सजाय हुने अवस्थामा चोरीको विगो पचास रुपैयाँभन्दा कम रहेछ भने पहिलो पटककोलाई सो नम्बरमा

✂ सातौं संशोधनद्वारा संशोधित ।

✱ अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

लेखिएको जरिबानाको र दोस्रो पटकदेखिकोलाई जरिबाना कैद दुबैको आधा सजाय गर्नु पर्छ । पटक कायम गर्दा जतिसुकै पटकमा साबित भएपनि अड्डाबाट कसूरदार ठहराई फैसला भएको प्रत्येक पटकलाई एक पटकको हिसाब गरी कायम गर्नु पर्छ ।

१४ नं. ॥ ॥ देहायका प्रकारको चोरी गर्नेलाई देहाय बमोजिम सजाय गर्नु पर्छ - -- - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

नकबजनी गर्नेलाई यसै महलको १२ नम्बर बमोजिम हुने सजायको डेढो बढाई सजाय गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

जबरजस्ती चोरी गर्नेलाई यसै महलको १२ नम्बर बमोजिम हुने सजायको डेढो बढाई सजाय गरी जरिबाना वापत समेत कैद गर्नु पर्छ र सो बमोजिम गर्दा चार महिनादेखि घटी कैद हुने भएमा चार महिना कैद गर्नु पर्छ- - - - - - - - - - - - २

रहजनी गर्नेलाई यसै महलको १२ नम्बर बमोजिम हुने सजायको दोब्बर बढाई सजाय गरी जरिबाना वापत समेत कैद गर्नु पर्छ र सो बमोजिम गर्दा छ महिनादेखि घटी कैद हुने भएमा छ महिना कैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - ३

डाँका गर्नेलाई विगोको डेढो बढाई जरिबाना गरी पहिलो पटककोलाई छ वर्ष, दोस्रो पटककोलाई नौ वर्ष र तेस्रो पटकदेखिकोलाई जतिसुकै पटकको भएपनि बाह्र वर्ष कैद समेत गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

१५ नं. ॥ ॥ यसै महलको १२।१३।१४ नम्बर बमोजिम कसूरदारलाई सजाय गर्दा सरकारी कर्मचारी वा माल धनीले पक्राउ गरी वा पत्ता लगाई बरामद भएको बाहेक मुद्दा फैसला नहुँदै सो कसूरदारले विगो दाखिल गऱ्यो वा उपर गराई दियो भने सो बमोजिम दाखिल वा उपर भए जति विगोको हकमा सो नम्बरहरुमा लेखिए बमोजिम जरिबाना नगरी सो विगोको दशौंद मात्र जरिबाना गर्नु पर्छ ।

१६ नं. ॥ ॥ १६ वर्ष नपुगेका नाबालकले चोरी ल्याएको माल अरु जानकारले बेचेको रहेछ भने सो बेच्नेबाट किन्नेको थैली भराई बेच्नेलाई विगो बमोजिम जरिबाना समेत गर्नु पर्छ ।

१७ नं. ॥ ॥ यसै महलको १२।१४ नम्बर बमोजिम सजाय हुने कसूर गर्ने उद्योगसम्म गरेको कसूर भने गरी नसकेकोमा सो उद्योग गर्नेलाई जुन कसूरको उद्योग गरेको हो सो कसूरमा हुने कैदको सजायको आधा सजाय गर्नु पर्छ ।

१८ नं. ॥ ॥ लागू खुवाई बेहोस गराई यसै महलको १२।१४ नम्बर बमोजिम सजाय हुने कसूर गरेमा सो कसूरमा सो नम्बरहरु बमोजिम हुने सजायमा एक वर्ष थपी कैद गर्नु पर्छ ।

१९ नं. ॥ ॥ एकाघरसँग रहेका कसैले चोरी गरी ल्याएको कुनै कुरा सो चोरी ल्याएको थाहा पाई खाइरहेको सोह्र वर्ष नाघेका सो घरका अरु जहानका अंशबाट समेत सो चोरीको विगो भराई दिनु पर्छ । सो बमोजिम गर्दा विगो नपुगेकोमा चोर बाहेक अरु जहानलाई अरु सजाय हुँदैन ।

२० नं. ॥ ॥ चोर्न जाँदा सँग नगएको भएपनि चोरी ल्याएको माल बाँडी लिने मतियारलाई जति पटक जति बाँडी लिएकोछ सो विगो भराई विगो बमोजिम जरिबाना गरी चोरीको पटकको कैद बमोजिम कैद समेत गर्नु पर्छ ।

२१ नं. ॥ ॥ चोरबाट विगो भराउँदा बरामद भै आएको मालमध्ये चिन्हले वा प्रमाणबाट यसको भन्ने ठहरेको जति जसको हो उसैलाई भराई दिई अरु धनी पत्ता नलागेको माल धरौट राखी तीन महिनाको म्याद टाँसी दिनु पर्छ । सो म्यादभित्र कसैले लिन आयो र चोरीको दरखास्तमा लेखिएको मालसँग मिल्न आयो भने दिनु पर्छ । *त्यसरी माल दिंदा दशौंद लाग्ने छैन । लिन आएन वा दरखास्तको मालमा मिलेन भने पहिले पक्री ल्याउने धनीलाई साबूत भराई बढ्ता भए अरु कायम गराइसकेको धनीलाई दामासाहीको हिसाबले भराई दिई बढी भए लिलाम गरी नेपाल सरकार दाखिल गर्नु पर्छ । धनी पत्ता नलागेको विगोमा जरिबाना हुँदैन । नपुगेमा चोरको जायजातबाट भराई दिनु पर्छ ।

२२ नं. ॥ ॥ कुनै प्रकारको चोरी गर्न गए मध्येका करणी गर्न वा ज्यान मार्नमा सरीक नभएका वा सो कसूर नगरेकालाई सो चोरीको मात्र सजाय गर्नु पर्छ । त्यस्ता चोरले आफू नपोलिंदै वा पक्राउ नहुँदै मौकैमा ज्यान मरेको वा करणी भएको कुरा जाहेर गरेमा वा कुनै चोरले आफू समेत मिली चोरी गर्न गए मध्येका अरु चोरलाई आफू नपोलिंदै वा पक्राउ नहुँदै मौकैमा पक्री ल्याए वा सुराक पत्ता लगाई पक्राई दिएमा सो बमोजिम जाहेर गर्ने वा पक्री ल्याउने वा पक्राई दिने चोर कसूरमा साबित भए वा प्रमाणबाट कसूरदार ठहरे पनि निजलाई चोरी गरे वापतको सजाय नगरी उसले खाएको विगोसम्म उपर गरी छाडी दिनु पर्छ ।

२३ नं. ॥ ॥ माल किन्दा सो मालको मोलमा सयकडा पन्ध्रसम्म वा बन्धकमा सयकडा बीससम्म नाफा हुने गरी कागज नगरी वा सोभन्दा बढ्ता परे पनि कागज गरी लिएकोमा चोरीको भन्ने नजानी लिएको भए बात लाग्दैन । लेखिएदेखि बढ्ता नाफा हुने गरी लिएकोमा कागज नगरी लिएको रहेछ वा चोरीको हो भनी जानी बुझी लिएको रहेछ भने यसै महलको २४ नम्बर बमोजिम गर्नु पर्छ । यस्ता मालको मोल कायम गर्दा सो लिएको अवस्थामा सो मालको पर्ने मोलबाट विगो कायम गर्नु पर्छ ।

२४ नं. ॥ ॥ चोरीको माल भनी जानी जानी लिने वा राख्नेलाई वा किन्नेलाई पहिला पटक भए विगो बमोजिम जरिबाना गर्नु पर्छ । दोस्रो पटकदेखिलाई विगो बमोजिम जरिबाना गरी सो जरिबाना वापत कैद गर्नु पर्छ । नजानी लिएको भए जरिबाना कैद हुँदैन । नजानी लिनेहरुले आफ्नो विगो चोर समेत जसबाट लिएको हो उसबाट कपाली सरह लिन पाउँछ । नाबालकसँग लिएकोमा थैली भराई लिन पाउँदैन ।

२५ नं. ॥ ॥ जेसुकै धनमाल जुनसुकै व्यहोराले लिएको भएपनि चोरीको माल भनी जानी जानी लिएको होस् नजानी लिएको होस् सो माल चोरीकै ठहर्न आयो भने जति ठाउँमा पुगेको भएपनि उसबाट झिकी धनीलाई भराई दिनु पर्छ । चोरीको भनी नजानी नोट नगदी सटही गरेको वा सो दिई लिई माल खरीद बिक्री गरेकोमा पछि चोरीको ठहरे पनि सो लिएको लिनेबाट फिर्ता हुँदैन ।

२६ नं. ॥ ॥ चोर हो समाति देऊ भनी ग्वाहार माग्दा सुनी नजाने सोह्रवर्ष माथि पैसट्ठी वर्ष मुनिका जानकार लोग्ने मानिसलाई पन्ध्र रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

---

* अदालत व्यवस्थापन तथा न्याय प्रशासन सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५८ द्वारा थप ।

२७ नं. ॥ ॥ यसमा विगो जरिबाना कैद वा तीनै थोकमा समेत गर्दा पनि चोरीमा आठ वर्ष, नकबजनी वा जबरजस्ती चोरीमा दश वर्ष, रहजनीमा बाह्र वर्ष र डाँकामा अठार वर्षदेखि बढी कैद गर्न हुँदैन ।

२८ नं. ॥ ॥ ⊖... ... ...

२९ नं. ॥ ॥ कुनै प्रकारको चोरीमा प्रमाण पुग्ने दशी देखाई नालिस गरे जहिलेसुकै पनि लाग्छ । अरु अवस्थामा सो भए गरेका एक वर्षभित्र उजूर नदिए लाग्न सक्तैन ।

---

⊖ नवौं संशोधनद्वारा खारेज ।

# महल ५

## आगो लगाउनेको

१ नं. ॥ ॥ कसैको नोक्सान गराउनका लागि जानी जानी आगो लगाउन, लगाउन लाउन र आगो लाउने उद्योग गर्न गराउन समेत हुँदैन । कसैले लेखिएका काम गऱ्यो भने जति जना मानिस भई सो काम भएकोछ उति जनालाई र मतलबीलाई समेत बात लाग्छ ।

२ नं. ॥ ॥ कसैले अर्काको घरमा सो घरभित्र मानिस भएको जानी जानी आगो लगाएको भए मानिस समेत मार्नाको नियतले आगो लगाएको ठहर्छ । ज्यान सम्बन्धीको महल बमोजिम गर्नु पर्छ ।

३ नं. ॥ ॥ कसैले अर्काको घरमा आगो लगाउँदा गाई गोरु परी गौबध भएमा वा जखम घाउ भएमा चौपायाको महल बमोजिम गर्नु पर्छ ।

४ नं. ॥ ॥ घरमा आगो लगाई दिएको नभै घर बाहिर रहेको अर्काको हकको जिन्सी माल आगो लगाई दिने, आगो लाउन उद्योग गर्ने र बचन दिनेलाई घर चौपाया मानिस परेको नभए नोक्सान भएको विगो भराई आगो लगाइसकेको भए ठाउँ एकको छ महिना, आगो लाउन उद्योग गरेकोमा आगो लगाउन नपाएको भए तीन महिनाको दरले कैद हुन्छ । मतियारलाई मुख्यलाई हुने सजायको आधी सजाय गर्नु पर्छ ।

५ नं. ॥ ॥ अर्काको घरमा आगो लगाएमा यस महलको २ नम्बर वा ३ नम्बरले सजाय हुने अवस्थाकोमा बाहेक अरुमा आगो लगाउने र सो काममा मुख्य भई वचन दिने जतिलाई एकघरको चार वर्ष र त्यसदेखि बढी घर एकको एक वर्षका दरले बढाई कैद गर्नु पर्छ ।

६ नं. ॥ ॥ सरकारी कागजपत्र वा तहबील रहेको घर वा ठाउँमा आगो लगाउने र मुख्य भै बचन दिनेलाई चार वर्षदेखि बाह्र वर्षसम्म कैद गर्नु पर्छ । जङ्गी खजाना रहेको घर वा ठाउँमा आगो लाउनेलाई र मुख्य भै बचन दिनेलाई सर्वस्व सहित जन्म कैद गर्नु पर्छ । लेखिएदेखि बाहेक अरु सरकारी घरमा आगो लाउनेलाई यसै महलको ४ नम्बर बमोजिम हुन्छ ।

७ नं. ॥ ॥ मुख्य भै बचन दिने वा घरमा आगो लगाउने बाहेक सो कामको मतलबी मतियारलाई मुख्य कारणीलाई हुने सजायको आधा सजाय गर्नु पर्छ ।

८ नं. ॥ ॥ आगो लगाई नसकेको सो कुराको उद्योगसम्म गरेको रहेछ भने आगो लगाउने र मुख्य भै बचन दिनेलाई जनही दुई वर्ष र सो कुराको मतलबी मतियारलाई एक वर्ष कैद गर्नु पर्छ । सरकारी कागजपत्र वा तहबील रहेको घर वा ठाउँमा भए सो सजायको दोब्बर गर्नु पर्छ ।

९ नं. ॥ ॥ आगो लगाई नोक्सान पारेको विगो जायजातबाट उपर नभई बाँकी विगोमा कैद गरी पाउँ भनी धनीले भन्यो भने चोरीको महलको १० नम्बर बमोजिम हुन्छ ।

१० नं. ॥ ॥ घरमा आगो लाउँदा चौपाया र धनमाल परी नोक्सान भएकोमा मोल विगो खुलेमा सोही बमोजिम र नखुलेकोमा पञ्चकृति मोल गराई आगो लगाई दिने काम गर्ने गराउनेका जायजातबाट भराई दिनु पर्छ ।

११ नं. ॥ ॥ सर्वस्व सहित जन्म कैद हुनेमा बाहेक यस महलका अरु कुरामा बाह्र वर्षदेखि बढ्ता कैद गर्न हुँदैन ।

१२ नं. ॥ ॥ गाई, गोरु वा मानिस मरेमा नालिस गर्ने हदम्यादको हकमा सोही कुराको महल बमोजिम हदम्याद कायम गर्नु पर्छ । सो बाहेक यस महलमा लेखिएका अन्य कुरामा सो भए गरेका मितिले एक वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ६

## खोटा चलनको

१ नं. ॥ ॥ सरकारी टक लागेको सिक्का नोट, टिकट, छाप लागेको लिफा, माना, पाथी र निशाना नम्बर लागेको ढक, गज इत्यादि स्थिति चलनका कुरा कसैले वाहिडा टक मारी छाप, नम्बर, निशाना इत्यादि ढाली खोदी बनाउन, बनाउन लगाउन, बनाउन उद्योग गर्न र त्यस्ता माल कसैले जानी जानी खरीद बिक्री गर्न औ सरकारी टक छाप नलागेका लेखिएका मालबाट भर्न नाप जोख तौल गर्नु इत्यादि गरी चलाउन र एक फेरा काम लगाई रद्दी भैसकेको टिकट लिफा इत्यादि टाँसी फेरि काममा लगाउन समेत हुँदैन । गरे खोटा चलन गरेको ठहर्छ ।

२ नं. ॥ ॥ सरकारी टक लागेका सिक्कामा दैवी परी बेकम्मा भएको र अड्डाबाट काटी फिर्ता दिएको दागी वा माला बाहेक अरु नेपाल सरकार नसोधी गाल्न हुँदैन ।

३ नं. ॥ ॥ धातु, जुहारात वा खाने चीजबीज इत्यादि गैह्र माल झुट्टालाई सद्दे हो भनी झुक्याई वा कपट मिलाई बिक्री गर्न र नाप्ने, तौल्ने भर्ने काममा नाप प्रमाण स्थितिभन्दा घटी बढी पारी नाप्न, तौलन, भर्न र सो गर्ना निमित्त त्यस्ता कपटी माल पसलमा राख्न समेत हुँदैन ।

४ नं. ॥ ॥ सरकारी टक, छाप, नम्बर, निशाना इत्यादि वाहिडा लगाउनेलाई निजबाट विगो उपर गरी देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - -

सिक्का वाहिडा टक मार्ने वा नोट वाहिडा छाप्नेलाई विगो बमोजिम जरिबाना गरी दश वर्ष कैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - १

बिक्री हुने टिकट वा लिफा इत्यादि वाहिडा छाप्नेलाई विगो बमोजिम जरिबाना गरी छ वर्ष कैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - २

ढक, माना, पाथी, गज इत्यादिमा वाहिडा छाप, नम्बर निशाना लगाउनेलाई विगो बमोजिम जरिबाना गरी एक वर्ष कैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - ३

माथि लेखिएका काममा लगाइएको र लाग्ने मालसामान जफत गर्नु पर्छ - - - - ४

५ नं. ॥ ॥ सरकारी टक मार्ने टक्सार र टिकट, लिफा, माना, पाथी, गज, ढक इत्यादि छाप्ने, नम्बर निशाना लगाउने अड्डाका सो काम गर्ने कर्मचारीले नेपाल सरकारको आदेश पूर्जी कानून केही नभै ढक, छाप, गज, नम्बर निशाना इत्यादि मार्‍यो, छाप्यो, ढाल्यो, नम्बर निशाना लगाई बनायो, बनाउन लगायो वा सो कुराको उद्योग गर्‍यो वा नेपाल सरकारका आदेश पूर्जी कानूनले टक मार्ने, छाप्ने, ढाल्ने, नाप्ने, नम्बर निशाना खोद्ने गर्दा पनि जानी जानी तौल, नाप प्रमाणबाट घटी बढी पारी काम गर्‍यो भने यसै महलको ४।६।७।१८ नम्बर बमोजिम हुने सजायमा सवाई बढाई सजाय गर्नु पर्छ ।

६ नं. ॥ ॥ वाहिडा टक मार्ने र नोट, टिकट, लिफा, ढक, माना, पाथी गज इत्यादिमा सरकारी छाप, नम्बर निशाना छाप्न, खोद्न, ढाल्न, बनाउन लागे लगाएको रहेछ वा सो नियतले बनाउने, छाप्ने, ढाल्ने छाप, साँचो, सरजामहरु आफ्ना

साथ वा डेरा, घर, पसलमा राखेको रहेछ भने यसै महलको ४ नम्बरमा लेखिएको सजायको आधा सजाय गर्नु पर्छ ।

७ नं. ॥ ॥ यसै महलको ४ नम्बरको अपराध गर्ने सल्लाहमा पसेका मतलबीलाई सोही नम्बरमा लेखिएको कैदको आधा कैद गर्नु पर्छ । त्यस कामबाट केही लिए खाएको भए सो विगो उपर गरी विगो बमोजिम जरिबाना समेत गर्नु पर्छ ।

λ८ नं. ॥ ॥ विदेशी सरकारको मुद्रा वा मुद्रा सरह चलनमा आउन सक्ने चेक इत्यादि नेपालभित्र बसी टक मारे बनाएकोमा वा विदेशमा टक मारे बनाएको खोटा मुद्रा वा मुद्रा सरह चलनमा आउन सक्ने चेक इत्यादि नेपालभित्र ल्याएको वा चलन गरेको वा सो कामहरु गर्ने उद्योग गर्ने वा त्यस्तो गर्ने मतलबमा पस्ने व्यक्ति प्रत्येकलाई सो मुद्रामा लेखिएको विगो बमोजिम जरिबाना गरी पाँच वर्षसम्म कैद गर्नु पर्छ र त्यस्तो खोटा मुद्रा जफत गरी रद्द गर्नु पर्छ । खोटो भन्ने नजानी लिनेलाई केही गर्नु पर्दैन ।

☯८क. नं. ॥ ॥ रद्द गरिसकेको चेक इत्यादि सो कुरा दवाई झुक्याई चलन गर्ने वा चलन गर्न प्रयत्न गर्नेलाई चेक जफत गरी ८ नं. मा लेखिएका सजायको आधासम्म सजाय गर्नु पर्छ ।

९ नं. ॥ ॥ दश च्युंटीको एक मुठी, दश मुठीको एक माना, आठ मानाको एक पाथी र बीस पाथीको एक मुरी हुन्छ ।

१० नं. ॥ ॥ आठवटा पेट मिलेको जौको एक अंगुल, बाह्र अंगुलको एक बित्ता, दुई बित्ताको एक हात, दुई हातको एक गज अथवा छत्तीस इन्चको एक गज हुन्छ ।

११ नं. ॥ ॥ धार्नीगत तौलमा आठ लालको एक मासा, बाह्र मासाको एक तोला, *f*साढे चार तोलाको एक कनुवा, चार कनुवाको एक पाउ, चार पाउको एक सेर, डेढ सेरको एक बिसौली, दुई बिसौलीको एक धार्नी र मनगत तौलमा दश लालको एक मासा, दश मासाको एक तोला, पाँच तोलाको एक छटाक, चार छटाकको एक पाउ, चार पाउको एक सेर र चालीस सेरको एक मन हुन्छ ।

१२ नं. ॥ ॥ चासनी र तौलमा घटाई कसर नाफा खानेलाई घटाएको विगो बुझी विगो बमोजिम जरिबाना गर्नु पर्छ ।

१३ नं. ॥ ॥ भर्ने, नाप्ने, तौल्ने, माना, पाथी, ढक, गज इत्यादिमा घटाई बढाई चलन गर्नेलाई र सो घटे बढेको वस्तु चलन गर्ना निमित्त बदनियतले पसलमा राख्नेलाई सो नोक्सानी विगो भराउनु पर्नेमा भराई पटकै पिच्छे पचास रुपैयाँका दरले जरिबाना गर्नु पर्छ ।

१४ नं. ॥ ॥ छाप, नम्बर, निशाना नलागेका माना, पाथी, ढक, गज इत्यादि फेला परेमा र तौल गर्ने काँटा र छाप नम्बर लागेका माना, पाथी, ढक, गज, इत्यादिमा पनि केही व्यहोराले तौल प्रमाणको कैफियत गरी घटी बढी पर्ने गरे गराएको

---

λ नवौं संशोधनद्वारा संशोधित ।

☯ नवौं संशोधनद्वारा थप ।

*f* दोस्रो संशोधनद्वारा संशोधित ।

त्यस्ता माल फेला परे जफत गरी चलन नालायकको तुल्याई बेकम्मा गराई लिलाम बिक्री गरी नेपाल सरकार दाखिल गर्नु पर्छ ।

१५ नं. ॥ ॥ गैह्र माल भुट्टालाई सद्दे हो भनी वा कपट मिलाई बेचेमा सो बेच्दा बढी आएको कसरको मोलको विगो नोक्सान पर्ने धनीलाई भराई बेच्नेलाई पटकै पिच्छे पचास रुपैयाँका दरले जरिबाना गर्नु पर्छ ।

१६ नं. ॥ ॥ कसैले पनि खोटा, माला, प्वाल परेको वा पोलिई वा अरु केही भै टक नबुझिने भएको दागी सिक्का चलन व्यवहार गर्नु हुँदैन । लेखिए बाहेक अरु मलेदा वा छेउछाउमा घेरा झरेको वा फुटेको अड्डा लगायत सबैले लिने दिने गर्नु पर्छ । फुटे झरेको भनी नलिनेलाई सो नलिएका विगो बमोजिम जरिबाना हुन्छ । चलन व्यवहार गर्न नहुने सिक्का अड्डामा बुझाउन ल्याएकोमा भने काटी दुई टुक्रा पारी फिर्ता दिनु पर्छ । काट्न नपर्ने सिक्का काटी फिर्ता दिएको ठहरे सो काट्ने सरकारी कर्मचारीलाई काटेको विगो बमोजिम जरिबाना गरी नोक्सानी विगो समेत भराई दिनु पर्छ ।

१७ नं. ॥ ॥ नेपाल सरकारले काटी दिएका दागी माला र दैवी परी बेकम्मा भएको बाहेक सरकारी टक लागेको अरु सिक्का नेपाल सरकार नसोधी गाल्नेलाई गालेको विगो बमोजिम जरिबाना गर्नु पर्छ ।

१८ नं. ॥ ॥ खोटो टक, छाप, नम्बर, निशाना लागेका नगद जिन्सीमाल जानी जानी पूरा मोलमा चलाई फाइदा उठाउने नियतले किन्ने बेच्ने चलन व्यवहार गर्नेलाई विगो जफत गरी एकसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१९ नं. ॥ ॥ एक फेरा काम लागी रद्दी भै सकेको टिकट, लिफा झुक्यानमा पारी चलाउने नियतले जानी जानी फेरि काममा लाउने वा काममा लगाउन उद्योग गर्नेलाई टिकट वा लिफा थान एकको विगो पचास रुपैयाँभन्दा घटी भए फी थान पचास रुयैयाँका दरले र बढी भए विगो बमोजिम जरिबाना गर्नु पर्छ ।

२० नं. ॥ ॥ सरकारी नोट सिक्का सो नोट सिक्कामै लेखिए बमोजिमको दरमा लिनु दिनु पर्छ । घटी बढी पारी लिए दिए वा चलन गरे गराएमा विगो जफत गरी पाँच सय रुपैयाँसम्म जरिबाना हुन्छ ।

२१ नं. ॥ ॥ सरकारी नोट सिक्का मध्ये यो यस्तो नोट सिक्का चलन चल्ती नगर्नु भनी वा यस्तो ठाउँमा नलैजानु भनी नेपाल सरकारले नेपाल राजपत्रमा प्रकाशित आदेशद्वारा मनाही गर्न सक्नेछ । सो बमोजिम मनाही गरिएको नोट सिक्का नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी सोही सूचनामा तोकिएको समयभित्र तोकिएको ठाउँमा दाखिल गर्न आदेश दिन सक्नेछ । सो बमोजिम दाखिल हुन आएको नोट सिक्काको सट्टा सो दाखिल गर्नेलाई चलन चल्तीमा रहेको उत्तिकै मोलको अर्को नोट सिक्का दिइनेछ । लेखिए बमोजिम मनाही भएको नोट सिक्का आदेशको वर्खिलाप कसैले चलन चल्तीमा ल्याए वा मनाही भएको ठाउँमा लगेमा वा दाखिल गर्नु पर्ने ठाउँमा म्यादभित्र दाखिल नगरेमा त्यस्तो नोट सिक्का नेपाल सरकारको आदेशबाट जफत हुन सक्नेछ र त्यस्तो नोट सिक्का कसैले चलन चल्ती गरिरहेको वा चोरी निकासी गरेको वा लुकाई दवाई राखेको पक्राउ गरी सावित गराई दिनेलाई सो पक्राउ भएको व्यक्तिबाट जफत गरिएको नोट सिक्काको सयकडा दश चलन चल्तीमा रहेको नोट सिक्काबाट पुरस्कार दिइनेछ ।

२२ नं. ॥ ॥ यस महलमा "सरकारी" भन्नाले नेपाल सरकारबाट स्वीकृत भएको समेतलाई सम्झनु पर्छ ।

२३ नं. ॥ ॥ खोटा टक मारे बनाएको काम गरेकोछ भन्ने कुरामा सो गर्नेको जीउसम्म र सो बाहेक अरु कुरामा सो काम भए गरेका मितिले तीन महिनाभित्र उजूर नदिए लाग्न सक्दैन ।

२४ नं. ॥ ॥ यस महलका कुरामा कैद गर्नु पर्दा बाह्र वर्षदेखि बढ्ता गर्न हुँदैन ।

# महल ७

## चौपायाको

१ नं. ॥ ॥ मारौं भन्ने नियत लिई गाई, गोरु मार्न, मार्न लगाउन, मार्नाको उद्योग गर्न, सो नियतले विदेशमा लैजान वा लगी बिक्री गर्न समेत हुँदैन । लेखिए बाहेक ऐनले मनाही भएको र आफ्नो हक नपुग्ने अरु चौपाया जनावर, पशु पंक्षी समेत मारी नोक्सान गरिदिन समेत हुँदैन ।

२ नं. ॥ ॥ मारौं भन्ने नियत नगरी उपकारका निमित्त वा अरु केही कुरा गर्दा अकस्मात लाग्न गई वा केही भई गाई गोरु मर्न गएको भए भवितव्य ठहर्छ । जीउमा परेको पीडा निको गराउनका लागि उपकारका निमित्त जीउमा घाउ लगाउन, डाम्न वा केही अङ्गबाट रगत झिक्न हुन्छ ।

[१०]३ नं. ॥ ॥ ... ... ...

४ नं ॥ ॥ जानी जानी गाई, गोरु मार्न भनी कसैले हतियार उठाई वा अरु कुनै किसिमसँग मार्न तयार भएको देखियो भने मार्न हुँदैन भनी मनाही गर्नु पर्छ । नमानी मनाही गर्ने मानिसलाई समेत हतियार चलायो भने त्यसै ठाउँमा काटी हानि मार्नेलाई खतबात लाग्दैन । सो बाहेकको अवस्थामा भने मार्न हुँदैन । पक्री अड्डामा सुपर्द गरी दिनु पर्छ ।

५ नं. ॥ ॥ कसैले गाई, गोरुलाई हतियार वा लाठा ढुङ्गा इत्यादिले हानेकोमा सो गाई, गोरु सोही पीरले उठ्न नसकी थला परी एक्काईस दिनभित्र मऱ्यो भने सोही हान्नेको चोटले मरेको ठहर्छ । म्याद नाघी मरेमा वा हिड्न डुल्न लागे पछि अरु व्यथा लागी मरेकोमा सो हान्नेलाई त्यसले लगाएको घा खतको मात्र सजाय हुन्छ ।

६ नं. ॥ ॥ ऐनले मार्न मनाही भएका चौपाया जनावर बाहेक अरु पाली राखेका चौपायाले आफ्नो बाली नोक्सान गरिदिएमा ती चौपाया पनि मार्न, खूनी गरिदिन हुँदैन । प्रहरी कार्यालयमा लगी बुझाई नोक्सान भएको विगो धनीबाट लिन पाउँछ । खूनी गराई दिएको भए बालीको विगो पाउँदैन । गाई गोरु बाहेक अरु जनावर खूनी गरेमा सजाय हुँदैन । मारेमा धनीको विगो भराई सजाय पनि गर्नु पर्छ ।

७ नं. ॥ ॥ पालीराखेको जनावर मात्तिई बौलाई वा अरु थोक केही भई नोक्सान गर्ने देखिएमा समेत त्यसबाट हुन सक्ने जोखिमी नोक्सानीको हर तरहबाट बचाउ राखी हेरचाह पुऱ्याई कसैलाई नोक्सान गर्न नपाउने गरी पाल्नु राख्नु पर्छ । सो बमोजिम गरेबाट हानि, टोकी वा अरु केही कुरा गरी कसैको ज्यान मर्न गयो भने त्यसको धनीलाई भवितव्यको ऐन बमोजिम गर्नु पर्छ । मानिस मार्ने चौपायाका हकमा जफत गरी मारी मासु खान हुने जातको जनावर रहेछ भने काटी मासु लिलाम गरिदिनु पर्छ, मासु खान नहुने भए फाली गाडिदिनु पर्छ । गाई गोरु र अरु ऐनले मार्न नहुनेलाई भने नजिकमा सरकारी गोठ, तबेला, हात्तीसार जे छ उही पठाई नोक्सान गर्न नपाउने हिसाबसँग बचाउ गरी राख्ने कुराको समेत जनाउ दिनु पर्छ । घरका मानिसमा जहान वा त्यसको हेरचाह गर्ने मानिसलाई मारेको भए बात लाग्दैन । जनावरका हकमा जफत

---

[१०] पशु वधशाला र मासु जाँच ऐन, २०५५ द्वारा खारेज ।

गरी लेखिए बमोजिम गर्नु पर्छ । मानिस बाहेक अरु अर्काको चौपाया मारिदिएमा भए त्यसको विगो भराई ऐन बमोजिम सजाय गर्नु पर्छ । सवार चढिरहेको बेलामा हात्ती, घोडा इत्यादि सवारीका जनावरले केही व्यहोरासँग नोक्सान गरेमा तत्सम्बन्धी कानून बमोजिम हुन्छ ।

८ नं. ॥ ॥ साँढे वा बुढा खाडा गाई, गोरु वा नव्याउने वैला गाई विदेशमा लान, पठाउन र लगी बिक्री गर्न समेत हुँदैन । कसैले गऱ्यो भने बिक्री भएकोमा विगो जफत गरी जीउ एकको एकसय रुपैयाँका दरले जरिबाना गर्नु पर्छ । विदेशी मुलुकमा लान भनी हिंडाएको पुऱ्याउन नपाउँदै बीचैमा पक्राउ भएको भए जीउ एकको पचास रुपैयाँको दरले जरिबाना गर्नु पर्छ ।

९ नं. ॥ ॥ बसाहा वा डामी छाडेका साँढे कसैले बेच्न किन्न हुँदैन । किने बेचे बेच्नेको थैली जफत गरी बेच्नेलाई सजाय गर्नु पर्छ । डामेको चिन्ह भएको थाहा नपाई किन्नेलाई बात लाग्दैन । बेच्नेबाट थैली फिर्ता लिई किन्नेलाई दिलाई बेच्नेलाई सजाय गर्नु पर्छ ।

१० नं. ॥ ॥ नेपाल सरहदबाट कुनै प्रकारका गाई, गोरु, साँढे, बसाहा विदेशमा लगी मार्ने मराउनेलाई छ वर्षसम्म कैद गर्नु पर्छ ।

११ नं. ॥ ॥ जानी जानी गाई गोरु मार्नेलाई बाह्र वर्ष र वचन दिनेलाई छ वर्ष कैद गर्नु पर्छ । चौंरी गाई मार्नेलाई जीउ एकको चालीस रुपैयाँका दरले जरिबाना गर्नु पर्छ ।

१२ नं. ॥ ॥ मार्नाका मतलबले गाई गोरुलाई विष खुवाएकोमा नमरे सो खुवाउनेलाई छ वर्ष, बचन दिनेलाई तीनवर्ष र खुवाउने उद्योगसम्म गरेको खुवाई नसकेको भए दुईवर्ष कैद गर्नु पर्छ ।

१३ नं. ॥ ॥ मार्नाका मतलबले गाई गोरुलाई समाती दिई वा बाँध छाँद गरिदिई अरुका हातबाट मराउनेलाई छ वर्ष कैद गर्नु पर्छ ।

१४ नं. ॥ ॥ गाई गोरुलाई कुटपीट गरी अङ्गभङ्ग गर्नेलाई दुई वर्ष कैद र घाउ रगतपच्छे गर्नेलाई दुईसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ । चौंरी गाईलाई अङ्गभङ्ग वा घाउ रगतपच्छे गर्नेलाई बीस रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१५ नं. ॥ ॥ कसैको गाई गोरुलाई कुट्दा भवितव्य भई गाई गोरु मर्न गएमा विगो भराई विगो बमोजिम जरिबाना गर्नु पर्छ ।

[‰]१६ नं. ॥ ॥ ... ... ...

१७ नं. ॥ ॥ छाडा गरी पालेको चौपायाले वा गोठाला लाएकाले गोठालाले हेरचाह नपुऱ्याई दिंदा मानिस चौपायालाई जीउ मर्ने गरी चोट पटक जीउ जखम पाऱ्यो भने छाडा राखेको चौपायाले मारेमा चौपायाका धनीलाई र सोह्र वर्ष उमेर पुगेको होस् दुरुस्त भएको गोठालाको जिम्माकोले भए गोठालालाई र सोह्र वर्ष उमेर नपुगेको गोठालो जिम्माकाले भए माल धनीलाई नै बीस रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

---

[‰] पशु वधशाला र मासु जाँच ऐन, २०५५ द्वारा खारेज ।

१८ नं. ॥ ॥ बसाहा, डामी छाडेको साँढे र गाई कसैले जोत्न हुँदैन । जोत्नमा प्रयोग गरेको चौपायालाई फुर्सद गरिदिई जोत्ने मानिसलाई बीस रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१९ नं. ॥ ॥ गौबध भएका कुरामा छ महिनाभित्र र अरुमा भए गरेका मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ८

## वेरीतसँग थुन्दाको

१ नं. ॥ ॥ ऐनले थुन्नु पर्ने मुद्दामा पक्राउ भएका मानिसलाई थुन्दा अन्न पानी समेतको खानेकुरा खानपीन दिई वा ऐन बमोजिम सिधा लगाई खान दिई मात्र थुन्नु पर्छ । सो बमोजिम नगरी वा ऐनले थुन्न नहुने मानिसलाई खानपीन दिई वा नदिई थुनेमा समेत बात लाग्छ ।

२ नं. ॥ ॥ अन्नपानी खान नदिई थुनेकोमा असख बिरामी वा बाह्र वर्ष नपुगेका वा साठी वर्ष नाघेका मानिसलाई तीन दिन तीन रात थुन्दा मर्न गएमा र लेखिए बाहेक अरु अवस्थाका मानिसलाई सात दिनदेखि बढी थुन्दा सोही कुराले मर्न गयो भने ज्यानमारा ठहर्छ । ज्यान सम्बन्धीका महल बमोजिम सजाय हुन्छ । खान दिई थुनेकोमा अरु व्यथा लागी मर्न गएमा र खानपीन दिएकोमा नखाई मर्न गएमा भने बात लाग्दैन ।

३ नं. ॥ ॥ अन्नपानी बन्द गरी थुन्नेलाई ज्यान मरेको नभए एक दिन एक रातको पाँच रुपैयाँ, दुई दिनको पन्ध्र रुपैयाँ, तीन दिनको तीस रुपैयाँ, चार दिनको साठी रुपैयाँ, पाँच दिनको एकसय बीस रुपैयाँ, छ दिनको दुईसय चालीस रुपैयाँ, सात दिनको चारसय अस्सी रुपैयाँ, आठ दिनको नौसय साठी रुपैयाँ, नौ दिनको एकहजार नौसय बीस रुपैयाँ, दश दिनको तीन हजार रुपैयाँ, एघार दिनदेखि प्रत्येक दिनको तीन सय रुपैयाँका दरले थपी एक्काईस दिनसम्मको छ हजार तीनसय रुपैयाँका दरले जरिबाना र जति दिन थुनेको हो उति दिनसम्म कैद गर्नु पर्छ । सो थुन्दा नेल चमोट हाली वा ठिंगुरा ठोकी थुनेको भए लेखिएका सजायको सवाई र हतकडी वा गलफन्दी समेत हाली थुनेको भए डेढी बढाई सजाय गर्नु पर्छ । लेखिए बमोजिम गरी जोसुकैले नाबालकलाई र लोग्ने मानिसले स्वास्नी मानिसलाई थुनेकोमा माथि लेखिएको जरिबानाको दोब्बर बढाई सजाय गर्नु पर्छ ।

४ नं. ॥ ॥ ऐनले थुनामा राख्न हुनेमा बाहेक कसैले कसैलाई खानपीन दिई थुनेमा जति दिन थुनेकोछ उति दिनको महिना एकको एक सय पचास रुपैयाँका दरले, नेल चमोट हाली वा ठिंगुरा ठोकी थुनेकोमा तीन सय रुपैयाँका दरले र हतकडी गलफन्दी हाली थुनेकोमा चार सय पचास रुपैयाँका दरले जरिबाना र जति दिन थुनेको छ उति दिनसम्म कैद गर्नु पर्छ । लोग्नेमानिसले स्वास्नीमानिसलाई वा जोसुकैले नाबालक वा सरकारी कर्मचारीलाई थुनेकोमा भने माथि लेखिएको सजायको दोब्बर सजाय गर्नु पर्छ ।

५ नं. ॥ ॥ मुद्दा परी कारबाहीको सिलसिलामा ऐनले थुन्नु पर्ने देखी असल नियतले थुनेकोमा पछि थुन्न नहुने ठहरे पनि सम्बन्धित सरकारी कर्मचारीलाई यस महल बमोजिम सजाय हुँदैन ।

६ नं. ॥ ॥ थुन्नेबाट असूल भएको जरिबानाको अन्नपानी खान दिई थुनेको भए तीन खण्डको एक खण्ड र अन्नपानी खान नदिई थुनेको भए आधा थुनाई माग्नेलाई भराई दिनु पर्छ ।

७ नं. ॥ ॥ थुनेको कुरामा थुनाबाट छुटेको मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल ८क.*

## अपहरण गर्ने तथा शरीर बन्धक लिनेको

१ नं. ॥ ॥ कसैले कुनै व्यक्तिलाई बल प्रयोग गरी वा प्रयोग गर्ने धम्की दिई, डर त्रास देखाई, जोरजुलुम गरी, हातहतियार देखाई, छलकपट गरी, झुक्यानमा पारी वा नशालु वा मादक पदार्थ सेवन गराई वा कुनै यातायातको साधन कुनै किसिमले कब्जा वा नियन्त्रणमा लिई कुनै ठाउँमा जान बाध्य गराउन वा कुनै व्यक्तिलाई निजको मञ्जुरी विना वा नाबालक र मानसिक रुपमा अस्वस्थ व्यक्तिलाई निजको हितको निमित्त निजको बाबु, आमा वा संरक्षकको मञ्जुरी बाहेक कुनै ठाउँमा लैजान हुँदैन । सो गरे अपहरण गरेको मानिनेछ ।

२ नं. ॥ ॥ मानसिक रुपमा अस्वस्थ व्यक्तिलाई निजको बाबु, आमा वा संरक्षकको मञ्जुरी लिई असल नियतले निजको हितको निमित्त थुनिएकोमा बाहेक कसैले कुनै व्यक्तिलाई बल प्रयोग गरी वा प्रयोग गर्ने धम्की दिई, डर त्रास देखाई, जोरजुलुम गरी, हातहतियार देखाई, छलकपट गरी, झुक्यानमा पारी वा नशालु वा मादक पदार्थ सेवन गराई वा कुनै यातायातको साधन वा ठाउँ कुनै किसिमले कब्जामा लिई वा त्यसउपर अनधिकृत तवरले नियन्त्रणमा लिई थुन्न हुँदैन । सो गरे शरीर बन्धक लिएको मानिनेछ ।

३ नं. ॥ ॥ कसैलाई ज्यान लिने, कुटपीट गरी चोट पुर्‍याउने, जबरजस्ती करणी वा अप्राकृतिक मैथुन गर्ने, बिक्री गर्ने, दास बनाउने, निजको इच्छा विरुद्ध काममा लगाउने, यातना दिने, बेश्यावृत्तिमा लगाउने, कुनै काम गर्न वा गराउन बाध्य गराउने, छुटकारा रकम (फिरौती) लिने वा शरीर बन्धकमा लिइएको व्यक्ति वा निजको हकवालाको धन सम्पत्ति प्राप्त गर्ने, व्यवसाय समर्पण गराउने वा प्रचलित कानून बमोजिम कसूर हुने अन्य कुनै काम गर्न लगाउने उद्देश्यले यस महलको १ वा २ नं. बमोजिम अपहरण गरेमा वा शरीर बन्धक लिएमा सो गर्ने गराउने व्यक्तिलाई सात वर्षदेखि पन्ध्र वर्षसम्म कैद र पचास हजार रुपैयाँदेखि दुई लाख रुपैयाँसम्म जरिबाना र लेखिए बाहेक अन्य उद्देश्यले अपहरण गरेमा वा शरीर बन्धक लिएमा चार वर्षदेखि आठ वर्षसम्म कैद र पच्चीस हजार रुपैयाँदेखि एक लाख रुपैयाँसम्म जरिबाना हुन्छ ।

४ नं. ॥ ॥ यस महलमा लेखिएको कसूर गर्न दुरुत्साहन गर्ने, आदेश दिने वा त्यस्तो कसूर हुनुभन्दा अगावै कसूर गर्न सहमति दिने व्यक्तिलाई सो कसूर निजले नै गरे सरह सजाय हुन्छ ।

५ नं. ॥ ॥ कुनै व्यक्तिले यस महलमा लेखिएको कसूर गरिनसकेको, सो कुराको उद्योगसम्म गरेको भए त्यस्तो व्यक्तिलाई सो कसूरमा हुने सजायको आधा सजाय गर्नु पर्छ ।

६ नं. ॥ ॥ कसैले कुनै रकम माग गरी त्यस्तो रकम नदिएमा अपहरण गर्ने वा शरीर बन्धक लिने धम्की दिएमा निजलाई उद्योग गर्ने व्यक्ति सरह सजाय गर्नु पर्छ ।

---

* बाह्रौं संशोधनद्वारा थप ।

७ नं. ॥ ॥ दुई वा दुईभन्दा बढी व्यक्ति मिली वा सङ्गठित रुपमा कुनै व्यक्तिलाई अपहरण गरेको वा शरीर बन्धक लिएको भए सो काममा संलग्न सबै व्यक्तिलाई यस महल बमोजिम हुने सजायमा दुई वर्ष थप गरी सजाय गर्नु पर्छ ।

८ नं. ॥ ॥ कसैले कुनै व्यक्तिलाई अपहरण गरी वा शरीर बन्धक लिई निज उपर प्रचलित कानून बमोजिम सजाय हुने अन्य कुनै कसूर गरेको रहेछ भने त्यस्तो व्यक्तिलाई यस महल बमोजिम हुने सजायको अतिरिक्त सो कानून बमोजिम हुने सजाय समेत गर्नु पर्छ ।

९ नं. ॥ ॥ यस महलको १, २ वा ३ नं. बमोजिमको कसूर महिला वा नाबालक विरुद्ध गरिएको भए यस महल बमोजिम हुने सजायमा दुई वर्ष थप गरी सजाय गर्नु पर्छ ।

१० नं. ॥ ॥ यस महल बमोजिमको कसूर गर्ने व्यक्तिले कसूर गर्दागर्दैको बखत सुरक्षाकर्मी समक्ष आत्मसमर्पण गरी अनुसन्धानमा सहयोग पुऱ्याएमा अवस्था हेरी निजलाई कम सजाय गर्न सकिन्छ ।

११ नं. ॥ ॥ कसैले कुनै व्यक्तिलाई नेपालबाहिर लगी यस महल बमोजिम अपहरण गर्ने वा शरीर बन्धक लिने वा नेपाली नागरिकलाई नेपालबाहिर यस महल बमोजिम अपहरण गर्ने वा शरीर बन्धक लिने कार्य गरे गराएको रहेछ भने निजले नेपालभित्रै कसूर गरे सरह मानी त्यस्तो व्यक्तिलाई यस महल बमोजिम सजाय गर्नु पर्छ ।

१२ नं. ॥ ॥ यस महलको १, २ वा ३ नं. बमोजिम कसूर गरे गराएको कुरा प्रमाणित हुन आएमा मुद्दा हेर्ने अड्डाले पीडित व्यक्तिलाई पुग्न गएको शारीरिक तथा मानसिक क्षतिको विचार गरी सो कसूर गर्ने गराउने व्यक्तिबाट पीडित व्यक्तिलाई कसूर भएको दिनदेखि प्रत्येक दिनको कम्तीमा पाँच सय रुपैयाँको दरले क्षतिपूर्ति समेत भराई दिनु पर्छ । पीडित व्यक्तिको मृत्यु भइसकेकोमा त्यस्तो क्षतिपूर्ति निजको नजिकको हकदारले पाउँछ । अपहरण गर्ने वा शरीर बन्धक लिने व्यक्तिले छुटकारा रकम (फिरौती) वा अन्य कुनै लाभ लिइसकेको रहेछ भने सो समेत सम्बन्धित व्यक्तिलाई फिर्ता गराई त्यस्तो व्यक्तिलाई यस महल बमोजिम हुने सजायको अतिरिक्त विगो बमोजिम जरिबाना समेत गर्नु पर्छ ।

१३ नं. ॥ ॥ कसैलाई अपहरण गरी वा शरीर बन्धक लिई ज्यान मारेकोमा नालिस गर्न हदम्याद लाग्ने छैन । सो बाहेक अपहरण गरिएको वा शरीर बन्धक लिएको मितिले ◎एकवर्ष वा अपहरण वा शरीर बन्धकबाट छुटेको मितिले ◎छ महिनाभित्र नालिस नदिए लाग्न सक्दैन ।

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

# महल ९

## कुटपीटको

१ नं. ॥ ॥ कसैले कसैलाई हात हतियार उठाई वा अरु कुनै प्रकारले रगतपच्छे घा चोट अङ्गभङ्ग पारेमा वा जीउमा अरु पीडा नोक्सान हुने काम गरेमा कुटपीट गरेको ठहर्छ ।

◎॥ २ नं. ॥ ॥ कुटपिट गर्दा देहाय बमोजिम भएमा अङ्गभङ्गको खत ठहर्छ --

आँखाको हेर्ने शक्ति हीन गरी वा आँखा फोरी दृष्टिविहीन बनाई दिएमा - १

नाकको सुँघ्ने शक्ति हरण गरिदिएमा ---------------------------- १

कानको सुन्ने शक्ति हरण गरी दिएमा ---------------------------- १

जिब्रोको बोल्ने शक्ति हरण गरिदिएमा ---------------------------- १

महिलाको स्तन काटी दिएमा ------------------------------------ १

महिलालाई बाँझोपन र पुरुषलाई पुरुषत्वहीन बनाएमा -------------- १

मेरुदण्ड, डँडाल्नु, हात खुट्टा वा यिनैको जोर्नी भाँची, फोरी, फुकाली बेकम्मा पारिदिएमा ------------------------------------------- १

३ नं. ॥ ॥ इवी अदावत र कुटपीट गरुँ भन्ने इच्छा नगरी केही काम गर्दा त्यसै कामका सम्बन्धबाट कसैलाई कुनै किसिमको चोट लाग्न गै अङ्गभङ्ग, घा खत इत्यादि केही हुन गएछ वा लेखिएका हिसाबसँग एक चित्त भई काम गरिरहेका बखत वा ठाउँमा काम गर्नेले बचाउ गर्न नपाउने किसिमसँग मात्र थाहा पाई अथवा थाहै नपाई अकस्मातमा मानिस पर्न आउँदा त्यसलाई चोट लाग्न गै अङ्गभङ्ग घा चोट इत्यादि हुन गएछ भने भवितव्यबाट भएको ठहर्छ । त्यस्तोमा देहायमा लेखिए बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

लेखिएको काम होशियारी र सावधानीसँग गर्दागर्दै चोट लागी अङ्गभङ्ग भएमा एक अङ्गभङ्गको λएकहजार रुपैयाँको दरले अङ्गभङ्ग हुनेलाई घा खर्च भराई सो गर्नेलाई λएकसय रुपैयाँ जरिबाना गर्नु पर्छ । सो बाहेक अरु चोट पटक नील पर्न गएमा घा चोट हेरी λदुईसय पचास रुपैयाँसम्म घा खर्च भराई λपचास रुपैयाँसम्म जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

लेखिएका काम होश नपुऱ्याई वा हेलचक्रयाई गरी पर्वाह नराखी काम गरेकाबाट चोट लागी अङ्गभङ्ग हुन गएमा एक अङ्गभङ्गको λदुईहजार रुपैयाँको दरले अङ्गभङ्ग हुनेलाई घा खर्च भराई सो गर्नेलाई λपाँचसय रुपैयाँ जरिबाना गर्नु पर्छ । सो बाहेक

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

अरु चोट पटक नील परेमा घा चोट हेरी λपाँचसय रुपैयाँसम्म घा खर्च भराई λदुईसय पचास रुपैयाँसम्म जरिबाना गर्नु पर्छ - - - - - - - - - - - - - - - - - २

४ नं. ॥ ॥ अघिको इबी अदावत वा कुनै कुराको लालचले वा लुकी चोरीकन पनि हानेको रहेनछ केही कुरामा झगडा हुँदा आफ्नो विराम केही नभई अर्काले पहिले हात हतियारको चोट छोड्न आँटेको वा चोट छोडिसकेपछि सो चोटको जोखिमी बचाउनका निमित्त र अर्काले आफ्नो धनमाल चोर्न लागिरहेको वा अरु अपराध हुने किसिमको केही काम गरिरहेको देखी पक्रन खोज्दा हात हतियार उठायो वा सो मानिस जुलुमी रहेछ र त्यसलाई उसै बखत पक्राउ गर्नलाई कुटपीट नगरी पक्रन नसकिने भै हात छाड्नु पर्दा घा चोट अङ्गभङ्ग केही हुन गएछ भने सो गर्नेलाई र रक्षा शिक्षा गर्नेले कुटाई माग्नेको हितको निमित्त मनासिब माफिकको सामान्य बल प्रयोग गरी कुटेमा सो कुट्नेलाई पनि कुटपीटको बात लाग्दैन ।

५ नं. ॥ ॥ अर्कामाथि हात हतियार उठाई वा अरु केही प्रकार गरी मैले यो काम गरे भने परिणाम अङ्गभङ्ग वा चोट पीडा यस्तो पुग्न सक्छ वा सम्भव छ भन्ने कुरा जानी बुझी होस् वा इबी परेकालाई इबी सघाउनाका लागि होस् वा केही कुराको लालचले होस् वा लुकी चोरिकन होस् इत्यादि कुरा गरी कसैलाई कुनै प्रकारले पहिले हातहतियार उठाई वा अरु केही कुरा गरी चोट पटक अङ्गभङ्ग इत्यादि गर्नेलाई यसै महलको तल नम्बर नम्बरमा लेखिए बमोजिम सजाय गर्नु पर्छ ।

◎६ नं. ॥ ॥ अङ्गभङ्ग खतमध्ये दृष्टिविहीन बनाएको, महिलाको स्तन काटेको वा महिलालाई बाँझोपन वा पुरुषलाई पुरुषत्वहीन बनाएको खतमा जुनसुकै एक खत गरे पनि सो गर्नेलाई तीनलाख रुपैयाँ जरिबाना गरी आठ वर्ष कैद गर्नु पर्छ । ती खतहरु बाहेक अङ्गभङ्गको अरु खतमध्ये जुनसुकै एक खत गरे पनि सो गर्नेलाई दुई लाख रुपैयाँ जरिबाना गरी आठ वर्ष कैद गर्नु पर्छ । एउटै किसिमको काम लिने एउटा भन्दा बढी अङ्ग हुनेमा सो मध्ये एउटा अङ्गमात्र बेकम्मा पारी दिएको भए माथि लेखिएको सजायको आधा सजाय गर्नु पर्छ । सो खत निको भई काम लाग्ने भएमा भने एकलाख रुपैयाँ जरिबाना र दुई वर्ष कैद गर्नु पर्छ । यसरी जरिवाना वापत प्राप्त पुरै रकम पीडितलाई घा खर्च वापत दिइनेछ ।

७ नं. ॥ ॥ अङ्गभङ्गको खत हुने बाहेक अरु अङ्ग फोर्ने छिनाल्ने फुकाल्नेलाई सो अङ्ग निको भई काम लाग्ने भएमा λदुईहजार रुपैयाँ जरिबाना र छ महिना कैद र निको भइकन पनि काम नलाग्ने भएमा वा निकै नहुने भएमा λपाँचहजार रुपैयाँ जरिबाना र एक वर्ष कैद गर्नु पर्छ ।

८ नं. ॥ ॥ अङ्गभङ्गको खत हुने वाहेक घाँटीदेखि माथि देखिने ठाउँसम्मका अनुहारमा जुनसुकै व्यहोरासँग काटी छिनाली दिई खत डाम लगाई जिन्दगीभर जस्ताको तस्तो नहुने गरी कुरुप पारी दिनेलाई खत हेरी λपाँचहजार रुपैयाँसम्म जरिबाना र एक वर्षदेखि तीन वर्षसम्म कैद र जस्ताको तस्तो गरी निको भएपनि कुरुप देखिने गरी खत, टाटो, वा डाम रहने भएमा खत अनुसार λतीनहजार रुपैयाँसम्म जरिबाना र एक वर्षसम्म कैद गर्नु पर्छ ।

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

९ नं. ॥ ॥ साधारण हतियार वा लाठा ढुङ्गाले हानि घोची काटी अङ्गभङ्ग हुने बाहेक अरु चोट पटक पारी दिएमा घोचेको घाउको गहिराई नापी र हानेका घाउमा लमाई वा गहिराई जुन तर्फका नापबाट बढी खत हुने देखिन्छ उसैतर्फको नापबाट एक इन्चको λपाँचसय रुपैयाँको दरले जरिबाना गर्नु पर्छ । बन्दुक, खुकुरी, तरबार, काँढ, च्याप्सा, भाला, कटारी, खूँडा, बन्चरा, गडाँसा अरु यस्तै किसिमको गैह्र जोखिमी हतियारले काटी हानि घोची घाउ चोट पारेमा लेखिए बमोजिम इन्चीको नापबाट प्रत्येक इन्चको λपाँचसय रुपैयाँ जरिबाना र एक महिना कैदका दरले दुईवर्ष नपुगेसम्म कैद समेत गर्नु पर्छ ।

१० नं. ॥ ॥ लाठा ढुङ्गा वा हतियारले हानि रोपी घोची एक इन्चीदेखि मुनिको घाउ पारेमा जोखिमी साधारण हतियारको र परेको घाउको विचार गरी λपाँचसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

११ नं. ॥ ॥ कुटपीट गरी नील पारेमा एक नीलको λएकसय रुपैयाँको दरले बाह्रसय रुपैयाँ नपुगेसम्म जरिबाना गर्नु पर्छ ।

१२ नं. ॥ ॥ अर्काको दाँत फुकाल्ने भाँच्नेलाई दाँत एकको λतीनसय रुपैयाँको दरले जरिबाना गर्नु पर्छ ।

१३ नं. ॥ ॥ नङले दाँतले वा अरु थोक गैह्रले रगतपच्छे गराउने, लुछ्ने, छाला खुइल्याईदिने, रातो डाम पार्ने वा बाँध छाँद कटक बिजुली इत्यादि गैह्र कुरा गरी त्यसबाट जीउमा दु:ख पीडा पुऱ्याउनेलाई पीडाको विचार गरी λदुईसय पचास रुयैयाँसम्म जरिबाना गर्नु पर्छ ।

१४ नं. ॥ ॥ आगो, आगो समान ◎पोल्ने गराइएका वस्तुले पोली, डामी, दली, घसी इत्यादि-गैह्र कुरा गरी जीउमा पीडा गराउनेलाई अङ्गभङ्ग कुरुप भएको रहेनछ भने आङ, मुख, कानमा पोलेको भए λपाँचसय रुपैयाँ जरिबाना र दुई महिना कैद, नाक, आँखामा भए λएकहजार रुपैयाँ जरिबाना र चार महिना कैद, गुदद्वारमा भए λदुई हजार रुपैयाँ जरिबाना र आठ महिना कैद, लिङ्गमा भए λचार हजार रुपैयाँ जरिबाना र एक वर्ष चार महिना कैद, भगमा भए λआठ हजार रुपैयाँ जरिबाना र दुई वर्ष आठ महिना कैद गर्नु पर्छ । लेखिएदेखि बाहेक अरु पोल्ने वस्तु गैह्रले पीडा गर्ने गरी पोली, डामी, दली, घसी दिनेलाई लेखिएका सजायको आधा सजाय गर्नु पर्छ । विषको धूँवा दिने वा बेहोस हुने कुरा सुँघाउनेलाई λएकहजार रुपैयाँ जरिबाना र दुई महिना कैद गर्नु पर्छ । अङ्गभङ्ग र कुरुप भएको रहेछ भने यसै महलका ६।८ नम्बर बमोजिम सजाय गर्नु पर्छ ।

✎१४क. नं.॥ ॥ तेजाब वा यस्तै प्रकारका अन्य पदार्थ छर्किई वा सो पदार्थले पोली, डामी, दली, घसी जीउमा पीडा गराएमा वा अनुहार वा शरीरको कुनै अङ्ग कुरुप पारेमा कसूरको प्रकृति हेरी अनुहारमा कुरुप पारेमा पाँच वर्षदेखि आठ

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

λ नवौं संशोधनद्वारा संशोधित ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

वर्षसम्म कैद र एकलाख रुपैयाँदेखि तीनलाख रुपैयाँसम्म जरिवाना र शरीरको अन्य अङ्ग कुरुप पारेमा वा जीउमा पीडा गराएमा तीन वर्षदेखि आठ वर्षसम्म कैद र पचास हजार रुपैयाँदेखि एक लाख पचास हजार रुपैयाँसम्म जरिवाना गर्नु पर्छ । यसरी जरिवाना वापत प्राप्त पूरै रकम पीडितलाई घा खर्च वापत दिइनेछ ।

१५ नं. ॥ ॥ एकै दिन एकै वारदातमा एकै जनालाई कुटपीट अङ्गभङ्ग रगतपच्छे समेत गैह्र गरेमा ठूलो खतको मात्र सजाय गर्नु पर्छ । अरु खत खाप्न हुँदैन ।

१६ नं. ॥ ॥ अर्कालाई अह्राई कुटपीट गराउनेलाई सजाय गर्दा अह्राउ मानी कुटपीट गर्ने सबैलाई भएको जम्मा सजाय बमोजिम सजाय गर्नु पर्छ ।

१७ नं. ॥ ॥ कुटपीट गर्न लागेको बेलामा छुट्याई दिन हुन्छ । छुट्याएका कुरामा छुट्याउनेले हात हाल्यो भनी बात लाउन पाउँदैन ।

१८ नं. ॥ ॥ धेरैजना भई कुटपीट गरेमा जसले जस्तो रीतसँग जे कुरा गरेकोछ उसलाई उसै कसूरको सजाय गरी हूल गरे वापत जनही देहायमा लेखिए बमोजिम थप सजाय समेत हुन्छ - - - - - - - - - - - - - - - - - - - -

यस महल बमोजिम कैद हुने कसूर तीन जनासम्मको हूल भई गरेमा [λ]एकसय रुपैयाँ, तीन जनादेखि बढी पाँच जनासम्मको हूल भई गरेमा [λ]दुईसय रुपैयाँ, पाँचजनादेखि बढी दशजनासम्मको हूल भई गरेमा [λ]तीनसय रुपैयाँ, दशजनादेखि बढी बीसजनासम्मको हूल भई गरेमा [λ]चारसय रुपैयाँ र बीसजनादेखि बढी जतिसुकै जनाको हूल भई गरेमा [λ]पाँचसय रुपैयाँका दरले जरिबाना हुन्छ - - - - १

यस महल बमोजिम जरिबाना मात्र हुने कसूर हूल भै गरेमा सो जरिबानाको तीनजनासम्मको हूल भई गरेमा सयकडा दश रुपैयाँ, तीनजनादेखि बढी पाँचजनासम्मको हूल भई गरेमा सयकडा पन्ध्र रुपैयाँ, पाँचजनादेखि बढी दशजनासम्मको हूल भई गरेमा सयकडा बीस रुपैयाँ, दशजनादेखि बढी बीस जनासम्मको हूल भई गरेमा सयकडा पच्चीस रुपैयाँ र त्यसदेखि बढी जतिसुकै जनाको हूल भई गरेमा पनि सयकडा पचास रुपैयाँका दरले जरिबाना हुन्छ - - - - २

१९ नं. ॥ ॥ कुटपीटका कुरामा नालिस दिंदा कुटाइका पीरले बेहोस भएकाबाट यस यसका चोटले घा चोट भएको भनी खोली लेखिदिन नसकेको वा वादीमा सो कुरा खोली लेखिदिएमा पनि साक्षी प्रमाणबाट सो घा चोट यस यसले पारेको भन्ने कुरा खुल्न नसकेमा एकजनादेखि बढीको हूल भई कुटपीट गरेको रहेछ भने परेका घा चोटको सजायमा हूल भै कुटपीट गरेमा र धेरै खत पारेमा यसै महलका १५।१८ नम्बर बमोजिम बढाउँदा हुने सजाय जम्माको दामासाही गरी कुटपीट गर्ने सबैलाई बराबर पारी सजाय गर्नु पर्छ ।

२० नं. ॥ ॥ कुटपीट गर्दा नील घा चोट गैह्र भएकोमा नील घा चोट निको नहुँदैमा सकेसम्म चाँडो सो कुटपीट भएका इलाकाको नजिकको प्रहरी कार्यालय 🕮गाउँपालिका वा नगरपालिका वा सम्बन्धित मुद्दा हेर्ने अड्डामा गै जँचाउनु पर्छ । सो बमोजिम घा नील देखाउन र जँचाउन आउनासाथ नजिक अस्पताल वा सरकारी डिस्पेन्सरीमा पठाई जँचाई उसको लेखोट बमोजिम र नजिकमा अस्पताल वा सरकारी डिस्पेन्सरी नभए त्यस ठाउँमा दुवै थरको नातेदार हकवाला भए तिनीहरु र सरजमीनका

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

जानिफकार भलादमी कम्तीमा चारजनालाई समेत राखी हेर्न लगाई जाँची ठहराई सो ठहराए बमोजिम फलानाको यतिसम्म भएकोछ भन्ने घा जाँचको मुचुल्का गराई लिनु पर्छ । 🕮गाउँपालिका वा नगरपालिकाले जाँचेकोमा भने उसको अधिकार क्षेत्रको बाहिर भए मुद्दा हेर्ने अड्डामा बुझाई दिनु पर्छ ।

२१ नं. ॥ ॥ यसै महलका २० नम्बर बमोजिम घा जाँच गर्दा गराउँदा सो जाँच नहुँदै यस दिन यस टायममा यसकारण यस यसले घा चोट पारी दियो भन्ने कुरा प्रहरीले पक्राउ गरी ल्याएकोमा दाखिल हुनासाथ मौकामा अड्डाबाट गराउने कागजैमा र प्रहरीले पक्राउ गरी ल्याएको नभै घा जँचाउन कुटाई माग्ने आफै आई वा उसका मानिसले जँचाउन ल्याएमा कुटाई माग्नेको होस ठेगानमा रहेको भए उसैको र होस ठेगानामा नभए उसलाई ल्याउने मानिसको दरखास्त लिई वा अड्डाबाटै सोधी लेखी सहीछाप गराई लिई मात्र घा जाँच गरी गराई बेहोस् भएकाको पनि होस् ठेगान हुनासाथ सोधी कागज गराई लिई सो दरखास्त, कागज र घा जाँचको कागज सबै सामेल राख्ने गर्नु पर्छ ।

२२ नं. ॥ ॥ कुटपीट मुद्दामा घा जाँच गर्दा सजायमा घटीबढी पर्ने गरी जीउमा परेको घा भन्दा नापमा वा किसिममा घटीबढी पारी वा नभएको घा चोट पटक छ भनी वा भएको घा चोट दबाई छुटाई घा जाँचको कागजमा जानी जानी लेखिदिएको रहेछ भने त्यसबाट सजायमा जति घटी बढी पर्न जाने हुन आउँछ त्यसको अन्जाम गरी λदुईसय पचास रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

२३ नं. ॥ ॥ घा जँचाउन आउँदा झुट्टा घा खत नील डाम बनाई जँचाउन आएमा साबित भएकालाई λएकसय रुपैयाँ जरिबाना गर्नु पर्छ ।

२४ नं. ॥ ॥ अड्डामा बसी वा डोरमा खटी गएको वा उर्दी पूर्जी गरी पक्रन तामेल गर्न पठाएको सरकारी कर्मचारीले आफ्ना जिम्माको गर्नु पर्ने कानून बमोजिम सरकारी काम तामेल गर्न पक्रन खोजेका अवस्थामा सो काममा बाधा गराउन वा अरु कुनै कुराको नियतले हूल हुज्जत गरी कुटपीट गरी हात हतियार छोडेछ भने त्यसलाई ऐनले हुने सजायमा चुक अनुसार छ महिनासम्म कैद थप हुन्छ । हात नछोडी हूल हुज्जत मात्र गरेमा λदुईसय पचास रुपैयाँसम्म जरिबाना मात्र थप हुन्छ ।

२५ नं. ॥ ॥ कुटाइ माग्नेलाई दिलाउने भराउने कुराका सम्बन्धमा यस महलको ३६ नम्बरमा लेखिएको कुरामा सोही बमोजिम र अरुमा कुटपीट गर्नेबाट असूल भएको जरिबानाको यस महलको ७८ नम्बरमा लेखिए बमोजिमको कुटपीटको हकमा आधा र अरुमा तीन खण्डको एक खण्ड कुटाइ माग्नेलाई घा खर्च वापत दिनु पर्छ ।

✎२५क.नं. ॥ ॥ यस महल बमोजिमको कसूरबाट पर्न गएको पीडाको मात्रालाई विचार गरी अदालतले कसूरदारबाट पीडितलाई दुई लाख रुपैयाँसम्म क्षतिपूर्ति भराई दिन सक्नेछ ।

---

λ नवौं संशोधनद्धारा संशोधित ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

२६ नं. ॥ ॥ यस महलमा लेखिएका कुरामा सजाय गर्दा कुटपीट मात्र भएकोमा भए तीन वर्ष, हतियारले हानि घोची घाउ पारेको वा आगोले पोले डामेकोमा भए छ वर्ष र अङ्गभङ्ग पारेकोमा भए दश वर्षभन्दा बढी कैद गर्न हुँदैन ।

२७ नं. ॥ ॥ यस महलमा लेखिएको खतमा नालिस गर्न आउँदा कुटपीट गरेका मितिले अङ्गभङ्ग भएकोमा तीन महिनाभित्र र सो बाहेक अरु गैह्र कुरामा भए सो भएका पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्दैन ।

# महल १०

## ज्यान सम्बन्धीको

१ नं. ॥ ॥ कानून बमोजिम बाहेक कसैले कुनै मानिसको ज्यान मार्न, मार्न लगाउन वा मार्नाको उद्योग गर्न हुँदैन ।

२ नं. ॥ ॥ अपहत्या वा अर्काका कर्तव्यले कुनै मानिसको ज्यान मरेमा हकवाला र अरु देख्ने सुन्नेले समेत सो कुराको सूचना जिमीदार, तालुकदार वा 🕮सम्बन्धित गाउँपालिका वा नगरपालिकाको सदस्य र प्रहरी कार्यालयलाई समेत दिनु पर्छ र त्यस्तो सूचना पाएमा वा अरु कुनै व्यहोराले थाहा भएमा जिमिदार, तालुकदार र 🕮गाउँपालिका वा नगरपालिकाको सदस्यले समेत देहाय बमोजिम गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

जिमिदार, तालुकदार वा 🕮गाउँपालिका वा नगरपालिकाको सदस्यले आफूले पाएको सूचना वा खबर यथाशक्य चाँडो 🕮गाउँपालिका वा नगरपालिकालाई दिनु पर्छ र प्रहरी मौकामा आइ नपुगेकोमा 🕮गाउँपालिका वा नगरपालिकाले जिमिदार तालुकदार समेत राखी यसै महलको ३ नम्बर बमोजिम लाश जाँच मुचुल्का गराई प्रहरी आईनसकुन्ज्याल लाश हिफाजतसाथ राख्नु पर्छ - - १

अर्काका कर्तव्यले ज्यान मरेको देखिएमा 🕮गाउँपालिका वा नगरपालिका, जिमिदार, तालुकदार समेतले कर्तव्यवाला कसूरदारको पनि भरसक सुराक पत्ता लगाई पक्रिए प्रहरीको जिम्मा लगाई दिनु पर्छ - - - - - - - - - - - - - - - २

🕮गाउँपालिका वा नगरपालिकाले माथि १ दफा बमोजिम गरेको मुचुल्का प्रहरी आउनासाथ प्रहरीलाई सुम्पी दिनु पर्छ र प्रहरीले पनि कानून बमोजिम लाश जाँच सरजमीन तहकिकात समेतको कारबाही गर्नु गराउनु पर्छ - - - - - - - - - - ३

लाश जाँच गर्दा डिस्पेन्सरी वा अस्पताल नजिक भएका ठाउँमा अस्पताल भएसम्म अस्पतालका डाक्टर र सो नभै डिस्पेन्सरी भए सो डिस्पेन्सरीमा रहेको मुख्य चिकित्सकबाट समेत जँचाउन लगाई प्रतिवेदन लिनु पर्छ - - - - - - - - - - ४

३ नं. ॥ ॥ अपहत्या वा कर्तव्य परी मरेको उजूर वा शङ्का देखिएकोमा मर्नेको लाश जाँच र मौका तहकिकात गर्दा गर्न जाँदा मौकामा पुग्नासाथ पहिले सो लाश भए रहेका ठाउँभन्दा केही वरै खडा भै वा बसी लाश रहेको ठाउँ वरपर भए परेको हात खुट्टा वा अरु केही किसिमको चिन्ह वा जमीन घष्टिए माडिएको वा कहींबाट घिसारी ल्याएको चिन्ह निशाना इत्यादि केही भए परेको र अरु दसी प्रमाण हुने केही माल छुटे रहेको देखियो भेटियो भने सो व्यहोरा समेत खोली टिपी लेखी सो देखिए भेटिएको दसी चिन्ह निशाना समेत भरसक नमासिने गरी जस्ताको तस्तो रहने हिसाबसँग आखिरी जाँच गरी लाश सदगत गर्ने पूर्जी नहुन्ज्यालसम्म सो सबै कुरा हिफाजतसाथ साबूद राखी अरु तल देहायमा लेखिए बमोजिम के के कुरा भए परेको छ खूब ध्यान दिई हेरी लाशको हालत, सो लाश रहेका ठाउँ जग्गाको अवस्था र चार किल्ला समेत देखाई गर्न सक्ने भए नक्सा समेत खडा गरी रीतपूर्वक लाश जाँचको कागज खडा गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - -

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

घा, चोटपटक, नील डाम परी मरेकोमा मर्नेको लाशमा यस यस ठाउँमा यति यति लम्बाई चौडाई गहिराई भएको यति गोटा यस्तो यस्तो घाउ चोट पटक अङ्गभङ्ग नील डाम, सुम्ला परेको, भाँचिएको, फुटेको भन्ने र छाला खुईलिएको, घस्रिएको, फाटेफुटेको, घोचेको भन्ने समेत सबै कुरा स्पष्ट खुलाई जाँच गर्नु पर्छ- - - - - - १

झुण्डी मरेको मानिसको लाशको अवस्था देहायमा लेखिए बमोजिम छ छैन जाँची पासो लगाएको डोरी अड्डामा ल्याउनु पठाउनु पर्छ - - -- - - - - - - - - - - - २

ओठ फुस्रो र आँखाको नानी ठूलो छ छैन - - - - - - - - - - - - - - - - - १

आँखा केही बाहिर निस्केको वा निक्लेको छ छैन - - - - - - - - - - - - - - २

जिभ्रो बाहिर निस्केको वा ओठले च्यापेको छ छैन - - - - - - - - - - - - - - ३

मुख, नाक, गुदद्वार वा इन्द्रियको प्वालबाट रगत वा राल इत्यादि समेत लस्सादार पानी र मल बीर्य निस्केको छ छैन - - - - - - - - - - - - - - - ४

घाँटीमा डोरीको डाम झुण्डिएतिर छ छैन सो डाम गोल वा नागबेली कस्तो छ कैलो डाम परेको र सो ठाउँको छाला साह्रो छ छैन - - - - - - - - - - - - - ५

हात मुठी पारेको छ छैन, हात खुट्टाले जमीन छोए समातेको छ छैन - - - - - - ६

कुवा, पोखरी, खोला, नालामा परेका लाशको अवस्था देहायमा लेखिए बमोजिम छ छैन जाँच गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

पानीबाट उठाउने बित्तिकै हातको छाला चाउरिएको र पेट ढाडिएको छ छैन - - १

लाश रहेको ठाउँको वरपर कुवा पोखरीका किनारा छेउछाउमा र लाशको मुखमा रगतको छिटा छ छैन - - - - - - - - - - - - - - - - - - - - - २

लाशको टाउको, गर्धन वा आङमा समेत कहाँ कहाँ चोट पटक वा रगत लागेकोछ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

मुठी खुला छ छैन, हातमा केही चीज ली राखेको भए यो यो चीज ली राखेको थियो भनी र मुख आङको छाला नरम वा खस्रो जस्तो छ उस्तो दुरुस्त गरी लेख्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

पेटमा पानी रहे नरहेको जाँच्नलाई वारिस भएकोमा वारिस र वारिस नभएकोमा अरु मानिस समेत लगाई लाशलाई घोप्टो पारी पिठ्यूँ थिच्न लगाउँदा पानी निस्कन्छ निस्कदैन - - - - - - - - - - - - - - - - - - - ५

लिङ्ग खुम्चिएर सानो भएको छ छैन - - - - - - - - - - - - - - - - - - ६

हातको औंलामा छाला खुइलिएको छ छैन - - - - - - - - - - - - - - - - ७

भगभित्र माटो पसेको छ छैन - - - - - - - - - - - - - - - - - - - - - ८

सर्पले टोकेकोमा देहायमा लेखिए बमोजिम भएको छ छैन जाँच गर्नु पर्छ - - - - ४

टोकेको ठाउँमा सुनिएको र कपालको रौ लुछ्दा सजिलैसँग उखेलिने भएको छ छैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

मर्नु अगाडि सो टोकेको ठाउँमा ठूलो पीर पर्ने गरी दुख्ने र मुखबाट फिंज आउने औंला पनि खुम्ची आँखीभई सानु सानु खोल्न पनि नसक्ने भई मुख पहेंलो निलो र रगत पनि नीलो पातलो चाँडै नजम्ने भएको थियो थिएन - - - - - - २

कुरा गर्न नसक्ने लट्ठ भएर हिंड्न पनि नसक्ने भएको थियो थिएन - - - - - - ३

विष खाए खुवाएमा देहायमा लेखिए बमोजिम भएको छ छैन जाँच गर्नु पर्छ - - - - ५

मर्नु अगाडि आँखा खुम्ची आँखाको नानी सानु र मरी सकेपछि ठूलो हुने, मर्न अगाडि बेहोस र निद्रा लाग्ने, पसिना धेरै आउने, मुख सुक्ने भएको थियो थिएन- १

मर्नु अगाडि उन्मत्त, घाँटी मुख सुक्ने र चेहरा रातो हुने, निद्रा लाग्ने, आँखा टोलाउने भई आँखाको नानी ठूलो ठूलो देखिने र बराबर बेहोस् भई लरबराई बोल्ने भएको थियो थिएन- - - - - - - - - - - - - - - - - - - - - - - - - २

मर्नु अगाडि झाडा बान्ता हुने र पेटमा डाहा हुने, ज्यादा प्यास लाग्ने, मुख सुनिए जस्तो, नाडी चाँडो चाँडो चल्ने, नाताकती हुने र बेहोस भएको थियो थिएन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

मर्ने वेलामा शिताङ्ग हुने, खाँदा खेरी मुख घाँटी पेट पोल्ने, पिडौला फर्कने भएको थियो थिएन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ४

४ नं. ॥ ॥ अपहत्या वा कर्तव्य परी मर्ने मानिसको लाश कानून बमोजिम जाँच भै सकेपछि सो लाश जलाउनु गाड्नु फाल्नु जो गर्नु पर्छ गर्नको निमित्त लाश जाँच गर्ने प्रहरी कर्मचारीले र ▶सरकारी वकील भए निजले समेत सहीछाप गरी पूर्जी गरिदिनु पर्छ । सो पूर्जी नलिई त्यसै लाश जलाउन, गाड्न, फाल्न हुँदैन । सो बमोजिम पूर्जी गरी नदिने वा पूर्जी नलिई लाश जलाउने, गाड्ने, फाल्नेलाई दश रुपैयाँ जरिबाना गर्नु पर्छ । लाश जाँच भै नसक्दै दबाउनका मतलबले लाश जलाउने, गाड्ने, फाल्ने वा सो कुरा गर्न लाउनेलाई अरु कानूनले हुने सजायमा सो गरे वापत छ महिना थपी कैद गर्नु पर्छ ।

५ नं. ॥ ॥ ज्यान लिने इबिलाग वा मनसाय नभै कसैले आफूले गरेको कर्तव्यले मानिस मर्ला भन्ने जस्तो नदेखिएको कुनै काम कुरा गर्दा त्यसैद्वारा केही भै कुनै मानिस मर्न गएको भवितव्य ठहर्छ ।

६ नं. ॥ ॥ भवितव्य भै मानिसको ज्यान मरेकोमा देहाय बमोजिम सजाय हुन्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

एउटा कामको निमित्त सावधानीसँग हात हतियार उठाएकोमा केही व्यहोराले अरुलाई लाग्न गै भवितव्य परेकोमा तीनसय रुपैयाँसम्म जरिबाना हुन्छ - - - - - १

होस नपुऱ्याई वा हेलचक्रयाई गरी कुनै काम गर्दा भवितव्य परेकोमा पाँचसय रुपैयाँसम्म जरिबाना वा दुई वर्षसम्म कैद वा दुवै सजाय हुन्छ - - - - - - - - - २

⌘ ............. - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - ३

⌘............. कसैले कसैलाई कुटपीट गर्दा भवितव्य परेकोमा पाँचसय रुपैयाँसम्म जरिबाना वा दुई वर्षसम्म कैद वा दुबै सजाय हुन्छ - - - - - - - - - - - - ४

लेखिएदेखि बाहेक अरु कुरा भै भवितव्य परेकोमा दुईसय रुपैयाँसम्म जरिबाना हुन्छ- ५

▶ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

⌘ केही नेपाल कानून संशोधन तथा खारेज गर्ने ऐन,२०७२ द्वारा झिकिएको ।

७ नं. ॥ ॥ देहायको अवस्थामा ज्यान मरेकोमा ज्यानमाराको बात लाग्दैन - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - -

कसैले हात हतियार लिई वा नलिई आफ्नो ज्यान लिनासम्मको जोरजुलूम गर्न लागेकोमा त्यस्तालाई पक्राउ गर्न वा गुहार मद्दत माग्न नसकिने वा मागे पनि बखतमा मद्दत पुग्न नसक्ने वा त्यस्ताको पन्जाबाट भागी उम्की आफ्नो ज्यान बचाउन समेत फूर्सत नपाउने अवस्थामा आफूले केही नगरे आफ्नो ज्यान रहँदैन भन्ने पूरा विश्वास भै ज्यान बचाउनका खातिर उसै मौकामा केही गर्दा सो जुलूमीको ज्यान मरेको - - - - - - - -- - - - - - - - - - - - - - - - - - - - - - - १

बारी वा बगैंचाको अन्न सागपात फलफूल चोरेमा बाहेक अरु चोरी गर्न बाटो अबाटोमा ढुकी बसी वा बाटो अबाटोबाट अर्काको घरभित्र पसी कुनै प्रकारको चोरी गर्न लागेका बखत वा चोर्नका निमित्त सेन खनी भित्र पस्न लागेका बखत पक्रन भरमग्दूर गर्दा पनि मद्दत नपुगी चोर डाँकालाई पक्राउ गर्न नसकिने र केही नगरे आफ्नो धन बच्न नसक्ने भयो भने उसै बखत चोर डाँकुलाई केही गर्दा मर्न गएको - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - - २

सरकारी तहबील कागजपत्र कैदी थुनुवा इत्यादि गैह्र रहेका अड्डाखाना खोर कारागार समेत गैह्रमा चपोट पाले पहरा रहेका चपोट पालेले आफूलाई भएका कानून बमोजिमको काम गर्दा सो काममा बाधा पर्ने वा नोक्सान गर्ने, चोर्ने, भाग्ने, भगाउने समेत गैह्र नियतले उर्दी बर्खिलापको काम गर्नालाई पाले चपोट उपर हमला गरी हात हतियार उठाई वा नउठाई आई लागेमा आफ्नो जीउ वा जिम्मामा रहेको सरकारी मालको बचाउ निमित्त उसै मौकामा केही गर्दा मर्न गएको - - - - ३

८ नं. ॥ ॥ यसै महलको ५ नम्बरले भवितव्य ठहर्ने बाहेक कुनै अङ्ग भाँच्ने छिन्ने गरी हाने कुटेमा त्यो थला परी निको नभए जतिसुकै समय पछि मरे पनि ज्यानमाराको बात लाग्छ ।

९ नं. ॥ ॥ ज्यानै मार्नाका लागि कुनै अङ्ग भाँच्ने छिन्ने गरी हाने कुटेमा बाहेक मारौं भनी गैह्र मर्ने कुरा गर्दा उसै बखत ज्यान नमरी त्यही मारौं भनी गरेका चोट पीरले उठ्न नसकी थला परी एक्काईस दिनभित्र, अरु सास्ती सासना जोरजुलूम गरेमा तीन दिनभित्र र विष गैह्र खुवाएमा सात दिनभित्र मऱ्यो भने ज्यानमारा ठहर्छ ।

१० नं. ॥ ॥ यसै महलको ५ नम्बरले भवितव्य ठहर्ने बाहेक सन्धी कुठाउँमा हातले हान्दा त्यसै पीरले उठ्न नसकी थला परी सात दिनभित्र मऱ्यो वा पीडा पर्ने गरी बाँध छाँद गर्दा त्यसै पीडाले उठ्न नसकी थला परी पाँच दिनभित्र मऱ्यो वा जेसुकै कुरा गर्दा सोही चोट पीरको घाउ डाम पाकी त्यसै पीरले उठ्न नसकी थला परी एक्काईस दिनभित्र मऱ्यो भने त्यसैको कर्तव्यले ज्यान मरेको ठहर्छ । सो म्याद नाघी मरेमा कुटपीटको महल बमोजिम हुन्छ ।

११ नं. ॥ ॥ अघिबाट अर्काले कुटपीट गैह्र गर्दा वा कुनै अरु व्यथा लागि वा अरु केही कुरा भै हिंडडुल कामकाज गर्न नसक्ने गरी थलिएका मानिसलाई कुटपीट गैह्र गरेमा सो गरेका एक्काईस दिनभित्र मऱ्यो भने पछिबाट कुट्नेका चोट पिरले मरेको ठहर्छ । अघिबाट कुट्नेलाई ज्यान मारौं भनी कुटेको ठहरेमा यसै महलको १५ नम्बर बमोजिम र ज्यान मारौं भन्ने नियत नलिई कुटपीट गरेमा कुटपीटको महल बमोजिम सजाय गर्नु पर्छ ।

१२ नं. ॥ ॥ म्यादभित्र हिड्न डुल्न अरु काम गर्न लागेपछि अरु कुनै व्यथा लागी वा अरु कुटपीट गैह्र गरी म्यादभित्रमा मर्‍यो भने पनि अघिबाट कुट्नेका चोट पीरले मरेको ठहर्दैन । मार्ने नियतले कुटेमा यसै महलका १५ नम्बर बमोजिम र सो नियत नदेखिएमा कुटपीटको महल बमोजिम सजाय मात्र गर्नु पर्छ ।

१३ नं. ॥ ॥ यसै महलका अरु नम्बर बमोजिम ज्यानमाराको बात नलाग्ने अवस्थामा बाहेक कसैले अरुको ज्यान मर्ने गैह्र कुरा गर्दा उसै बखत वा ऐनका म्यादभित्र ज्यान मरेमा सो ज्यान मार्नेलाई र मुख्य भै बचन दिनेलाई र वारदात भैरहेका ठाउँमा गै अर्काको जीउमा हात हाली मार्नालाई संयोग पारिदिने नियतले पक्री समाती राख्ने समेतलाई देहायमा लेखिए बमोजिम सजाय गर्नु पर्छ । छुट्याउनका नियतले हात हाल्ने वा छुट्याईदिनेलाई भने बात लाग्दैन - - - - - - - - - - - - -

धार भएको वा नभएको जोखमी हतियार गैह्रले हानि रोपी घोची ज्यान मारेमा जतिजना भै हतियार छाडेको छ उती जना ज्यानमारा ठर्हछन् । सर्वस्वसहित जन्म कैदको सजाय गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - - - - - - - १

विष खुवाई ज्यान मारेमा खुवाउने ज्यानमारा ठहर्छ । त्यस्तालाई सर्वस्व सहित जन्म कैद गर्नु पर्छ । मानिसलाई विष खुवाउन लगाउनेलाई जन्म कैद गर्नु पर्छ - - - - - २

लाठा ढुङ्गा र साधारण सानातिना हातहतियारले कुटी हानि रोपी घोची वा अरु ज्यान मर्ने गैह्र कुरा गरी ज्यान मरेमा एकै जनाले मात्र सो काम गरी ज्यान मारेमा सोही एक जना र धेरै जनाको हूल भै मारेमा यसैले मारेको वा यसको चोट्ले मरेको भन्ने प्रमाणबाट देखिन ठहर्न आएमा सोही मानिस मुख्य ज्यानमारा ठहर्छ । त्यस्तालाई सर्वस्व सहित जन्म कैद गर्नु पर्छ । सो बाहेक अरुलाई र यसैले मारेको वा यसैका चोटले मरेको भन्ने कुरा सो हात हतियार छाड्ने कसै उपर कुनै प्रमाणबाट देखिने ठहर्न नआएमा सबैलाई जन्म कैद गर्नु पर्छ - - - - - - - - - ३

जुनसुकै कुरा गरिकन पनि ज्यान मार्नामा बचन दिनेलाई वा वारदात भैरहेको ठाउँमा गै मार्नालाई संयोग पारिदिना निमित्त मर्ने मानिसको ज्यूमा हात हाली पक्री समाती दिनेलाई जन्मकैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - - ४

१३क. नं. ॥ ॥ X... ... ...

१४ नं. ॥ ॥ ज्यान मार्नाको मनसाय रहेनछ, ज्यान लिनु पर्ने सम्मको इवी पनि रहेनछ, लुकी चोरिकन हानेको पनि रहेनछ उसै मौकामा उठेको कुनै कुरामा रीस थाम्न नसकी जोखिमी हतियारले हानेको वा विष खुवाएकोमा बाहेक साधारण लाठा, ढुङ्गा, लात, मुक्का इत्यादि हान्दा सोही चोट पीरले ऐनका म्यादभित्र ज्यान मरेमा दश वर्ष कैद गर्नु पर्छ ।

[9]१५ नं. ॥ ॥ ज्यान मार्ने मनसायले गोली चलाउने वा बम हान्ने वा घातक हतियारले काट्ने वा मार्नका लागि अरु जुनसुकै कुराको उद्योग गरी मर्नेसम्मको काम गरेकोमा कुनै कारणले ज्यान मर्न पाएको रहेनछ भने त्यस्तो काम गर्ने र गर्न लगाउने तथा सो ठाउँमा गै बचन दिने वा मद्दत गर्नेलाई पाँच वर्षदेखि बाह्र वर्षसम्म कैद गर्नु पर्छ ।

---

X केही नेपाल कानून खारेज गर्ने ऐन, २०४७ द्वारा खारेज ।

9 आठौं संशोधनद्वारा संशोधित ।

[१]१६ नं. ॥   ॥ ज्यान मार्ने काममा वा ज्यान मर्न सक्ने कुनै कुरामा मुख्य भै षडयन्त्र गर्ने वा त्यस्तो काम गर्न लगाउनेलाई ज्यान मरेको रहेछ भने दश वर्षदेखि पन्ध्र वर्षसम्म कैदको सजाय गर्नु पर्छ । ज्यान मर्न पाएको रहेनछ भने पाँच वर्षदेखि बाह्र वर्षसम्म कैद गर्नु पर्छ ।

१७ नं. ॥   ॥ ज्यान मार्नालाई मतलबमा भने पसेको तर मुख्य भै बचन पनि नदिने, हात हतियार पनि नछोड्ने, जीउमा पनि नछुने देहायका अवस्थाका अरु मतलबीहरुलाई ज्यान मरेको रहेछ भने देहाय बमोजिम र ज्यान मरेको रहेनछ भने देहायमा लेखिएको सजायको आधा सजाय गर्नु पर्छ - - - - - - - - - - - - - - - -

ज्यान मार्नालाई भनी हतियार विष मागेमा जानी जानी हातहतियार गोली बारुद विष दिने वा ज्यान मार्ना निमित्त वारदात गरिरहेका ठाउँमा हतियार साथमा लिई महजूद रहनेलाई दश वर्ष कैद गर्नु पर्छ - - - - - - - - - - - - - - - - - - - - १

माथि १ दफामा लेखिए बाहेक घेरा दिने, बाटो, गौडा छेक्ने वा भाग्न उम्कन नपाउने समेत गैह्र काम गरी मार्ने संयोग पारिदिनेलाई पाँच वर्ष कैद गर्नु पर्छ - - -२

अरु किसिमसँग मत सल्लाहमा पसेकोमा मार्ने ठाउँमा गई अरु कुरा केही नगरी हेरी रहनेलाई र लेखिएदेखि बाहेक अरु किसिमका मतलबीलाई छ महिनादेखि तीन वर्षसम्म कैद गर्नु पर्छ - - - - - -  - - - - - - - - - - - - - - - - - - - - ३

१८ नं. ॥   ॥ जन्मेको जीउँदो बालक बालिका फाल्नेलाई चार वर्ष कैद गर्नु पर्छ । सो बालक बालिका मरेको भए ज्यानमारा सरह सजाय गर्नु पर्छ ।

१९ नं. ॥   ॥ अर्काले बेहकमा मानिस मार्न लागेमा ग्वाहार माग्दा सुनी नजाने सोह्र वर्ष माथि पैसट्ठी वर्षमुनिका जानकार लोग्नेमानिसलाई जनही तीस रुपैयाँसम्म जरिबाना गर्नु पर्छ ।

२० नं. ॥   ॥ कर्तव्य परी ज्यान मरेको मुद्दामा कसूरदार आफै सावित भै पोलेकोमा बाहेक कर्तव्यको उजूर परेकोमा तहकिकातबाट कर्तव्यवाला यही हो भन्ने पत्ता नलागेकोमा बीस वर्षपछि र कर्तव्यको उजूर नपरेकोमा सो वारदात भएका दुई वर्षपछि कसै उपर मुद्दा चल्न सक्तैन ।

२१ नं. ॥   ॥ लाश जाँच गर्दा जुन हिसाबसँग जाँच्नु पर्ने देखिन्छ सो बमोजिम जाँच गरी लाशमा भए देखिएसम्मको घाउ, खत, चोट, निशाना सबै यथार्थ खोली लाश जाँचको कागजमा लेख्नु पर्छ । जानी जानी फरक पारी लेखेको ठहर्‍यो भने त्यस्तालाई पाँच सय रुपैयाँसम्म जरिबाना हुन्छ ।

२२ नं. ॥   ॥ ज्यान मार्नाका मतलबमा नपसेको अर्काको बेहकमा कसैले ज्यान मार्छ भन्ने कुरा आफूले चाल पाई वा ज्यान मरिसकेको छ भन्ने चाल पाई उसलाई नपक्री वा जाहेर नगरी दवाउन भगाउन हुँदैन ।

२३ नं. ॥   ॥ ज्यान मार्ने मतलबमा पसेको रहेनछ भने पनि मानु नछुट्टी एकै घरसँग बसेकाले आफ्ना जहान चाकरलाई मारेको ज्यान मारिसकेको छ भन्ने कुरा चाल पाई उसलाई नपक्री वा जाहेर नगरी दवाउन भगाउन हुँदैन ।

२४ नं. ॥   ॥ ज्यान मार्नाका मतलबमा नपसेको भएपनि ज्यान मारी ल्याएको कुरा थाहा पाई बाँडी खानेलाई बात लाग्छ । सो नखाएको भए र यसै महलको २३ नम्बरमा लेखिएदेखि बाहेक अरुलाई ज्यान मारिसकेको चाल पाई अड्डामा जाहेर

नगरी दबाए भगाएको भएपनि आफ्ना बाबु, बाजे, बज्यै, स्वास्नी, छोरा, छोरी, एकै बाबुबाट जन्मेका दिदी, बहिनी, एकै बाजेबाट जन्मेका जेठा कान्छा बाबु, फुपू, दाजु, भाइ, भतिजा, नाति, नातिनी, जेठी कान्छी आमा, भाउज्यू, बुहारी, सासू, ससुरा, मामा, भानिज, आफूले जन्माएको छोरी वा एकै बाबुबाट जन्मेका दिदी बहिनी दिएको भिनाजु जुवाई यति नाताका र एकै घरमा मानु नछुट्टी सँगबसेका जहानले भगाए दबाएको भए खत बात लाग्दैन ।

२५ नं. ॥ ॥ ज्यान मारिसकेको कुरा चाल पाई जाहेर नगरी कसूरदारलाई दवाउने भगाउने सरकारी कर्मचारी भए दुई वर्ष, त्यस जग्गाका जिमिदार तालुकदार 🕮गाउँपालिका वा नगरपालिकाको सदस्य भए डेढ वर्ष, थरी गुमस्ता मुखिया मिझार जेठा बूढा गोरुम कटुवाले नाइके महाने गाउँका चौकीदार गोडायत भए छ महिना कैद र अरु भए घरमा थाहा पाउने मुख्य जो हो उसलाई बीस रुपैयाँ जरिबाना गर्नु पर्छ ।

२६ नं. ॥ ॥ ज्यान मार्छ भन्ने कुरा चाल पाई जाहेर नगरी ज्यान मारिसके पछि जाहेर भयो भने त्यस्तो चाल पाई जाहेर नगर्नेलाई एक वर्षसम्म कैद गर्नु पर्छ ।

२७ नं. ॥ ॥ ज्यान मार्छ भन्ने कुरा चाल पाई जाहेर नगरी दवाई ज्यान मार्न नपाउँदै अरुबाट जाहेर भयो भने त्यस्तो चाल पाई जाहेर नगरी दबाउनेलाई छ महिनासम्म कैद गर्नु पर्छ ।

⌛२८ नं. ॥ ॥ कसैले गर्भ तुहाएमा वा गर्भ तुहाउने नियतले वा गर्भ तुहिन सक्तछ भन्ने जानी जानी वा विश्वास गर्नु पर्ने कारण भई कुनै काम गर्दा गर्भ तुहिन गएमा निजलाई देहाय बमोजिम सजाय हुनेछ ..........................................

बाह्र हप्तासम्मको गर्भ भए एक वर्षसम्म कैद .......................................... १

पच्चीस हप्तासम्मको गर्भ भए तीन वर्षसम्म कैद ...................................... १

पच्चीस हप्ताभन्दा बढीको गर्भ भए पाँच वर्षसम्म कैद ................................ १

❐२८क. नं. ॥ ॥ कसैले गर्भवती महिलालाई करकाप, धम्की, ललाई फकाई वा प्रलोभनमा पारी गर्भपतन गराउन हुँदैन । त्यसरी गर्भपतन गराउनेलाई देहाय बमोजिमको सजाय हुनेछ :-

बाह्र हप्तासम्मको गर्भ भए एक वर्ष कैद .................................................. १

पच्चीस हप्तासम्मको गर्भ भए तीन वर्ष कैद ............................................ १

पच्चीस हप्ताभन्दा बढीको गर्भ भए पाँच वर्ष कैद ...................................... १

⊥२८ख. नं. ॥ ॥ यस महलको २८ नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि देहायका अवस्थामा नेपाल सरकारले तोके बमोजिमको प्रक्रिया अपनाई

---

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

निर्धारित योग्यता पूरा गरेका इजाजतपत्र प्राप्त स्वास्थ्यकर्मीले गर्भपतन गराएकोमा यस महल बमोजिम गर्भ तुहाएको मानिने छैन ................................................

गर्भ बोक्ने महिलाको मञ्जुरीले बाह्र हप्तासम्मको गर्भपात गरेकोमा ..................१

जबरजस्ती करणी वा हाडनाता करणीबाट रहन गएको अठार हप्तासम्मको गर्भ त्यस्तो गर्भ बोक्ने महिलाको मञ्जुरीले गर्भपात गराएकोमा ....................................२

गर्भपात नगराएमा गर्भ बोक्ने महिलाको ज्यानमा खतरा पुग्न सक्तछ वा निजको स्वास्थ्य शारीरिक वा मानसिक रुपले खराब हुन सक्तछ वा विकलाङ्ग बच्चा जन्मन्छ भन्ने प्रचलित कानून बमोजिम योग्यता प्राप्त चिकित्सकको राय भई त्यस्तो महिलाको मञ्जुरीले गर्भपात गराएकोमा ...........................................................३

ᵛ२८ग. नं. ॥ ॥ कसैले गर्भपतन गराउने उद्देश्यले गर्भमा रहेको भ्रुणको लिङ्ग पहिचान हुने कुनै काम गर्न गराउनु हुँदैन । त्यस्तो काम गर्ने गराउनेलाई तीन महिनादेखि छ महिनासम्म कैद हुनेछ ।

ᵛ२८घ. नं. ॥ ॥ २८ग. नम्बर अनुसार लिङ्ग पहिचान गरी गर्भपतन गर्ने गराउनेलाई छ महिनादेखि दुई वर्षसम्म कैद हुनेछ ।

२९ नं. ॥ ॥ केही रीस इबीले गर्भवती स्वास्नीमानिसलाई केही कुरा गर्दा गर्भ तुहिन गयो भने गर्भ तुहाउने मनसायले गरेको रहेनछ भने पनि बात लाग्छ ।

३० नं. ॥ ॥ जन्मेका जीउँदो बालक बालिका फालिएको देखियो भने सो कुरा नजिकको प्रहरी कार्यालयमा जाहेर गर्नु पर्छ ।

⊠३१ नं. ॥ ॥ ... ... ...

◎३२ नं. ॥ ॥ यस महलको २९ नं. बमोजिम केही गर्दा बाह्र हप्तासम्मको गर्भ पतन हुन गएकोमा एक वर्षसम्म कैद, पच्चीस हप्तासम्मको गर्भ तुहिन गएकोमा तीन वर्षसम्म कैद र पच्चीस हप्ता भन्दा बढीको गर्भ पतन हुन गएकोमा पाँच वर्षसम्म कैद गर्नु पर्छ ।

३३ नं. ॥ ॥ कसूरदार आफै मुख सावित भै त्यसैबाट उठेको मुद्दामा बाहेक गर्भ तुहायो भन्ने कुरामा सो तुहाएको तीन महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

ᵛ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

⊠ एघारौं संशोधनद्वारा खारेज ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

## महल ११

### जीउ मास्ने बेच्नेको

१ नं. ॥ ॥ कसैले कुनै मानिसलाई बिक्री गर्ने उद्देश्यले ललाई फकाई नेपाल सरहद बाहिर लैजान वा लगी बिक्री गर्न हुँदैन । विदेशमा बेच्न लगेकोमा बेच्न नपाउँदै पक्राउ भए बेच्न लैजानेलाई αदश वर्ष र बेचिसकेको भए αबीस वर्ष कैद हुन्छ । किन्ने मानिस नेपाल सरहदभित्र फेला परे निजलाई समेत बेच्नेलाई हुने सरहको सजाय हुन्छ ।

२ नं. ॥ ॥ कसैले सोह्र वर्ष नपुगेका नाबालकलाई वा कुनै उमेरको भएपनि मगज बिग्रेका मानिसलाई कानूनी संरक्षकको मञ्जुरी बेगर उसको संरक्षकत्वबाट छुटाउन वा छुटाउनको निमित्त ललाउन फकाउन हुँदैन । सो बमोजिम छुटाए वा ललाए फकाएमा सो गर्नेलाई पाँचसय रुपैयाँसम्म जरिबाना वा तीन वर्षसम्म कैद वा दुवै सजाय हुन्छ ।

⊠३ नं. ॥ ॥ कसैले कसैलाई कमारा कमारी बनाउन, दास तुल्याउन वा बाँधा बनाउन हुँदैन । त्यसरी कमारा कमारी बनाउने, दास तुल्याउने वा बाँधा बनाउने व्यक्तिलाई तीन वर्षदेखि दश वर्षसम्म कैद हुन्छ र अदालतले त्यस्तो कसूरदारबाट सम्बन्धित व्यक्तिलाई मनासिब क्षतिपूर्ति समेत भराई दिन सक्नेछ ।

४ नं. ॥ ॥ यसै महलको १।२।३ नम्बरमा लेखिएको कसूर गर्नमा जानी जानी मद्दत दिनेलाई मुख्यलाई हुने सजायको आधा सजाय हुन्छ ।

५ नं. ॥ ॥ यसै महलको १।३ नम्बरमा लेखिए बमोजिम मानिस बेचे किनेकोमा किन्नेको थैली भूस गराई बेच्नेलाई सो नम्बरहरुमा लेखिएको सजायमा थप सो थैलीको विगो बमोजिम जरिबाना समेत गर्नु पर्छ ।

---

α छैठौं संशोधनद्वारा संशोधित ।

⊠ केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा संशोधित ।

# महल १२

## इलाज गर्नेको

१ नं. ॥ ॥ जोखिमी ठूलो चिरफार औषधि गर्दा र व्यथा जाँची खुवाउनु पर्ने औषधिको लिखत गरी दिंदा समेत सो कुराको इलम पढी पास दी त्यसको निस्सा पाएका पासवाला डाक्टर बैद्यले चिरफार गर्न, औषधि लगाउन र खुवाउने औषधिको लिखत गर्न हुन्छ । व्यथाको परीक्षा गर्न वा औषधि गर्न जान्ने वा अनुभवले गरिआएका मानिसले समेत सानो तिनो घाउ खटिरा चिर्नु फोर्नु मलम पट्टी औषधि लगाउने काम गर्नालाई भने पास नभएपनि गर्न गराउन हुन्छ ।

२ नं. ॥ ॥ जीउमा केही भएको चिर्नु फोर्नु झिक्नु काट्नु नगरी नहुने भएमा बेरामी जानकार र होसहवाशमा भए त्यससँग समेत र बालक वा होशहवाशमा नभएको रहेछ भने उसको संरक्षण गर्ने वारिसवालाको मञ्जुरी लिई र वारिसवाला कोही नभएको वेवारिसी मानिसको चिर्नु फोर्नु आवश्यक देखियो भने अस्पतालबाट रोगीको फाइदाको निमित्त मञ्जुरी नलिकन पनि पासवाला डाक्टर बैद्य आफैले सो काम गर्न हुन्छ ।

३ नं. ॥ ॥ क्रिया पुगी सोधिएका विषयहरु र विषादी औषधिहरु पासवाला डाक्टर र बैद्यहरुले व्यथानुसार खुवाउनु पर्ने भै लिखत गरी दिएमा र ठीक मात्रासँग खुवाएमा मर्न गए बात लाग्दैन । क्रिया नपुगी सोधिएको विषादी र खाँदा मरिने भनी कहलिएका अरु विषादी केही वस्तु खुवाउन नहुनेलाई खुवाए लिखत गरिदिएको भए र खुवाउन हुनेलाई खुवाउँदा पनि दिन हुने मात्राभन्दा बढी मात्रा गरी लिखतमा लेखी दिंदा वा खुवाउँदा वा बेकाइदासँग रोगीलाई चिरफार गर्दा केही हुन गयो भने त्यस्ता डाक्टर बैद्यलाई र डाक्टर बैद्यले लिखत गरी दिंदा मात्रा मिलाई रोगीलाई दिनु पर्ने औषधि लेखी दिएकोमा औषधि मिलाउनेले मात्रामा घटी बढी पारी वा एकथोक औषधि मिलाउनु पर्नेमा अर्को औषधि मिलाई खुवाउँदा केही भएमा सो मिलाई दिने समेतलाई बात लाग्छ ।

४ नं. ॥ ॥ यसै महलको १ नम्बर बमोजिम औषधि गर्न वा चिरफार गर्न पाउनेले औषधि गर्दा वा चिरफार गर्दा समेत सो औषधि वा चिरफार गराई माग्ने बेरामीको व्यथा बढ्न गएमा वा निजको मृत्यु भएमा वा जीउमा हानि पीडा हुन गएमा खान दिएको औषधि बाँकी भए सोही औषधि समेत र सो नभएमा डाक्टर बैद्यले लेखिदिएको लिखत चिरफार गरेको काइदा र हतियार त्यसमा गरे लगाएको औषधिमध्ये विषादिमा क्रिया पुगेका वा नपुगेका र अरु पनि प्रमाण बमोजिमको भाग पुगे नपुगेको समेत के रहेछ त्यसमा औषधि व्यथा अनुसार दिनै पर्ने भई दिएको र दिन नहुने दिएको समेत के हो इत्यादि सबै कुरा राम्रो गरी जाँच्न सक्ने डाक्टर बैद्यहरुबाट जँचाई र खाई मर्ने विषादि कुरा भए परेको औषधि भए सो औषधि कुकुर खसी बोकालाई खुवाई परीक्षा गर्नु पर्छ । त्यस्तो परीक्षा गर्दा औषधि खाने कुकुर खसी बोका मर्न गयो वा जाँच्दा बेरामीलाई व्यथा अनुसार दिन नहुने औषधिको लिखत गरी दिएको वा औषधि मिलाउने वा बनाउनेले प्रमाणभन्दा घटी बढी मात्रा पारी मिलाएको, क्रिया भाग नपुगेको औषधि खुवाएको, बेकाइदासँग चिरफार गरेको, कमसल बीउबाट बिफर खोपेको ठहराए भने सो काम मार्नाका नियतले नगरेको बुद्धि नपुगी वा भूलचूकबाट मात्र हुन गएको ठहरेमा यसै महलको ८ नम्बर बमोजिम सजाय हुन्छ ।

५ नं. ॥ ॥ डाक्टर वा बैद्यको लिखत नभै कसैले नसा लाग्ने चीज र कुनै किसिमको विषादी वस्तु वा विषको भाग परेको औषधिहरु दिन बिक्री गर्न हुँदैन । दिए बिक्री गरे बात लाग्छ ।

६ नं. ॥ ॥ बहूलाएका मानिसलाई औषधि निमित्त निको नहुन्ज्यालसम्म ⌘...................... अस्पताल भए सो ठाउँबाट त्यस कुराको औषधि गराउनु पर्छ । उसको वारिसवालाले लगी हिफाजतसँग राख्छौं भने वारिसवालाको जिम्मा गरिदिनु पर्छ ।

७ नं. ॥ ॥ नोकरहरु वा आफ्ना घरमा बास दिइराखेका बिरामी मानिसलाई स्याहार सम्भार गर्ने कुरुवा मानिस नराखी बेहिफाजतसँग त्यसै अलपत्र गरी बाहिर बाटाघाटा पाटी पौवा समेत कहीं लगी फाल्न हुँदैन । सो बमोजिम नगरी बेहिफाजतसँग फाल्नेलाई पाँचसय रुपैयाँसम्म जरिबाना गर्नु पर्छ । प्रहरी 🕮गाउँपालिका वा नगरपालिकाले त्यस्तो विरामीलाई अस्पताल वा औषधालय भएका ठाउँमा अस्पताल वा औषधालयमा र सो नभएका ठाउँमा यथासम्भव विरामी कुरुवा राखी औषधि गराउनु पर्छ ।

८ नं. ॥ ॥ यसै महलको १ नम्बरले औषधि चिरफार गर्ने औषधि मिलाई खुवाउन पाउनेहरुले रोगीको फाइदाको निमित्त सो काम गर्दा होश नपुऱ्याई गफलत बेपर्वाही गरी बेकाइदासँग काम गरेकोबाट रोगी मर्न गएको वा जीउमा जखम हानि पीडा भएको ठहरेमा त्यस्तालाई पाँच सय रुपैयाँसम्म जरिबाना वा दुई वर्षसम्म कैद वा दुवै सजाय हुन्छ ।

९ नं. ॥ ॥ यसै महलको १ नम्बरले औषधि चिरफार गर्न पाउने बाहेक अरुले रोगीको फाइदाका निमित्त औषधि चिरफार गर्दा खोप्दा रोगी मर्न गएमा वा जीउमा हानि भएमा यसै महलको ८ नम्बरले हुने सजायमा थप एक सय रुपैयाँसम्म जरिबाना वा छ महिनासम्म कैद हुन्छ । विरामीको जीउमा हानि केही भएको रहेनछ भने पाँच रुपैयाँसम्म जरिबाना हुन्छ ।

१० नं. ॥ ॥ यसमा औषधि गर्दा मर्न गएमा दगा गरे बाहेक अरुमा तीन महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

⌘ केही नेपाल कानून संशोधन तथा खारेज गर्ने ऐन, २०७२द्वारा झिकिएको ।

🕮 अदालती कारबाही सम्बन्धी केही नेपाल ऐन (संशोधन) ऐन, २०४७ द्वारा संशोधित ।

# महल १३

## आसय करणीको

❒१ नं. ॥ ॥ कसैले कुनै महिलाको मञ्जुरी बिना निजको सम्बेदनशील अङ्ग छोएमा वा छुने प्रयास गरेमा, निजको भित्री पोशाक खोलेमा वा खोल्ने प्रयास गरेमा, निजलाई अस्वभाविक रुपमा कुनै एकान्त ठाउँमा लगेमा, आफ्नो यौन सम्बन्धी अङ्ग निजलाई छुन, समाउन लगाएमा वा निजलाई अश्लिल वा अन्य त्यस्तै प्रकारको शब्द, संकेत प्रयोग गरेमा वा चित्र, तस्वीर देखाएमा, यौनका आशयले जिस्काएमा वा हैरानी दिएमा वा निजसँग यस्तै अन्य कुनै किसिमले ◎अस्वभाविक, अवाञ्छित वा अमर्यादित व्यवहार गरेमा वा निजलाई करणीका आशयले समातेमा यौन दुर्व्यवहार गरेको मानिनेछ र त्यस्तो कसूर गर्ने व्यक्तिलाई एक वर्षसम्म कैद र दश हजार रुपैयाँसम्म जरिबाना हुनेछ । यस्तो कार्यबाट पीडित व्यक्तिलाई कसूरदारबाट मनासिब माफिकको क्षतिपूर्ति समेत भराई दिनु पर्नेछ ।

२ नं. ॥ ॥ ❖... ... ...

३ नं. ॥ ॥ ❖... ... ...

४ नं. ॥ ॥ ❖... ... ...

αप नं. ॥ ॥ आफू वा अरुसँग गैर कानूनी करणी गर्न स्वास्नीमानिसलाई फकाउने र वेश्या गमनको लागि सम्पर्क र व्यवस्था गरी दिनेलाई ◎तीन वर्षसम्म कैद र तीस हजार रुपैयाँसम्म जरिबाना हुन्छ ।

६ नं. ॥ ॥ यस महलमा लेखिएको कुरामा सो कुरा प्रकाश भएका मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

❖ छैठौं संशोधनद्वारा खारेज ।

α छैठौं संशोधनद्वारा संशोधित ।

# महल १४

## जबरजस्ती करणीको

❒१ नं. ॥ ॥ कसैले कुनै महिलालाई निजको मञ्जुरी नलिई करणी गरेमा वा सोह्र वर्षभन्दा कम उमेरकी बालिकालाई निजको मञ्जुरी लिई वा नलिई करणी गरेमा निजले जबरजस्ती करणी गरेको ठहर्छ ।

स्पष्टीकरण : यस नम्बरको प्रयोजनको लागि :

(क) डर, त्रास, धाक देखाई वा करकाप, अनुचित प्रभाव, भुक्यानमा पारी वा जोरजुलुम गरी वा अपहरण गरी वा शरीर बन्धक राखी लिएको मञ्जुरीलाई मञ्जुरी मानिने छैन ।

(ख) होस ठेगानमा नरहेको अवस्थामा लिएको मञ्जुरीलाई मञ्जुरी मानिने छैन ।

(ग) योनीमा लिङ्ग केही मात्र प्रवेश भएको रहेछ भने पनि यस नम्बरको प्रयोजनको लागि करणी गरेको मानिनेछ ।

✎(घ) गुद्द्वार वा मुखमा लिङ्ग पसाएमा वा लिङ्ग बाहेक अन्य कुनै वस्तु योनीमा प्रवेश गराएमा पनि जबरजस्ती करणी गरेको मानिने छ ।

२ नं. ॥ ॥ हाडनाताकी स्वास्नीमानिसको जबरजस्ती करणी गरेमा यस महल बमोजिमको सजायमा हाडनातामा करणी गर्नेको महलमा लेखिएको सजाय समेत थपी सजाय हुन्छ । जन्म कैदको सजाय पाउनेमा भने जबरजस्ती करणी वापतको सजाय थप हुँदैन ।

❒३ नं. ॥ ॥ जबरजस्ती करणी गर्नेलाई देहाय बमोजिम कैद सजाय हुनेछ :-

दश वर्षभन्दा मुनिकी बालिका भए दशदेखि पन्ध्र वर्षसम्म .............................. १

दश वर्ष वा सोभन्दा बढी चौध वर्षभन्दा कम उमेरकी बालिका भए आठदेखि बाह्र वर्षसम्म .............................................................................. २

चौध वर्ष वा सोभन्दा बढी सोह्र वर्षभन्दा कम उमेरकी बालिका भए छ वर्षदेखि दश वर्षसम्म.............................................................................. ३

सोह्र वर्ष वा सोभन्दा बढी बीस वर्षभन्दा कम उमेरकी महिला भए पाँच वर्षदेखि आठ वर्षसम्म .............................................................................. ४

बीस वर्ष वा सोभन्दा बढी उमेरकी महिला भए पाँचदेखि सात वर्षसम्म ............. ५

---

❒ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

◎यस नम्बरमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि लोग्नेले स्वास्नीलाई जबरजस्ती करणी गरेमा तीन वर्षदेखि पाँच वर्षसम्म ................................... ६

⊥३क. नं. ॥ ॥ ◎कसैले गर्भवती, अशक्त, अपाङ्गता भएका वा होस ठेगानमा नरहेका वा आफ्नो संरक्षण वा हेरविचारमा रहेका महिलालाई जबरजस्ती करणी गरेमा वा जुनसुकै उमेरका महिला उपर सामूहिक रुपमा जबरजस्ती करणी गरेमा यस महलमा लेखिएको सजायमा थप पाँच वर्ष कैद गर्नु पर्छ ।

v३ख. नं. ॥ ॥ ३ नम्बर र ३क. नम्बरमा जुनसुकै कुरा लेखिएको भए तापनि आफूलाई मानवरोग प्रतिरोधक क्षमता नष्ट गर्ने जिवाणु (एच.आई.भी. पोजिटिभ) को रोग भएको थाहा पाउँदा पाउँदै कसैले जबरजस्ती करणी गरेको रहेछ भने त्यस्तो कसूरदारलाई ३ नम्बर र ३क. नम्बरमा लेखिएको सजायमा थप एक वर्ष कैद सजाय हुनेछ ।

४ नं. ॥ ॥ जबरजस्ती करणी गर्ने भएको कुरा जानी थाहा पाई हूल गरी सँगलागि जाने समाउने र सो काममा मद्दत दिनेलाई जनही ⌛तीन वर्षसम्म कैद गर्नु पर्छ । ⌛सोह्र वर्ष मुनिकी स्वास्नीमानिसका सम्बन्धमा भने दोब्बर सजाय हुन्छ ।

५ नं. ॥ ॥ जबरजस्ती करणी गर्ने उद्योग गरेको करणी गर्न भने पाएको रहेनछ भने जबरजस्ती करणी गर्नेलाई हुने सजायको आधा सजाय हुन्छ ।

६ नं. ॥ ॥ अह्राई जबरजस्ती करणी गर्न लगाएको भए सो अह्राउनेलाई करणी भैसकेकोमा करणी गर्नेलाई हुने सजायको र करणी हुन नपाएको उद्योगसम्म गरेको भए उद्योग गर्नेलाई हुने सजायको आधा सजाय गर्नु पर्छ ।

⊠७ नं. ॥ ॥ ... ... ...

◎८ नं. ॥ ॥ कसैले आफूलाई जबरजस्ती करणी गर्ने मनसाय लिई बन्धक गरी वा हातपात, छेकथुन, बाँध छाँद आक्रमण इत्यादि जोर जुलुम गर्न लागेकोमा कुनै महिलाले त्यस्तो जुल्मीको पन्जाबाट उम्की भागी आफूलाई करणी गर्नबाट रोक्न नसक्ने विश्वास भएमा वा विश्वास गर्नु पर्ने मनासिव कारण भएमा र तत्काल कसैको संरक्षण वा मद्दत उपलब्ध हुने वा हुन सक्ने अवस्था नभएमा र त्यस्तो जुल्मीलाई आफ्ना अक्कल वर्कतले सक्नेसम्मका उपाय तत्काल केही नगरे आफू माथि करणी हुनेसम्मको ठूलो डर, त्रास परी करणी लिन नपाउँदै वा उसै बखत, आफ्नो जोडबल पुग्न नसक्नेमा करणी लिई सकेपछि पनि सोही कुराको रीस थाम्न नसकी उसै बखत करणी लिएकै थलामा वा लपट्दै गई हतियार लाठो, ढुङ्गा इत्यादि केही चलाई ज्यान मर्न गएको ठहरे बात लाग्दैन ।

९ नं. ॥ ॥ अपुताली खानाका लागि कसैले कुनै स्वास्नीमानिसको जबरजस्ती करणी गरेमा वा गर्न लगाएमा त्यस्तो जबरजस्ती करणी गर्ने वा गर्न लगाउनेले सो स्वास्नी मानिसको अपुताली खान पाउँदैन ।

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

v लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

⊠ एघारौं संशोधनद्वारा खारेज ।

⊥९क.नं. ॥ ॥ कसैले कुनै नाबालकसँग कुनै किसिमको ◎बाल यौन दुराचार (पेडोफाएल) गरे गराएमा जबरजस्ती करणी गरेको मानी यसै महलको ३ नम्बर बमोजिम हुने सजायमा थप एक वर्षसम्म कैद गरी त्यस्तो नाबालकलाई निजको उमेर र उसलाई पुग्न गएको मर्का समेत विचार गरी अदालतले अप्राकृतिक मैथुन गर्नेबाट मनासिब माफिकको क्षतिपूर्ति समेत भराई दिनु पर्छ ।

✎९ख. नं. ॥ ॥ लोग्नेले स्वास्नीलाई जबरजस्ती करणी गरेको विषयमा परेको उजूरीको प्रारम्भिक छानविनबाट स्वास्नीलाई तत्काल वा मुद्दा किनारा नहुँदासम्म संरक्षण दिन आवश्यक देखिएमा अदालतले लोग्नेको नाममा देहायको आदेश जारी गर्न सक्छ ------------------------------------------------------------

स्वास्नीलाई निज बसी आएको घरमा नै बसोबास गर्न दिन, स्वास्नीलाई खान लाउन दिन, कुटपिट नगर्न तथा शिष्ट र सभ्य व्यवहार गर्न लगाउन ----------------१

स्वास्नीलाई आवश्यक उपचार गराउन वा उपचारका लागि उपयुक्त रकम दिन लगाउन ----------------------------------------------------------२

दुवैलाई एकै ठाउँमा बसोबास गर्न उपयुक्त हुने नदेखिएमा लोग्नेलाई अलग बस्ने व्यवस्था गर्न तथा त्यसरी अलग बस्दा स्वास्नीको भरणपोषणको लागि आवश्यक व्यवस्था गर्न लगाउन ---------------------------------------------------३

स्वास्नीलाई कुनै प्रकारले दु:ख दिने वा सताउने कार्य नगर्न र स्वास्नीको हित र सुरक्षाको निमित्त अन्य आवश्यक र उपयुक्त कुरा गर्न गराउन ----------------४

❐१० नं. ॥ ॥ कसैले कुनै महिलालाई जबरजस्ती करणी गरेको ठहरेमा अदालतले त्यस्ती महिलालाई भएको शारीरिक वा मानसिक क्षति विचार गरी मनासिब ठहराए बमोजिमको क्षतिपूर्ति कसूरदारबाट भराई दिनु पर्नेछ । त्यस्तो क्षतिपूर्ति निर्धारण गर्दा कसूरको गाम्भीर्यता, कसूरबाट पीडित व्यक्तिको मृत्यु भइसकेको रहेछ भने निजमा आश्रित नाबालक छोराछोरी भए निजहरुलाई पर्न गएको पीडा समेत विचार गरी निर्धारण गर्नु पर्नेछ ।

⊥१०क. नं. ॥ ॥ यस महल अन्तर्गतको कुनै अपराधको अनुसन्धान र तहकिकातको सिलसिलामा पीडित स्वास्नी मानिसको बयान गराउँदा महिला प्रहरी कर्मचारीले गराउनु पर्नेछ र महिला प्रहरी कर्मचारी नभएमा समाजसेवी महिलाको रोहवरमा अन्य प्रहरी कर्मचारीले गराउन सक्नेछ । ✎त्यसरी बयान गराउँदा पीडितको

---

⊥ एघारौं संशोधनद्वारा थप ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित ।

⊥ एघारौं संशोधनद्वारा थप ।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

सहजता र मर्यादालाई ध्यानमा राखी पीडित मैत्री वातावरणमा सकभर एकैपटक बयान गराउनु पर्छ ।

⊥१०ख. नं. ॥ ॥ यस महल अन्तर्गत कुनै मुद्दाको कारबाही चल्दा सम्बन्धित कानून व्यवसायी, अभियुक्त, पीडित स्वास्नीमानिस र निजको संरक्षक तथा मुद्दा हेर्ने अधिकारीले अनुमति दिएका प्रहरी र अदालतका कर्मचारी मात्र इजलासमा उपस्थित हुन सक्नेछन् ।

∨१०ग. नं. ॥ ॥ यस महल अन्तर्गतको मुद्दाको फैसला गर्दा जबरजस्ती करणी ठहर गरेकोमा सोही फैसलामा यस महल बमोजिम कसूरदारबाट भराई दिनु पर्ने क्षतिपूर्ति समेत उल्लेख गरी सम्बन्धित महिलालाई भराई दिनु पर्नेछ । क्षतिपूर्ति भराउने प्रयोजनको लागि यस महल अन्तर्गतको मुद्दा दायर भएलगत्तै अदालतले आरोपित व्यक्तिको अंश लगायतका अन्य सम्पत्ति रोक्का राख्नु पर्नेछ । ✍कसूरदारको कुनै सम्पत्ति नभई जबरजस्ती करणीको कसूरबाट पीडितले क्षतिपूर्ति नपाउने देखिएमा अदालतले सम्बन्धित महिला तथा बालबालिका कार्यालयबाट क्षतिपूर्ति स्वरुप उचित रकम पीडितलाई भराईदिने गरी आदेश गर्न सक्नेछ । त्यसरी आदेश भएमा सो कार्यालयबाट क्षतिपूर्ति वापतको रकम तत्काल पीडितलाई उपलब्ध गराउनु पर्नेछ ।

११ नं. ॥ ॥ जबरजस्ती करणीको कुरामा सो भए गरेको मितिले ◎छ महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

# महल १५

## हाडनातामा करणी गर्नेको

१ नं. ॥ ॥ आफूलाई जन्माउने आमाको करणी गर्नेलाई जन्मकैद हुन्छ । आफ्ना ◎एकै बाबु वा आमाबाट जन्मेका दिदी बहिनी वा आफूले जन्माएका छोरीको करणी गर्नेलाई दशवर्ष कैद हुन्छ । ✐... ... ...

◎२ नं. ॥ ॥ देहायका नाता बिच करणी लिने दिनेलाई देहाय बमोजिम सजाय हुन्छ ----------------------------------------------------------

सौतेनी आमा-छोरा, एकै हाँगाको ससुरा-बुहारी, बाजे-नातिनी वा पनातिनी, जेठाजु-भाइ बुहारी वा देवर-भाउजू बिच करणी लिने दिनेलाई चार वर्षदेखि छ वर्षसम्म कैद हुन्छ ......................................................................................१

एकै हाँगाको तीन पुस्तासम्मको बज्यू- नाति वा पनाति, बाजे-नातिनि बुहारी, एकै हाँगाको ठूलो बाबु वा काका-भतिजी, एकै हाँगाको भतिजो-ठूली आमा वा काकी, एकै हाँगाको ससुरो-भतिजी बुहारी, फुपू-भदा, मामा-भाञ्जी वा माइजू-भानिज, आमा तर्फका

---

∨ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

✐ एघारौं संशोधनद्वारा झिकिएको ।

ठूली आमा वा सानी आमा-भतिजो र आफ्नी पत्नी तर्फको सासू-ज्वाँइ बिच करणी लिने दिनेलाई तीन वर्षदेखि छ वर्षसम्म कैद हुन्छ ....................................२

माथि दफा १ र २ मा लेखिएदेखि बाहेक सात पुस्ताभित्रका अन्य नाताका बिच करणी लिनेदिनेलाई हाँगो, नाता र पुस्ता समेत विचार गरी एक वर्षदेखि तीन वर्षसम्म कैद हुन्छ ..........................................................................३

माथि दफा १,२ र ३ मा लेखिएदेखि बाहेक अन्य नाताका बिच करणी लिने दिनेलाई नाता विचार गरी तीन महिनादेखि एक वर्षसम्म कैद हुन्छ ............................४

[✂]३ नं. ॥ ॥

[✂]४ नं. ॥ ॥

[✂]५ नं. ॥ ॥

[✂]६ नं. ॥ ॥

---

[✂] लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

⊠७ नं. ॥ ॥ … … …

⊠८ नं. ॥ ॥ … … …

✂९ नं. ॥ ॥

✂१० नं. ॥ ॥

➲१०क.नं. ॥ ॥ यस महलका अन्य नम्बरहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि आफ्ना जात वा कूलमा चली आएको चलन अनुसार विवाह वा करणी गर्न हुने नाता सम्बन्धमा विवाह वा करणी भएकोमा यो महल बमोजिम सजाय हुने छैन ।

११ नं. ॥ ॥ यस महलका अन्य नम्बरहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि कसैले यस महल बमोजिम सजाय हुने नाताका कुनै सधवा स्वास्नीको करणी गरेको रहेछ र साधुले जारीको महल बमोजिम कैदको सजाय समेत गराउन चाहन्छ भने यस महल बमोजिम हुने सजायमा सो कैदको सजाय समेत थपी कैद गरिदिनु पर्छ तर सो बमोजिम थपी कैद गर्दा छ वर्षभन्दा बढी कैद हुन जाने रहेछ भने एक वर्ष मात्र थप कैद गर्नु पर्छ ।

१२ नं. ॥ ॥ यस महलमा लेखिएका कसूर सम्बन्धी कुरामा कसूर गर्नेको ज्यूसम्म नालिस नपरे लाग्न सक्तैन ।

---

⊠ एघारौं संशोधनद्वारा खारेज ।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

➲ पहिलो संशोधनद्वारा थप ।

# महल १६

## पशु करणीको

१ नं. ॥ ॥ कसैले स्त्री जाति चौपायाको करणी गर्न वा कुनै चौपायासित करणी गराउन वा अरु कुनै अप्राकृतिक मैथुन गर्न गराउन हुँदैन ।

⁑२ नं. ॥ ॥ कसैले स्त्रीजाति चौपायामध्ये गाईको करणी गरेमा निजलाई दुई वर्षसम्म कैद र गाई बाहेक अरु चौपायाको करणी गरेमा एक वर्षसम्म कैद वा पाँच सय रुपैयाँसम्म जरिबाना हुन्छ ।

३ नं. ॥ ॥ कुनै स्वास्नीमानिसले चौपायाबाट करणी गराएमा निजलाई एक वर्षसम्म कैद वा पाँचसय रुपैयाँसम्म जरिबाना हुन्छ ।

४ नं. ॥ ॥ यस महलका अरु नम्बरहरुमा लेखिएदेखि बाहेक अरु कुनै किसिमको अप्राकृतिक मैथुन गर्ने गराउनेलाई ⁑एक वर्षसम्म कैद वा पाँचहजार रुपैयाँसम्म जरिबाना हुन्छ ।

५ नं. ॥ ॥ यस महलमा लेखिएको कुरामा सो भए गरेका मितिले एक वर्षभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

⁑ एघारौं संशोधनद्वारा संशोधित ।

# महल १७

## विहावरीको

१ नं. ॥ ॥ हाडनाता करणीको महलले सजाय हुने नातामा बाहेक यस महलका नम्बर नम्बरमा लेखिएका कुराका अधीनमा रही आफ्नो इच्छानुसार राजीखुशीले विहावरी गर्न हुन्छ । विहावरी भएकोमा हाडनातामा पर्न गएको रहेछ भने ती लोग्ने स्वास्नीलाई छुट्याई दिनु पर्छ । जानी जानी त्यस्तो विहावरी गरेकोमा हाडनाता करणीको महलमा लेखिए बमोजिम सजाय समेत हुन्छ ।

⌛२ नं. ॥ ॥ विहावरी गर्दा महिला र पुरुषको उमेर ⌘................ बीस वर्ष नपुगी विहावरी गर्न गराउन हुँदैन । विवाह गरे गराएमा सो गर्ने गराउनेमध्ये उमेर पुगेका मुख्यलाई देहाय बमोजिम हुन्छ ................................................

दश वर्ष नपुगेकी बालिकाको विवाह गरे गराएको रहेछ भने छ महिनादेखि तीन वर्षसम्म कैद र एक हजार रुपैयाँदेखि दश हजार रुपैयाँसम्म जरिबाना हुनेछ ......... १

दश वर्षदेखि माथि चौध वर्ष नपुगेकी बालिकाको विवाह गरे गराएको रहेछ भने तीन महिनादेखि एक वर्षसम्म कैद र पाँच हजार रुपैयाँसम्म जरिबाना हुनेछ ...............२

चौध वर्षदेखि माथि अठार वर्ष नपुगेकी स्वास्नी मानिसको विवाह गरे गराएको रहेछ भने छ महिनासम्म कैद वा दश हजार रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुनेछ ... ३

बीस वर्ष उमेर नपुगेको स्वास्नी मानिस वा लोग्ने मानिसको विवाह गरे गराएको रहेछ भने छ महिनासम्म कैद वा दश हजार रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुनेछ ... ४

ऐनले विवाह गर्न पाउने हदभित्रको हो भनी ढाँटी विवाह गरे गरिदिएको नजानी विवाह गर्ने गराउनेलाई सजाय हुँदैन ............................................................... ५

माथि दफा दफामा लेखिए बमोजिम विवाह गर्न गराउन नहुनेमा जानी जानी विवाहको काम गर्ने पुरोहित, लमी र अरु मद्दतीहरुमध्ये उमेर पुगेकोलाई एक महिनासम्म कैद वा एक हजार रुपैयाँसम्म जरिबाना हुनेछ .................................................... ६

यस नम्बरको माथिका दफाहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि विवाह भने भई नसकेको रीत दस्तुर पुऱ्याई छिनीसम्म सकेको रहेछ भने सो कुरा छिन्ने मुख्यलाई पाँच सय रुपैयाँसम्म जरिबाना गरी छिनी सकेको कुरा बदर गरिदिनु पर्छ ................. ७

माथि १, २, ३ र ४ दफा बमोजिम भएको जरिबाना तिरे लिई सो जरिबाना त्यसै बालिका, स्वास्नीमानिस वा लोग्नेमानिसलाई दिनु पर्छ । नतिरेमा सो जरिबाना हुने व्यक्तिको मात्र अंश जायजात गरी उपर भएकाबाट सो लागेको जरिबानाको अङ्क जति सो बालिका, स्वास्नीमानिस वा लोग्नेमानिसलाई दिनु पर्छ । जायजातबाट सो जरिबाना उपर हुन नसके उपर नभएको जरिबानाको रुपैयाँ जतिमा तीन महिनासम्म कैद गर्नु पर्छ ........................................................................... ८

---

⌛ एघारौं संशोधनद्वारा संशोधित ।

⌘ केही नेपाल कानून संशोधन तथा खारेज गर्ने ऐन, २०७२द्वारा झिकिएको ।

लोग्नेमानिस वा स्वास्नीमानिसमध्ये कसैको उमेर ▪बीस वर्ष नपुगी विवाह भएको रहेछ र सन्तान पनि जन्मेको रहेनछन् भने ▪बीस वर्ष उमेर नपुगी विवाह भएकोले ▪बीस वर्ष पुगेपछि मञ्जुरी नगरे त्यस्तो विवाह बदर गर्न पाउँछ ............................ ९

३ नं. ॥ ॥ विवाह निमित्त आफ्ना कुलको रीत दस्तुर दिए लिए पछि पनि विवाह गर्न नचाहे कर लाग्दैन ।

◎४ नं. ॥ ॥ कसैले पनि देहायको अवस्थाको पुरुष वा महिलालाई झुक्याई विवाह गर्न वा गराउन हुँदैन । झुक्याई गरेको विवाह सो विवाह गर्ने कुनै व्यक्तिले मञ्जुर नगरेमा बदर गराउन सक्छ । झुक्याई विवाह गरे वा गराएमा दुई वर्षसम्म कैद र एकलाख रुपैयाँसम्म जरिवाना हुन्छ । त्यस्तो जरिवानाको रकम क्षतिपूर्ति स्वरुप झुक्यानमा पर्नेलाई भराई दिनु पर्छ --------------------------

शरीरमा मानव रोग प्रतिरोधक क्षमता नष्ट गर्ने जिवाणु (एच.आई भी) वा हेपाटाइटिस बी रहेको वा यस्तै प्रकृतिका निको नहुने कडा रोग लागेको ------------------१

यौनाङ्ग नभएको, पुरुषत्वहीन भएको वा सन्तान उत्पादन गर्ने क्षमता नभएको प्रमाणित भैसकेको ------------------------------------------------------------२

पूर्णरुपमा बोल्न वा सुन्न नसक्ने वा पूर्ण रुपमा दृष्टिविहीन भएको ------------३

होस ठेगानमा नरहेको ----------------------------------------------४

विवाह भैसकेको ------------------------------------------------------५

गर्भवती भैसकेको ----------------------------------------------------६

नैतिक पतन देखिने फौजदारी अभियोगमा कसूरदार ठहरी अदालतबाट सजाय पाएको ---------------------------------------------------------------७

✂५ नं. ॥ ॥ ...............

⊠६ नं. ॥ ॥ .............

✂७ नं. ॥ ॥ .............

✂८ नं. ॥ ॥ ...................

◎ ९ नं. ॥ ॥ यो नम्बर प्रारम्भ भएपछि एकासगोलमा बस्न नसक्ने कारणबाट लोग्ने र स्वास्नी बिच अंशबण्डा भई भिन्न बसेमा बाहेक कुनै लोग्ने

---

▪ केही नेपाल कानून संशोधन तथा खारेज गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

⊠ एघारौं संशोधनद्वारा खारेज ।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज ।

मानिसले आफ्नी स्वास्नी जीवित छँदै वा कानून बमोजिम लोग्ने स्वास्नीको सम्बन्ध विच्छेद नहुँदै अर्की महिलासँग विवाह गर्न वा अर्को पत्नी राख्न हुँदैन ।

[v]९क नं. ॥ ॥ .....................

[α]१० नं. ॥ ॥ कसैले यो महलको ९ [◗]................ नम्बरमा लेखिएको कुराको विपरीत अर्को विवाह गरेमा वा स्वास्नी राखेमा निजलाई [⌛]एक वर्षदेखि तीन वर्षसम्म कैद र पाँच हजार रुपैयाँदेखि पच्चीस हजार रुपैयाँसम्म जरिबाना समेत हुनेछ । स्वास्नीमानिसले जानी जानी त्यस्तो विवाह गरेमा वा स्वास्नी भै बसेमा निजलाई पनि सोही बमोजिम सजाय हुनेछ ।

[✍]१०क. नं. ॥ ॥ कसैले अर्काकी स्वास्नीलाई विवाह गरी निजको धनमाल समेत लगेकोमा वा कुनै महिलाले अर्को विवाह गरी जाँदा आफूले लगाएको वा प्रयोग गर्ने लत्ताकपडा वा आफ्नो दाइजो, पेवा वा निजी आर्जन बाहेक पहिलो लोग्नेको धनमालसमेत लगेमा त्यसरी लग्न नपाउने धनमालको हकमा निजको पहिलो लोग्ने र निज मरेमा वा विदेश गएकोमा निजको हकदारले फिर्ता लिन पाउँछ ।

[α]११ नं. ॥ ॥ [◎]यस महलमा लेखिएको कुरामा सो कुरा थाहा पाएको मितिले तीन महिनाभित्र नालिस नदिए लाग्न सक्तैन ।

---

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित ।

v लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

α छैठौं संशोधनद्वारा संशोधित ।

◗ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा झिकिएको ।

✍ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप ।

# महल १९

## अदलको

⊠१ नं. ॥ ॥ अरुको धर्ममा खलल पर्ने गरी कसैले पनि कुनै धर्म प्रचार गर्न वा कसैले कसैको धर्म परिवर्तन गराउन हुँदैन । सो कुराको उद्योगसम्म गरेको भएमा तीन वर्षसम्म कैद र धर्म परिवर्तन गराई सकेकोमा छ वर्षसम्म कैद गरी विदेशी नागरिक भए त्यस्तो सजाय भोगी सकेपछि निजलाई नेपाल बाहिर निकाला समेत गरिदिनु पर्छ ।

/१क नं. ॥ ॥ कसैले कुनै धार्मिक स्थल वा धार्मिक कार्यमा खलल पार्ने कुनै काम गरेमा तीन वर्षसम्म कैद वा तीन हजार रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्नेछ ।

२ नं. ॥ ॥ विदेशी नागरिक, विदेशी संगठित संस्था वा विदेशी राष्ट्रलाई नेपाल सरकारको पूर्व स्वीकृति बेगर कुनै अचल सम्पत्ति बिक्री वा दान बकस गरी वा अरु कुनै प्रकारले हक छाडी वा बन्धक दिन हुँदैन । दिए लिएको भए सो सम्पत्ति जफत भै नेपाल सरकारको हुन्छ । साहूको थैली परेको भए सो थैली कपाली सरह हुन्छ ।

३ नं. ॥ ॥ नेपालभित्रको कुनै अचल सम्पत्तिमा कुनै विदेशी नागरिकलाई अपुताली पऱ्यो वा अंश प्राप्त भयो भने कानून बमोजिम नेपालको नागरिकता प्राप्त गरी नेपालमा आई बसेकोमा बाहेक सो सम्पत्ति निजको नाममा दर्ता गर्न वा सो सम्पत्तिको आयस्ता खान पाउँदैन । कुनै नेपाली नागरिकहरुलाई सो सम्पत्ति बिक्री गरी वा अरु कुनै व्यहोराले हक छोडी दिन पाउँछ । सो बमोजिम नगरी दिए लिएको बदर भै सम्पत्तिमा नेपाल सरकारको अधिकार हुनेछ ।

४ नं. ॥ ॥ सरकारी कर्मचारीले आफू बहाल रहेको अड्डामा परी रहेको वा पर्न आएको अचल सम्पत्ति सम्बन्धी मुद्दामा आफूले कारबाही गरी छिनेको जति मध्ये कुनै पनि आफू सोही अड्डामा वा सोही जिल्लाको अरु कुनै अड्डामा बहाल छउन्जेल र आफू अन्त अरु जिल्लामा सरुवा भई वा वर्खास्त भई सो अड्डा वा जिल्ला वा सरकारी सेवाबाट बहाल टुटेको दुई वर्षसम्म आफ्नो वा आफ्ना परिवारको कुनै व्यक्तिका नाममा नेपाल सरकारको पूर्व स्वीकृति बेगर कुनै व्यहोरासँग लिन हुँदैन । लिएको भएपनि बदर हुन्छ । हक छुटाई लिएको रहेछ भने निजको थैली परेको भए सो थैली भूस गराई सो लिएको अचल सम्पत्ति निजबाट जफत गरी जग्गा भए कानूनको रीत पुऱ्याई पजनी गरिदिनु पर्छ । हक नछुटाई धितो बन्धकसम्म लेखाई लिएकोमा निजको परेको थैली नेपाल सरकारको हुन्छ असामीले सो थैली बुझाउँदा नेपाल सरकारलाई बुझाउनु पर्छ । अड्डाबाट सूचना पाएको मितिले छ महिनाभित्रमा फिर्ता थैली दिई निखनी लिन असामीले सकेन वा मञ्जुर गरेन भने सोही जग्गा लिलाम बिक्री गरी आएको रुपैयाँमा थैलीसम्म जफत गरी बढी भए बढी जति सो सम्पत्तिको धनीलाई फिर्ता गराई लिलाममा कबुल गर्नेका नाममा सो सम्पत्तिको बहाली गरिदिनु पर्छ ।

❐५ नं. ॥ ॥ कैद वा थुनामा रहेकी कुनै महिलालाई सरकारी कर्मचारीले करणी गरेमा वा करणी गर्न अरु कसैलाई संयोग पारी, मिलाई दिई करणी गराएमा वा

---

⊠ केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा संशोधित ।

/ केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा थप ।

चिकित्सा सेवा उपलब्ध गराउने चिकित्सक वा स्वास्थ्यकर्मीले त्यस्तो सेवा प्राप्त गर्न आएकी कुनै महिलालाई सो सेवा उपलब्ध गराउँदा वा गराउने स्थानमा करणी गरेमा वा आफूले संरक्षण दिएकी वा आफ्नो हेरविचारमा रहेकी कुनै महिलालाई त्यसरी संरक्षण दिने वा हेरविचार गर्ने व्यक्तिले करणी गरेमा वा होस ठेगानमा नरहेकी वा शारीरिक वा मानसिक रोग लागी उपचार वा पुनर्स्थापना गर्न राखिएकी कुनै महिलालाई त्यस्तो उपचार वा पुनर्स्थापना गर्ने संस्थाका पदाधिकारी वा कर्मचारीले करणी गरेमा ◎तीन वर्षदेखि पाँच वर्षसम्म कैद हुनेछ। त्यस्तो कार्य गर्दा यस ऐन वा अन्य कानून अनुसार पनि सजाय हुने रहेछ भने सो सजाय समेत थप हुनेछ।

६ नं. ॥ ॥ कुनै भेषधारीले हकवालाले राजी खुशी गरी दिए भने पनि वा उसैलाई राजी गराएको भएपनि अठार वर्ष नपुगेका मानिसलाई मुड्न हुँदैन। अठार वर्ष नाघेकालाई करकाप गरी मुडी दियो भने मुडिएका पैंतीस दिनभित्र उजूर दिए सुन्नुपर्छ। नदिएमा खुशीराजी ठहर्छ। अठार वर्ष मुनिकालाई मुडेको कुरामा तीन वर्षभित्र नालिस नदिए लाग्न सक्दैन।

७ नं. ॥ ॥ यसै महलको ६ नम्बरको कसूर गर्नेलाई एक वर्षसम्म कैद हुन्छ।

✞८ नं. ॥ ॥ ........................

✂९ नं. ॥ ॥

१० नं. ॥ ॥ कसैले अर्काको सामाजिक रीति स्थितिमा खलल पर्ने वा हुने गरी झुक्याई वा जबरजस्ती गरी कुनै काम कुरा गर्न गराउन हुँदैन। कसैले गरे वा गराएमा निजलाई बढीमा एक वर्षसम्म कैद वा एक हजार रुपैयाँसम्म जरिबाना हुन्छ।

🗐१०क. ...................

⊗१०ख. नं॥ ॥ .................

✎१०ग. नं. ॥ ॥ कसैले लैङ्गिक, आर्थिक, सामाजिक, सँस्कृतिक, प्रथा-परम्परा, वैवाहिक स्थिति वा जबरजस्ती करणीबाट पीडित भएको, कुनै रोग लागेको वा यस्तै अन्य कुनै आधारमा कसैलाई भेदभाव गरेमा छ महिनासम्म कैद वा पचास हजार रुपैयाँसम्म जरिवाना वा दुवै सजाय हुनेछ।

---

❐ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधित।

◎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधित।

✞ केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा खारेज।

✂ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा खारेज।

🗐 जातिय भेदभाव तथा छुवाछुत (कसूर र सजाय) ऐन, २०६८ द्वारा खारेज।

⊗ बोक्सीको आरोप (कसूर र सजाय) ऐन, २०७२ द्वारा खारेज।

✎ लैङ्गिक समानता कायम गर्न तथा लैङ्गिक हिंसा अन्त्य गर्न केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०७२ द्वारा थप।

११ नं. ॥ ॥ यस महलमा सजाय लेखिएको कुरामा सोही बमोजिम र अरुमा बीस रुपैयाँसम्म जरिबाना हुन्छ ।

१२ नं. ॥ ॥ यस महलको १।२।३ नम्बरमा लेखिएको कुरामा जहिलेसुकै पनि र अरुमा हदम्याद लेखिएको कुरामा सोही बमोजिम र नलेखिएको कुरामा भए गरेको मितिले पैंतीस दिनभित्र नालिस नदिए लाग्न सक्तैन ।

# भाग ५

## खारेजीको

१ नं. ॥ ॥ यो मुलुकी ऐन प्रारम्भ हुनुभन्दा अघिको मुलुकी ऐन खारेज गरिएकोछ ।

२ नं. ॥ ॥ संवत् २००७ साल फागुन ७ गते अघि बनी यो मुलुकी ऐन प्रारम्भ हुँदाका बखत रहेका सवाल सनदहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि यो मुलुकी ऐनमा लेखिएको कुरामा यसै बमोजिम गर्नु पर्छ ।

---

द्रष्टव्य : (१) केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा रुपान्तर भएको शब्दहरु :-
"श्री ५ को सरकार" को सट्टा "नेपाल सरकार" ।

(२) गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा रुपान्तर भएको शब्दहरु :-
"भष्ट्राचार निवारण ऐन, २०१७" को सट्टा "भष्ट्राचार निवारण ऐन, २०५९" ।

(३) न्याय प्रशासन ऐन, २०७३ द्वारा रुपान्तर भएका शब्दहरु :-
"पुनरावेदन अदालत" को सट्टा "उच्च अदालत" ।

(४) केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०७२ द्वारा संशोधन भएका देहायका शब्दहरु मिति २०७४।२।८ गते देखि प्रारम्भ भएको :- (ने.रा.प. २०७४।२।८)
"स्थानीय निकाय" भन्ने शब्दहरुको सट्टा "स्थानीय तह" र "गाउँ विकास समिति" भन्ने शब्दहरुको सट्टा "गाउँपालिका" ।